


# फयङ साँबा

## वंशावली

२०८१

डा. नवराज सुब्बा

# प्रतिलिपि अधिकार



पुस्तकको नामः फयङ साँबा वंशावली २०८१

विधाः अनुसन्धान

लेखकको नाम, थरः डा. नवराज सुब्बा

लेखकको पूरा थर, गोत्रः फयङ-साँबा-लिम्बू-राई-सेन-किरात, काशी गोत्र

प्रकाशकः हाम्रो आइडिया (प्रा.लि.), विराटनगर ५, नेपाल

प्रकाशित सालः वि.स. २०८१ (सन् २०२४)

मूल्यः रू २००/–

**ISBN: 9789937171687**

‘Phyang Samba Bamsawali’ 2081 by Dr. Nawa Raj Subba.

**Citation:**

Subba, N.R. 2024. *Phyang Samba Bamsawali.* Biratnagar, Nepal, Hamro Idea.

**श्वीकारोक्तिः**

यस पुस्तकमा समावेश परिवार-वृक्ष सम्बन्धित क्षेत्रका जानकार संकलक वा सम्पर्क व्यक्तिहरूले लेखक र संयोजकलाई दिएको जानकारीमा आधारित छ। यसभित्र दिइएको वंशावलीसम्बन्धी वृहद् वंशवृक्ष सगोत्री किरात लिम्बूका वंशावली, ऐतिहासिक प्रमाण र घटनाक्रम, तुङ्दुङ्गे मुन्धुम तथा फयङ साँबा मुन्धुमका धरातलमा उभिएको छ। अनुसन्धानकर्ता र विद्वानहरूका सान्दर्भिक मुन्धुमी/पौराणिक तथा ऐतिहासिक तथ्यहरू समातेर फयङ साँबा सम्बन्धि ब्याख्या र पुनःब्याख्या (डिकोड) भएका छन्। लेखकका अवलोकन र निष्कर्ष यावत् बहुआयामिक सन्दर्भहरू र स्रोतहरूद्वारा निर्देशित छन्।

**सूचनाः**

# हार्दिक समर्पण



<u>स्वर्गीय टेक बहादुर फयङ साँबा</u>

जन्म: वि.स.२००२/११/७ ताप्लेजुङ हाङपाङ ४ नेपाल

मृत्यु: वि.स. २०७७/८/८ हङकङ (बसोबास- बेलायत)

जसले आफूमा भएको ज्ञान हामीलाई छाडेर गए अनि वंशावली लेख्न लेखकलाई घच्घच्याए। फयङ साँबा वंशावली पुस्तकका रुपमा हेर्ने सबैभन्दा बढी धोको यदि कसैमा थियो भने त्यो उनैमा थियो। उनको त्यो चाहना पूरा नहुँदै उनी परलोकका भए। हामीलाई छाडेर गए तापनि उनी सँधै हाम्रो मनमाझ रहनेछन्। उनको जुन अतृप्त चाहना पूरा गर्न र उनले हामीलाई लगाएको गुन तिर्न प्रस्तुत फयङ साँबा वंशावली २०८१ उनैलाई समर्पण गर्दछु। जहाँ रहे पनि उनलाई चीर शान्ति मिलोस् भनी प्रार्थना गर्दछु।

डा. नवराज सुब्बा

लेखक तथा शोधकर्ता

# प्राक्कथन र रचनागर्भ

वंशावली भनेको विभिन्न क्षेत्रमा रहेका परिवारका सदस्यहरूका नामावलीको संग्रह वा पुस्ताक्रमको पुलिन्दा मात्र होइन। वंशावली एक मानवशास्त्रीय औजार भएकाले यो जातीय इतिहास तथा ज्ञानको भरपर्दो स्रोत पनि हो। यसले कतिपय अहम् सवालहरूलाई चिरेर तथ्यपरक ढंगले ब्याख्या र पुनःब्याख्या (डिकोड) गरिदिने काम पर्दछ। वंशावलीले परिवारका सदस्यबीच जोड्ने काम मात्र गर्दैन यसले देभभित्र र बाहिर बसेका कुनै पनि जातीय इतिहास र पहिचानलाई देशको इतिहाससित जोड्ने काम पनि गर्दछ। त्यसैले वंशावलीमा देशको इतिहास र पहिचान पाइन्छ। यस्ता ज्ञानद्वारा नै इतिहास निर्माण भएर देश बन्दछन्।

प्रस्तुत वंशावलीको परिकल्पना र पुस्तकाकार कृतिको सिर्जना कहिले कसरी भयो? यसमा क-कसले के के योगदान गरे? के कति श्रम, समय, साधनको उपयोग यसमा भयो? अर्थात् फयङ साँबा वंशावली २०८१ लेखन तथा प्रकाशन कसरी भयो भन्ने मोटामोटी जानकारी यहाँ दिँदैछु। वंशावलीलाई अद्यावधिक गर्ने काम कसरी भइराखेको छ त्यो पनि बताइने छ। वंशावली लेखन तथा प्रकाशन कार्यमा लेखकले भोगेका केही तीतामीठा अनुभव पनि राख्दैछु।

**फयङ साँबा वंशावली २०८१ कुन संस्करण हो?**

औँला भाँचेर भन्नुपर्दा फयङ साँबा वंशावलीसम्बन्धी यो चौथो प्रकाशन हो। २०५६ सालमा पहिलो वंशावलीको रूपरेखा ‘फयङ साँबा वंशावली २०५६’ प्रकाशित भएको थियो। त्यसैका आधारमा अध्ययन पश्चात २०७७ सालमा वृहद वंशावली ‘किरात लिम्बू संस्कृति-मानवशास्त्रीय विवेचना’ मा प्रकाशित भयो। सोही अध्ययनका आधारमा

वंशावली केन्द्रित 'फयङ साँबा वंशावली २०८०' ई-बुक संस्करणमा प्रकाशित भइसकेको छ। उक्त वंशावलीलाई अध्यावधिक गरेर यो वंशावली छापाखानामा छापिएर पुस्तकका रूपमा आएको छ। त्यसकारण यो वंशावली स्वरूपका हिसाबले चौथो संस्करण हो।

**फयङ साँबा वंशावली २०८१ किन?**

२०८१ साल जेठ २६ मा धरानमा फयङ साँबा समाजले 'किरात लिम्बू संस्कृतिः मानवशास्त्रीय विवेचना' ग्रन्थलाई स्वागत गऱ्यो। अब वंशावली केन्द्रित 'फयङ साँबा वंशावली' प्रकाशित गर्ने भेलाले निर्णय भयो। बैठकमा फयङ साँबा वंशावलीलाई किरात लिम्बूका सगोत्रीय वंशावलीसित तुलनीय बनाउने माग उठ्यो। लेखकले वंशावलीसम्बन्धी धारणा राखेपछि बैठक एक निष्कर्षमा पुग्यो। सेन वंशबाट उद्विकसित साँबा तथा अन्य थरका किरात लिम्बू वंशावलीसित फयङ साँबाको वंशावलीलाई तुलनीय बनाउने सुझाव बैठकमा प्राप्त भयो। अतः फयङ साँबा परिवारको सेन वंशदेखि हालसम्मको वंशावली तयार गर्ने जनचाहना ब्यक्त भयो। साथै, वंशावलीको लेखनकार्य र पुस्तक छपाइको जिम्मेवारी डा. नवराज सुब्बालाई बैठकमा दिइयो।

सोही पृष्ठभूमिमा यो फयङ साँबा वंशावली तयार भएको छ। यद्यपि, यो कार्य लेखकको एक्लो प्रयासले मात्र संभव भएको होइन। स्मरण रहोस्, यो वंशावली तयार गर्नमा चार पुस्ताको योगदान रहेको छ। करिव सात दशकसम्मको लामो कालखण्डले फयङ साँबा वंशावली परीक्षण गरिसकेको छ। यति लामो अवधिमा अर्जित ज्ञान हामी सबैको साझा सम्पत्ति हो। यसलाई संरक्षण र संबर्द्धन गर्नु हामी सबैको दायित्व पनि हो।

**मेवाखोलामा किपटले खोतल्यो फयङ साँबा वंशावली**

वंशावलीअनुसार किरात-सेन-राई-लिम्बू वंशावलीअनुसार फयङ साँबाका एक हाँगा वि.स. १८०० तिर मेवाखोलाबाट छुट्टिए। उनीहरू

आठराई हाङपाङ चुँवाखोलामा खुर्पेठ्याक गरी बसे। (Phyang TB, 2019) उक्त हाँगाका परिवारको वंशावली लेखनको श्रीगणेश आठराई हाङपाङ निवासी ऐतराज फयङ (लेखकका पिता पुस्ताक्रम २९) र सेरबहादुर फयङ (चारक्याम्बा/ पुस्ताक्रम २८) बाट संयोगवस भएको थियो। उनीहरू आफ्ना जिजुबाजेले चर्चेको जग्गाको किपट अधिकार खोजी गरी लिन चाहन्थे। सोही क्रममा उनीहरूले वि.स. २०१६ सालमा मेवाखोला ताप्लेजुङ गएर फयङ साँबा दाजुभाइलाई भेटे। (Phyang AR, 2056)

मेवाखोलामा त्यहाँका दाजुभाइसित बसेर उनीहरूले छलफल गरे। सम्बन्धित पञ्चभलाद्मी अग्रजजन बसेर पुराना कागजपत्र र वंशावलीको गहन अध्ययन गरियो। सोही क्रममा हाङपाङबाट मेवाखोलामा प्रतिनिधिका रूपमा गएका ऐतराज र सेरबहादुरले तुम्याङ त्या (पुस्ताक्रम २२) बाट चनुवा (पुस्ताक्रम २३), चनुवाबाट पंचकन्दा (पुस्ताक्रम २४) उद्विकास भएको तथ्य पत्ता लाग्यो। पुराना लिखत समेतका आधारमा उनीहरूले त्यसबेला फयङ साँबाका दुई सन्तान तुम्याङ त्या र तुम्याङ हिरी भएको पत्ता लगाए। जसलाई वंशावलीभित्र पुस्ताक्रम २२ मा मिलान गरिएको छ। तुम्याङ त्या तर्फका चनुवा (पुस्ताक्रम २३) का नाति, पन्चकन्दा (पुस्ताक्रम २४) का छोरा धनकर्ण (पुस्ताक्रम २५) र चासमुखी (पुस्ताक्रम २५) एवं तुम्याङ हिरी तर्फका सन्तान युबन्दा (पुस्ताक्रम २३) का नाति शाहीवाल (पुस्ताक्रम २४) का कान्छा छोरा इरूहाङ (पुस्ताक्रम २५) मेवाखोलाबाट आठराई हाङपाङमा छुट्टिएर गएको तथ्य प्रमाणबाट देखियो। (Phyang AR, 2056)

उनीरूले २०१६ सालमा ल्याएका वंशावली हाङपाङ आउने फयङ साँबा हाँगाको मात्र थियो। मेवाखोलामा बस्ने दाजुभाइको वंशावली त्यसबेला उनीहरूले टिपेर ल्याएनन्। किनभने उनीहरूले तिनै मेवाखोला दाजुभाइबाट हाङपाङ छुट्टिएका हाँगाका दाजुभाइले पाउने किपट

अधिकार लिनु थियो। अर्थात् किपट विभाजन पछि मेवाखोलाका दाजुभाइको वंशावली हाङपाङलाई आवश्यक थिएन। त्यसकारण ऐतराज र सेरबहादुरले किपट प्रयोजनका निमित्त मेवाखोलाबाट हाङपाङ छुट्टिएकाहरूको वंशावली मात्र टिपेर ल्याएका हुन्। जेहोस्, त्यही अभिलेखलाई आधार मानेर थपिएका पुस्ताक्रम अद्यावधिक गरी फयङ साँबा वंशावली २०५६ प्रकाशित गरिएको हो। (Phyang AR, 2056)

## फयङ साँबा वंशावली २०५६ को आधिकारिकता

माथि उल्लिखित घटनाक्रमबाट के थाहा हुन्छ भने २०१६ सालमा आठराई हाङपाङबाट दुई प्रतिनिधि मेवाखोला गएर सम्पन्न गरेको अध्ययन तथा छलफलमा मेवाखोलाबाट अघि हाङपाङ छुट्टिएका हाँगाका दाजुभाइहरूको वंशावली र उनीहरूको पुर्ख्यौली जग्गाको किपट एकीन गरिएको थियो। सोही बमोजिम हाङपाङका फयङ साँबाले मेवाखोलामा रहेको पैत्रिक जग्गाको राजश्व बुझ्ने अधिकार मेवाखोलाका दाजुभाइबाट आफ्नो हातमा लिए। यसरी हाङपाङ छुट्टिएर आएका फयङ साँबाले मेवाखोलाको तिरो हाङपाङमै बुझ्न थाले। २०५० सालको दशकमा ताप्लेजुङ जिल्लामा जग्गा नापी कार्य सम्पन्न भयो। मेवाखोलामा नापी सम्पन्न भएपछि हाङपाङमा तिरो बुझ्ने बुझाउने क्रम टुट्यो। जेहोस्, २०१० सालको दशकदेखि २०५० सालको दशकसम्म हाङपाङ र मेवाखोलाबीच तिरो बुझ्नेबुझाउने कार्य सम्पन्न भएको थियो।

किपटको तिरोसम्बन्धी आर्थिक कार्य सम्पन्न गर्दै जाँदा वंशावलीसम्बन्धी ज्ञान पनि आवश्यक पर्दथ्यो। तसर्थ वंशालीसम्बन्धी थप ज्ञान र अभिलेखलाई २०१६ सालपछि पनि सुदृढ तुल्याइयो। तुम्याङ त्या, चनुवा तर्फका दरसन्तान धर्मध्वज (मुदेन पुस्ताक्रम २६) तिब्बतबाट तम्बरखोला, मेवाखोला, आठराईसम्म नुन ब्यापार गर्ने गर्दथे। त्यस क्रममा ओलाङचुङ गोलादेखि मैवा दोभानमा चौरी, खच्चडद्वारा नुन

ढुवानी गर्दा पैदलमार्गमा बिसौनीका रूपमा उनले बनाएका पाटीपौवाहरू थिए। ओलाङचुङ गोलामा तत्कालीन श्री ५ को सरकारले भन्सार र प्रहरी पोष्ट राख्ने भएपछि प्रयोगविहीन रहेका उक्त पाटीपौवाहरूको धनी खोज्न थालियो। उक्त पाटीपौवाको धनी खोज्दै नेपाल सरकारका प्रतिनिधि आठराई हाङपाङ पुगेर ऐतराज फयङलाई भेटे। त्यसपछि उक्त पाटीपौवा र जग्गाको स्वामित्व ऐतराज फयङले नेपाल सरकारका प्रतिनिधिलाई लिखित रूपमा हस्तान्तरण गरिदिए। (Phyang AR, 2056) उल्लिखित घटनाक्रमले मेवाखोलाबाट हाङपाङ छुटेका फयङहरूको तत्कालीन मेवाखोला र उत्तरक्षेत्रमा रहेको भूस्वामित्व र आधिकारिकतालाई पुष्टि गर्दछ।

### मेवाखोलामा वि.स. २०१६ मा टिपिएको वंशावली आधार

२०१६ सालमा हाङपाङबाट मेवाखोला गएर त्यहाँ दाजुभाइ सबै बसेर दाजुभाइको भूसम्पत्ति अंशवण्डा गर्दा पूर्वजको वंशावली एकीन गरेर मात्र सहमतिमा पुगेको हुनुपर्दछ। कसैले भोगचलन गर्दै गरेको जग्गाको हक अरू दाजुभाइलाई सजिलै हस्तान्तरण गर्न जोकोही मञ्जुर हुँदैनन्। २०१६ सालमा ऐतराज र सेरबहादुरको ऐतिहासिक मेवाखोला यात्राक्रममा वंशावलीका मद्दतले किपटको बाँडफाँड गरियो। त्यसबेला टिपिएको वंशावली नै मेवाखोलाको किपट बाँडफाँडको प्रमुख आधार थियो।

तसर्थ, फयङ साँबा वंशावली २०५६ विश्वसनीय छ। यो आधिकारिक र सर्वस्वीकार्य पनि छ। अनुसूचीमा दिइएको फयङ साँबा वंशावली २०५६ मा सरन्दा र यरन्दा मेवाखोलावासी भएकाले उनीहरू हाङपाङ वंशावलीभित्र नपरेका हुन्। (अध्याय ५.६ र अनुसूची २)

### फयङ साँबा वंशावली लेखनमा निरन्तरता

२०४७ सालमा नेपालमा बहुदल आएपछि बोल्न लेख्न खुकुलो भयो। आफ्ना मनमा गुम्सेका जातीय कुरा बोल्न वा लेख्न जनताले

आरम्भ गरे। सो क्रममा किरात लिम्बू जातिमा वंशावली निकाल्ने लहर चल्यो। आफ्नो इतिहासको जगेर्ना गर्नुपर्छ भन्ने चेतनाले मूर्तरूप लियो। मेवाखोलामा फयङ साँबा थर चलेर हाङपाङ छुट्टिएका फयङ साँबा हाँगाका परिवारले पनि आफ्नो वंशावली अद्यावधिक गर्ने कार्य गरे। आफ्नो किपट अधिकार प्राप्त गर्न हाङपाङबाट मेवाखोला जाँदा तयार भएको अभिलेख नै फयङ साँबा वंशावली तयार पार्ने पहिलो आधार बन्यो। जसको पहल ऐतराज फयङले गरेका थिए। उनले तयार पारेको वंशावली खाकालाई नवराज सुब्बाले सम्पादन गरी २०५६ सालमा 'फयङ साँबा वंशावली २०५६' प्रकाशित गरिएको थियो। प्रकाशित वंशावली सबै क्षेत्रका फयङ साँबालाई वितरण गरियो। निकै लामो अवधि ब्यतित भएर हालसम्म उक्त वंशावलीउपर अध्ययन, चिन्तन र मनन भयो। यसरी मेवाखोलाबाट हाङपाङ छुटेका फयङ साँबा हाँगाको वंशावली २०५६ स्थापित भयो।

## फयङ साँबा वंशावलीको विस्तारित रूप २०७७ सालमा

करिव दुई दशक बितेपछि २०७५ साल वैशाखमा सुनसरी धरानमा मेवाखोलाबाट हाङपाङ छुट्टिएका हाँगाका फयङ साँबाका पहलमा समग्र फयङ साँबा समाजको वैठक बस्यो। उक्त बैठकले २०५६ सालमा प्रकाशित पहिलो वंशावलीलाई विस्तार र अद्यावधिक गरी पुस्तकका रूपमा वंशावली प्रकाशित गर्ने निर्णय गऱ्यो। देश विदेशमा छरिएका सम्पूर्ण फयङ साँबा दाजुभाइको नाम ठेगाना, पुस्ताक्रम तथा सांस्कृतिक सूचना संकलन गर्ने निर्णय गरियो। बैठकले वंशावली लेख्ने कामको जिम्मा डा. नवराज सुब्बालाई दियो। यस काममा सहयोगका लागि एक समिति गठन भयो। नामावली, सूचना संकलन तथा सहजीकरणका लागि उक्त समितिमा धीरेन्द्रराज फयङ, टेकबहादुर फयङ र चन्द्र प्रसाद फयङ रहेका थिए।

हाल धरान निवासी धीरेन्द्रराज फयङले फयङ साँबा वंशावली २०५६ लाई आधार मानेर वंशावली अद्यावधिक गर्ने क्रममा नामावली संकलन कार्यमा महत्वपूर्ण योगदान गरेका छन्। उनले नेपालका विभिन्न जिल्ला, भारतमा समेत भ्रमण गरेर अद्यावधिक सूचना संकलन गरी लेखकलाई उपलब्ध गराए। बेलायत हाँगाको सूचना टेकबहादुर फयङ, मानबहादुर फयङ, लालबहादुर फयङ लगायतले धरानबाटै तथ्यांक उपलब्ध गराए। भुटानका दाजुभाइको सूचना भुटान निवासी प्रेम साँबासित लेखक स्वयमले सम्पर्क गरी तथ्यांक प्राप्त गरेका थिए। यही क्रममा मेवाखोला, संखुवासभा, पाँचथर तथा सिक्किमबाट पनि सम्बन्धित प्रतिनिधिमार्फत सूचना संकलन गरियो।

अध्ययन क्रममा प्राप्त सूचना संकलन गरेपछि डाटा भेरिफिकेसन, स्क्रिनिङ, अपडेट, तालिकीकरण र विश्लेषण कार्य सम्पन्न गरियो। वैज्ञानिक विधिबाट कम्प्युटरको मद्दतले सूचना विश्लेषणपछि संश्लेषण गर्ने कार्य सम्पन्न भयो। यो वंशावली लेखन कार्य अनुसन्धान विधि अनुरूप गरिएको छ। मानवशास्त्रीय दृष्टिकोणबाट फयङ साँबा परिवारको विश्लेषण यहाँ गरिएको छ। साँबा विशेषको जातीय परम्परागत ज्ञान तुङदुङ्गे मुन्धुमको पनि सोही क्रममा अध्ययन भएको छ।

फयङ साँबा वंशावलीलाई सेन वंशसित जोड्न आँखा देखाउने तुङदुङ्गे मुन्धुम हो। उक्त मुन्धुमको मूलस्थल कोशीबराह क्षेत्रको स्थलगत अध्ययन समेत गरियो। त्यहाँ रहेका सेन वंशका दरवार भग्नावशेषको अवलोकन भ्रमण गरियो। तुङदुङ्गे देव दाजुभाइ खोज्दै मेवाखोला पुगेको स्थलको पनि सूचना संकलन गरियो। यसरी वंशावली लेखन कार्यलाई विधिसम्मत, वस्तुपरक र वैज्ञानिक बनाउने कार्यमा अवलोकन भ्रमण समेत भएका छन्।

प्राप्त सूचनालाई मानवशास्त्र तथा इतिहासमा तथ्यहरूसित तुलना र विश्लेषण गर्ने काम सम्पन्न गरियो। यस क्रममा विद्वान लेखकहरूद्वारा लिखित पुस्तक, लेखमा प्रकाशित ज्ञान र अनुभवलाई आधार मान्दै वंशावली लेखनलाई समय सान्दर्भिक, परिस्कृत र सगोत्रीका वंशावलीसंग तुलनीय बनाउने प्रयास गरियो। मुख्य कुरो, फयङ साँबाको इतिहासलाई नेपालको इतिहाससित जोड्ने महत्वपूर्ण काम यहाँ सम्पन्न भएको छ। यद्यपि, समयको दवावबीच प्रस्तुत अध्ययनलाई २०७७ सालमा 'किरात लिम्बू संस्कृतिः मानवशास्त्रीय विवेचना' पुस्तक तथा वंशावली ईबुक प्रकाशित गरियो। उक्त वंशावलीमा तलमाथि परेका अंश यहाँ सच्याइएको छ। नाम लेखाइमा भएका त्रुटीलाई समेत सच्याउँदै केही नाम थपेर वंशावलीलाई अद्यावधिक गरिएको छ।

### वंशावली अद्यावधिक गरिएको

वंशावली लेखन भनेको एक निरन्तर अध्ययन कार्य हो। यो काम अनुसन्धान विधि र शैलीमा विभिन्न साधनको सहयोगले सम्पन्न गर्ने गरिन्छ। विशुद्ध वौद्धिक तथा प्राज्ञिक मूल्य र मान्यतामा आधारित रहेर मानवशास्त्रीय दृष्टिले वंशावली लेखनलाई निरन्तरता दिइनुपर्दछ भन्ने लेखकीय दृष्टिकोण छ। काम गर्दा त्रुटी भएमा सच्याउँदै अघि बढ्नु पर्दछ।

### मेवाखोला र सिक्किम वंशवृक्ष अद्यावधिक गरिएको

२०७६ सालमा मेवाखोलाबाट प्राप्त मेवाखोलावासी सरन्दा र यरन्दा वंशावलीलाई तुम्याङ हिरीतर्फ राख्नुपर्नेमा २०७७ मा प्रकाशित 'किरात लिम्बू संस्कृति मानवशास्त्रीय विवेचना' तथा वंशावलीसम्बन्धी ईबुकमा अन्यथा हुन गएकाले त्यसलाई सच्याएर हाल अद्यावधिक गरिएको छ।

वंशावली अध्ययनका क्रममा २०७६ सालमा मेवाखोलाका सूचना संकलक मोहनचन्द्र फयङ (पुस्ताक्रम ३०) ले त्यहाँको वंशावली उपलब्ध

गराएका थिए। मेवाखोला हाँगाका पूर्वज सरन्दा र यरन्दाबाट उद्विकसित वंशावली उनीबाट प्राप्त भयो। मौखिक रूपमा उनले त्यसबेला आफुहरू जेठो भाइको सन्तान भएको जानकारी दिए। समयको दवावका कारण बिना तुनात्मक अध्ययन तथा विश्लेषण त्यसबेला उनले ल्याएको वंशावलीलाई तुम्याङ त्या तर्फको जेठो सन्तानका रूपमा मिलान गरी 'किरात लिम्बू संस्कृति मानवशास्त्रीय विवेचना' तथा ईबुकमा प्रकाशित गरियो। तर अहिले तथ्यहरूलाई गहन अध्ययन र विश्लेषण गर्दा के थाहा भयो भने सरन्दा र यरन्दा तुम्याङ त्यातर्फ नभइ तुम्याङ हिरी पट्टिका सन्तान रहेछन्। (Phyang AR, 2056)

अतः वशावलीको तुलनात्मक अध्ययनका आधारमा मोहनचन्द्र फयङबाट प्राप्त मेवाखोला हाँगाको वंशावलीलाई तुम्याङ हिरी (पुस्ताक्रम २२) तर्फ मिलान गरी पुस्ताक्रम २३ का सरन्दा, यरन्दा र युबन्दालाई तुम्याङ हिरी हाँगामा अद्यावधिक गरिएको छ। (हेर्नुहोस्- अध्याय ५.६ र अनुसूची २) उल्लिखित तथ्यलाई सच्याउनु पर्ने कारण वा प्रमाण र आधारहरू मेवाखोला हाँगाको वंशावली पाठमा दिइएको छ।

### सिक्किम र पाँचथरको वंशावली एकीन गरिएको

स्मरण रहोस्, तुम्याङ हिरीतर्फ युबन्दा (पुस्ताक्रम २३) का नाति शाहीवाल (पुस्ताक्रम २४) का एक छोरा इरूहाङ (पुस्ताक्रम २४) तुम्याङ त्याका दरसन्तान पन्चकन्दा (पुस्ताक्रम २४) का छोरा धनकर्ण (पुस्ताक्रम २५) र चासमुखी (पुस्ताक्रम २५) संगै हाङपाङ छुट्टिएर गएका थिए। सोही क्रममा युबन्दा (पुस्ताक्रम २३) का नाति शाहीवाल (पुस्ताक्रम २४) का जेठा छोरा जसपाल (पुस्ताक्रम २५) भने सिक्किम र पाँचथरमा गए। (अध्याय ५.१० र ५.११ र अनुसूची २)

सिक्किममा बसोबास गर्ने फयङ साँबा आफू मेवाखोलाबाट छुट्टिएर गएको बताउँछन्। (Phyang YB, 2019) फयङ साँबा वंशावली २०५६ तथा अन्य क्षेत्रका हाँगाका वंशावलीको तुलनात्मक अध्ययनले के संकेत

गर्दछ भने सिक्किममा रहने फयङ साँबाको हाँगा युबन्दा (पुस्ताक्रम २३) का नाति शाहीवाल (पुस्ताक्रम २४) का छोरा जसपाल (पुस्ताक्रम २५) का जेठी श्रीमति तर्फका दरसन्तान हुन्।

त्यसैगरी, जसपाल (पुस्ताक्रम २५) का कान्छी श्रीमतितर्फका सन्तान मेवाखोलाबाट छुट्टिएर पाँचथर लुङरूप्पा हालको फिदिममा गएर खुर्पेठ्याक गरी वि.स. १८०७ मा बसे भन्ने पाँचथरवासी फयङ साँबाको भनाइ छ। (Phyang RB, 2019) उनीहरू युबन्दा (पुस्ताक्रम २३) का नाति शाहीवाल (पुस्ताक्रम २४) का छोरा जसपाल (पुस्ताक्रम २५) का दरसन्तान हुन्।

जेहोस्, वंशावलीमा साँबाका सबै हाँगाबिँगालाई रेखाचित्रद्वारा सरल ढंगले पुस्ताक्रम सहित देखाइएका छन्। जसले नाता केलाउन सहज हुनेछ। वंशावलीको विस्तृत विवरण सफ्टवेयरद्वारा वेभसाइटमा पनि उपलब्ध गराइएको छ। यदि कसैले आफ्नो परिवारको वंशावलीको संक्षिप्त खाका हेर्न सकिने ब्यवस्था गरिएको छ। तल दिइएको वेभसाइटमा वंशावली (Genealogy) खोलेर हेर्नसकिन्छ।

**स्वस्फूर्त उत्साहजनक सहयोग जुटेको**

अलिकति तीतामीठा अनुभव पनि पोख्न मन लाग्यो। पुस्तक लेखनकार्य करिव सकिएको अवस्थामा बेलायतबाट विश्वराज फयङ साँबाको अचानक फोन आयो। वंशावली पुस्तक प्रकाशनको लागि वेलायत, जापान र युएईमा रहेका फयङ साँबा दाजुभाइबाट रकम संकलन गरेर सहयोग गर्ने इच्छा जानकारीमा आयो। मैले प्रस्तावलाई सहर्ष स्वीकार गरेँ। सहयोगकर्ताको चाहना बमोजिम नाम, फोटो र रकम खुलाएर पुस्तकमा प्रकाशित गरिएको छ।

बेलायत लगायत प्रवासबाट वंशावली प्रकाशनमा आर्थिक सहयोग प्रदान गर्नेको नामावली विश्वराज फयङ मार्फत मलाई स्वस्फूर्त रूमा क्रमसः प्राप्त हुँदै थियो। एउटा लिष्टको पुछारमा मैले स्व. टेकबहादुर

फयङ साँबाको नाम पनि स्वर्गीय जोडिएर आएको देखेँ। त्यो देखेर म भावुक भएँ। उहाँ यस भौतिक संसारमा नभए पनि आजसम्म मेरो मन उनलाई स्वर्गीय लेख्न मानिरहेको थिएन। मैले उनलाई पुस्तकमा नाम लिँदा कतै स्वर्गीय लेखेको छैन। यसका कारण छन्, जुन मेरो आत्मासित गाँसिएर भावनामा बगेको छ।

उनले संसारबाट विदा लिन अघि फयङ साँबा उत्पत्ति मुन्धुम लेखिछाडेर गए। वंशावली प्रकाशनका लागि उनले मलाई बारम्बार झक्झकाएका थिए। उनले मलाई यति ताकेता गरे कि मैले हतार हतार किताव लेखेर टुङ्ग्याउनु पर्‍यो। उनको तीव्र चाहना र तमाम दाजुभाइको इच्छा पूरा गर्न मैले वंशावलीको पहिलो संस्करणलाई हतारमै पूरा गरेँ। तैपनि लेख्दै जाँदा पुस्तकको आकार अलि ठूलो भएछ। कागजले गर्दा मूल्य बढेकाले कतै बजारमा पठाउन पो सकिन्छ कि भनेर सोचेँ। फलस्वरूप कितावको शिर्षक 'किरात लिम्बू संस्कृति- मानवशास्त्रीय विवेचना'राखेँ।

बल्लबल्ल पुस्तक छापिएर बजारमा आयो। तर दुर्भाग्यवश पुस्तक प्रकाशन गर्ने साइत भने कोरोना महामारीका बेलामा पर्न गयो। हामीले टेकबहादुर फयङ साँबालाई त्यही महामारीताका गुमायौँ। मैले उनलाई वंशावली पुस्तक दिन सकिन। उनले टिपाएको मुन्धम र वंशावली मैले उनलाई देखाउनै पाइन। वंशावली पढ्ने उनको चाहना र पुस्तक देखाउने मेरो रहर आज मेरो मनको कुनामा किला झैँ गढेर बसेको छ। जब उनको नाम आउँछ तब उनले वंशावली छिटो प्रकाशित गर्न ताकेता गर्दा फोनमा बोलेका उनका आवाज अझै कानमा गुन्जिन्छन्। कहिलेकाहि मनले भन्छ, शायद अलि चाँडै दुनियाँबाट विदा हुनलाई उनले त्यति हतारो गरेका रहेछन्।

यसरी हाम्रा मनका घाउ राम्ररी निको भएका थिएनन्। चोट पुरिन नपाउँदै हालै उनका एक सन्तान स्व. बिगेन्द्र फयङ साँबालाई पनि

हामीले गुमाउन पुग्यौँ। यसबेला हामी दुःखमा छौँ। तै पनि उही वंशावलीको कुरा चलाउनु परेको छ। के गर्नु प्रकाशन गर्ने मौका पनि यही बेला परेको छ। टेकबहादुर फयङ परिवारमा यसबेला परेको बज्रपात हामी सबैको छातीमा कतै न कतै लागेको छ। त्यस्तो पीडामा छट्पटिएको बेलामा पनि परिवारजनले उनै स्वर्गीय टेकबहादुर फयङको नाममा सहयोग रकम टिपाएको देख्दा म भावुक बनेँ। उनको नाम पढ्दापढ्दै अनि उनको नाम टाइप गरेर लेख्दादेख्दै आँखा आँशुले भरिएर आएर एकछिन लेख्न पनि सकिन। भित्रभित्रै मेरो मन धेरैबेर रोयो। एउटा लेखक कहिलेकाहीँ कति निरीह हुँदोरहेछ।

उनै स्वर्गीय टेकबहादुर फयङका नाममा आएको सहयोगलाई मैले अस्वीकार गर्न सकिन। भारी मनले सहयोग स्वीकार गर्दै मनमा अनेक सोचिरहेँ। फयङ साँबा वंशावलीप्रति टेकबहादुर फयङको जुन गहिरो ज्ञान र लगाव थियो त्यसलाई म शब्दमा वर्णन गर्न सक्दिन। वंशावली तयार गर्न उनले मलाई दिएको आत्मबल र ज्ञान अपार छन्।

जुन व्यक्ति वंशावली हेर्नलाई सबैभन्दा लालयित थिए उनै व्यक्तिले पुस्तक हेर्ने मौका नपाइ संसारबाट गए। कहिलेकाहीँ त लेखकलाई मनमा कताकता आफ्ना प्रयास ब्यर्थ भएजस्तो पनि लाग्दोरहेछ। टेकबहादुर फयङप्रति म वास्तवमा नतमस्तक छु। उनले लगाएको गुन अलिकति भए पनि तिर्न चाहन्छु। त्यसैले वंशावली हेर्ने उनको अतृप्त चाहना र वंशावली प्रतिको उनको योगदान तथा अपार मायालाई कदर गर्दै प्रस्तुत फयङ साँबा वंशावली २०८१ उनै टेकबहादुर फयङ साँबालाई समर्पण गर्दछु। सबै दाजुभाइ र पाठकका तर्फबाट म उनको मनले शान्ति पाओस् भनी प्रार्थना गर्दछु।

फयङ साँबा दाजुभाइले आफू दुःखमा परेको बेला पनि वंशावलीलाई माया गरेर जुन आर्थिक सहयोग गरिदिनु भएको छ, त्यसप्रति म आभार र धन्यवाद व्यक्त गर्दछु।

### ओभरटेक गर्न खोज्ने र छिर्के लाउने प्रवृत्ति पनि पाइएको

काम गर्दै जाँदा लेखकले अनौठा अनुभव पनि बेहोर्नु परेको छ। केही वर्षअघि एक दिन फयङ साँबा बन्धु हुँ भन्दै एक जना संकलक आफ्नो हाँगाको वंशावली ल्यापटपमा लिएर आए। परिचय गरेपछि उनले आफ्नो शाखाको वंशावली तीन पाना मलाई दिए। अनि उनले बिना संकोच मेरो कम्प्युटरमा रहेको वंशावलीको करिव ६-७ सय पृष्ठको वंशावली छाप्नलाई कपी गरेर लान खोजे। यसअघि पहिले न कुनै भेट छ न कुनै सल्लाह कुराकानी छ, एक्कासी उनले पेनड्राइभ मतिर तेर्स्याए। लाग्थ्यो कुनै गुरूले विद्यार्थीलाई होमवर्क गर्न दिएर कपी माग्दैछन्। म सामग्री लगेर संस्था दर्ता गरेर वंशावली छपाइदिन्छु भनेर मलाई गफ पनि दिए।

पहिलो चोटी देखभेट भएको अपरिचित मान्छे, दाजुभाइ हुँ भन्छ, तर कसरी लाज पचाएर मेरो बौद्धिक सम्पत्ति एक्कासी खै ले भनेको होला भनेर अचम्ममा परेँ। मलाई उनको माग अपरिपक्व लाग्यो। मैले उनलाई कुनै तितो जवाफ फर्काइन। बरू त्यसलाई सहज ढंगले टारिदिएँ। त्यस्तै हो मान्छेमा कहिलेकाहीँ माग्ने ढंग पुग्दैन गल्ति हुन्छ भनेर घटनालाई बिर्सन खोजिरहेको थिएँ।

फयङ साँबा समाज धरानलाई दिइएको उनै बन्धुले तयार पारेको फयङ साँबा वंशावलीको पाण्डुलिपि मेरो हातमा पऱ्यो। त्यसलाई सरसर्ती हेरेँ। त्यसमा न अध्ययनको खाका छ, न कुनै विधि छ न त कुनै श्रोत खुलाइएको छ, त्यसभित्र मेरा प्रकाशित पुस्तकका वंशवृक्ष हुबहु सारिएका छन्। उक्त फयङ साँबा वंशावली पाण्डुलिपिमा स्थापित फयङ साँबाका हाङपाङ हाँगामाथि अनावश्यक छेडछाड गरिएका छन्। अर्कै गाउँ वा हाँगाका बन्धुले स्थापित हाङपाङ पुस्ताक्रमलाई तलमाथि पारिदिएछन्। मैले त्यसमा आपत्ति जनाएर फयङ साँबा समाजलाई

प्रतिक्रिया दिएँ। तर म उत्तेजित भइन। सम्झिएँ, यो कस्तो बौद्धिक बेइमानी र घृष्टता हो? बन्धुबाटै बौद्धिक क्षेत्रमा डन शैली किन?

वंशावली एक अध्ययन हो विशुद्ध अनुसन्धान हो। यसका निश्चित विधि छन्, यसका साधन, स्रोतसामग्री हुन्छन्। त्यसमा रहेर अझ सम्बन्धित समुदायको विश्वास लिएर आधिकारिकता हासिल गरेर अध्ययन सहित जिम्मेवारपूर्वक वंशावली तयार गर्नुपर्नेमा आफूखुसी विना अंगको टिपोटलाई वंशावली पाण्डुलिपि भनी फयङ साँबालाई वेवकूफ बनाउन अघि सार्न लाज लाग्दैन? प्राज्ञिक मर्यादा र इमान्दारिता कुन चराको नाम हो थाहा नहुने त्यस्ता व्यक्ति र प्रवृत्तिलाई सोध्दैछु- तिमीहरूलाई कपीराइट सम्बन्धी कानुन र ब्यवस्था थाहा छ कि छैन?

माथि उल्लिखित घटनाक्रम केही वर्षसम्म पचाएर बसेँ र बिर्सन खोजेँ। तर प्रस्तुत साँबा वंशावली २०८१ संस्करण छपाइका लागि तयार भयो। विद्वतवर्ग वा सम्बन्धित जानकारबाट कुनै सुझाव भए पाउँ भन्ने मनसायले वंशावलीको रचनागर्भ र सारलाई फेसबुक सामाजिक सञ्जालमा साझा गरेँ। केही वर्षअघि वंशावलीको सफ्टकपी पेनड्राइभमा लगेर छपाउँन खोज्ने उनै फयङ साँबा बन्धुले मबाट सामग्री नपाएको कुण्ठा वा आफुले किताव छाप्न नपाएको कुण्ठा फेसबुकमा पोखेछन्। उनले त्यहाँ वंशावलीप्रति आधारहीन टिप्पणी गरेको पाएँ। उनले आधार बिनाका कुनै लेखक, पुस्तक, स्रोत नखुलेका लोक साहित्य जस्ता सामग्री फयङ साँबा वंशावलीमा राख्न प्रस्ताव गरे। मैले त्यसको भरपर्दो प्रमाण वा स्रोत दिन उनलाई संजालमै आग्रह गरेँ तर उनले त्यो दिन सकेनन्।

फयङ साँबा परिवारका सबैले वंशावली लेखेकोमा लेखकलाई आभार ब्यक्त गरेका छन् तर एक जना बन्धु हामीमाझ आफ्नो अज्ञानता, अहम् र महत्वाकांक्षाका भद्दा  प्रदर्शन गरिरहेका छन्। स्मरण रहोस्, उनले संकलन गरेका हाँगा वंशावली पुस्तकहरूमा देखाउँदा उनलाई

स्रोतव्यक्ति भनेर देखाइएको छ। उनलाई धन्यवाद पनि पुस्तकहरूमा दिइएको छ। आफूलाई पढेलेखेका भन्ठान्ने एक शाखाका वंशावली संकलकले विषयवस्तुको गम्भीरता र मानवशास्त्रीय अध्ययन अनुसन्धानका विधि, मूल्य र मान्यता विपरित कसैले दशकौँ लगाएर तयार पारेको फयङ साँबा वंशावलीमाथि अनावश्यक टिप्पणी, आग्रह र पूर्वाग्रह सार्वजनिक गरेको देख्दा मलाई दुःख लागेको छ।

## सकारात्मक र सिर्जनशील सुझाव र भूमिका अपेक्षित

हो, हिजो कलम समाउन जान्ने र अक्षर लेख्न सक्नेले वंशावली लेखे। आज त्यस्ता इमान्दार पुस्ता छैन। आज समाजमा बसेर सोझासाझा जनतालाई घुमाएर राजनीति गर्नेहरू आफू अनुकूलको वंशावली लेख्न तम्सँदैछन्। तिनीहरूलाई न मानवशास्त्रको ज्ञान छ न त अध्ययन अनुसन्धानका विधिबारे जानकारी छ। विश्वविद्यालयको कुनै डिग्री लिएर मात्र यसमा हुँदैन, राजनीति जानेर मात्र हुँदैन वंशावली अध्ययन गर्नलाई लगाव चाहिन्छ, मानवशास्त्रीय ज्ञान र सांस्कृतिक चेतना हुनुपर्दछ।

सबैभन्दा ठूलो कुरो आफूभित्र अहम् र पूर्वाग्रह पालेर राख्नु हुँदैन। खुला र इमान्दार अन्वेषकले मात्र सही जानकरी गराउने हैसियत राख्दछ। कुनै संस्था खोलेर वंशावलीमा आफ्नै जातिको प्रसस्ति गाइएका थुप्रै वंशावली बजारमा पाइन्छन् ती आज लाजले लुकाएर थन्क्याइएका छन्। भविश्यका निर्दोष पिढीलाई दिग्भ्रमित तुल्याउने खालका वंशावलीका पासो आज दराज दराजमा भेटिएलान्। हामीले त तथ्यपरक ढंगले वंशावली लेखेर सबैका सामू छाती फुलाएर हेर यो हो हाम्रो नेपाली इतिहास भनेर चिनाउँन सक्नुपर्दछ।

२०१६ सालमा मेवाखोलामा हाङपाङका प्रतिनिधिहरू गएर संकलन गरेको वंशावलीका आधारमा तयार पारेको फयङ साँबा वंशावली २०५६ र सोही आधारमा मानवशास्त्रीय अध्ययन विधि

अवलम्बन गरेर सम्बन्धित समुदायको सहभागितामा किरात लिम्बू संस्कृति- मानवशास्त्रीय विवेचना २०७७, फयङ साँबा वंशावली २०८० (ईबुक) र हाल फयङ साँबा वंशावली २०८१ तयार पारिएको हो। आधिकारिक रूपमा कुनै ठोस अध्ययनबिना फयङ साँबा वंशावलीका नाममा उल्लिखित पुस्तकका कपीराइट अधिकारको उल्लंघन हुने गरी कुनै काम गरिएको पाइएमा कानुनी कारवाही हुने ब्यहोरा जानकारी गराउन बाध्य भएको छु।

फयङ साँबाको जातीय एकतापूर्ण भावनालाई धमिल्याउन खोज्ने वा हामीबीच अनावश्यक राजनीति गर्न खोज्ने त्यस्ता गैरजिम्मेवार व्यक्ति, शैली र प्रवृत्तिप्रति सचेत रहन सम्बन्धित सबैको ध्यानाकर्षण गराउँछु।

स्मरण रहोस्, प्राज्ञिक मूल्य र मान्यता विपरितका कुरामा म सम्झौता गर्दिन। म सहभागितामूलक स्वतन्त्र अनुसन्धान र लेखनमा विश्वास गर्दछु। कसैले पनि सही र भरपर्दा सूचना वा प्रमाण उपलब्ध भएर वंशावली लेखन कार्यलाई सहयोग गर्न सक्दछन्। तथ्यांकउपर आधिकारिक र योग्य ब्यक्तिबाट छानबीन, विश्लेषण हुन्छ, यो बौद्धिक वा प्राज्ञिक विषयवस्तु हो। नामावली टिपाएजस्तो अन्य सैद्धान्तिक कुरामा आधार र प्रमाण बिना लेखकलाई अनावश्यक प्रभाव पार्ने काम कसैले पनि नगर्न हुन आग्रह छ।

लेखकलाई सिर्जनात्मक सुझाव पनि आएका छन्। फयङ साँबा समाजका विशिष्ठ सदस्यहरू जसले देश र विदेशमा उच्च नाम राख्ने काम गरेका छन्, उनीहरूको नाम पनि वंशावलीमा खुलाएर राखिदिए राम्रो हुने विचार आएको छ। यो स्वागतयोग्य कुरो हो। त्यस्ता योग्य मानिसको नाम र उपलब्धी वा मानसम्मान पाएको जानकारी भएमा खुलाएर लेखकलाई पठाइदिनुहोस्। आगामी संस्करणमा त्यसलाई समेटेर लगिनेछ।

साथै, वंशावलीमा आमाको पनि थर राखिदिएमा भावी सन्तानले कुटुम्बेरी गर्दा साइनो केलाउन सहज हुने कुराको पनि सुझाव आएको छ। यो पनि राम्रो सुझाव हो। यसमा एकैचोटी सबैको सूचना नआउला तापनि इच्छुकले मावलीतिरको तीन पुस्तासम्म खुलाएर पठाउनुहोस्। उक्त सूचनालाई एक अध्यायमा समेटेर लैजाने प्रयास हुनेछ। यो तरिका मानवशास्त्रको व्यवहारिक ढाँचा हो जसले समाजशास्त्रलाई पनि आकर्षित गर्दछ।

**नैतिकता, दायित्व र आधिकारिकतामा अडेको लेखनकार्य**

फयङ साँबा वंशावली लेखन कार्यमा लेखकका चार पुस्ता लागेका छन्। हाल लेखकका घरपरिवारका तीन पुस्ताका दाजुभाइ सदस्यहरू निरन्तर वंशावली संकलन, लेखन र प्रकाशनमा संलग्न छन्। यस कार्यमा हामीले सात दशक भन्दा लामो समय खर्चिएका छौँ। यो फयङ साँबा समाज र मानव जातिको लागि गरिएको निःस्वार्थ सेवा हो। सबैको साथ, विश्वासले गर्दा जिम्मेवारी र आधिकारिकता पनि हासिल गरेका छौँ।

**धन्यवादज्ञापन**

अध्ययन कार्यलाई अघि बढाउन मलाई बाटो देखाउने पिताश्री ऐतराज फयङ (पुस्ताक्रम २९) हाङपाङ, ताप्लेजुङ, सहजकर्ता धीरेन्द्रराज फयङ (पुस्ताक्रम ३० लेखकका कान्छा भाइ) हाङपाङ, ताप्लेजुङ हाल धरान, मानबहादुर फयङ साँबा (पुस्ताक्रम ३०) धरान, सुनसरी, टेकबहादुर फयङ साँबा (पुस्ताक्रम ३०) धरान, हाल–बेलायतप्रति आभार प्रकट गर्दछु।

साथै, सूचना संकलक मोहनचन्द्र फयङ (पुस्ताक्रम ३०) मेवाखोला ताप्लेजुङ, प्रेमबहादुर फयङ साँबा (पुस्ताक्रम ३२), भुटान, योगबहादुर फयङ (पुस्ताक्रम ३०), सिक्किम, रामबहादुर फयङ (पुस्ताक्रम २८), पाँचथर, मनाहाङ फयङ (पुस्ताक्रम ३१), संखुवासभालाई हार्दिक

धन्यवाद छ। सहजीकरण गर्ने चन्द्र प्रसाद फयङ, (पुस्ताक्रम ३१) ललितपुर, कौशलराज सुब्बा (पुस्ताक्रम ३१ लेखकका छोरा), ललितपुर र निश्छलराज सुब्बा (पुस्ताक्रम ३१ लेखकका छोरा), विराटनगरलाई पनि धन्यवाद छ। वंशावली प्रकाशनलाई सहजीकरण गर्ने लालबहादुर फयङ साँबा (पुस्ताक्रम ३०), कर्णबहादुर फयङ साँबा (पुस्ताक्रम ३०) लाई धन्यवाद छ।

प्रवासमा रहेर पनि वंशावलीलाई माया गरी छपाइमा आर्थिक सहयोग गर्ने सम्पूर्ण दाजुभाइमा हार्दिक धन्यवाद छ। विगत लामो समयदेखि फयङ साँबा वंशावली प्रकाशनमा लालायित तथा लेखकलाई बेलाबेला हौसला प्रदान गर्ने फयङ साँबा समाजका एक सज्जन विश्वराज फयङ साँबा जसले यसपालि वंशावली पुस्तक छपाइका लागि स्वस्फूर्त आर्थिक अनुदान दाजुभाइबीच समन्वय गरी जुटाएर गरेको योगदानका लागि विशेष धन्यवाद छ।

अन्तमा, समय समयमा नामावली अपडेट गर्नहुन अनुरोध छ। साथै वंशावलीसम्बन्धी कुनै भरपर्दा प्रमाण भएमा लेखकलाई उपलब्ध गराएर लेखन कार्यमा सहयोग गर्नहुन सबैमा अनुरोध छ। धन्यवाद।

**डा. नवराज सुब्बा (फयङ साँबा)**
विराटनगर, नेपाल । २०८१ साल (सन् २०२४)
Email: info@nrsubba.com.np
Website: www.nrsubba.com.np

# कृतज्ञताज्ञापन

१. ऐतराज फयङ साँबा (पुस्ताक्रम २९ लेखकका पिता), हाङपाङ, ताप्लेजुङ, फयङ साँबा वंशावली २०५६ का संकलक, स्रोतब्यक्ति।

२. धीरेन्द्रराज फयङ साँबा (पुस्ताक्रम ३० लेखकका कान्छा भाइ), हाङपाङ, ताप्लेजुङ, हाल धरान संयोजक तथा तथ्यांक संकलक।

३. मानबहादुर फयङ साँबा (पुस्ताक्रम ३०), धरान, सुनसरी, नेपाल, फयङ साँबा मुन्धुम पाण्डुलिपि उपलब्धकर्ता।

४. टेकबहादुर फयङ साँबा (पुस्ताक्रम ३०), धरान, सुनसरी, हाल– बेलायत, फयङ साँबा उत्पत्ति मुन्धुमका एक स्रोत–व्यक्ति।

५. मोहनचन्द्र फयङ साँबा (पुस्ताक्रम ३०), मेवाखोला साँबा ताप्लेजुङ, नेपाल, मेवाखोला क्षेत्रको वंशावली तथा तथ्यांक संकलक।

६. प्रेमबहादुर फयङ साँबा (पुस्ताक्रम ३२), भुटान, फयङ साँबा वंशावलीको लागि भुटानको वंशावली संकलक।

७. योगबहादुर फयङ साँबा (पुस्ताक्रम ३०), सिक्किम, भारत, फयङ साँबा वंशावलीको लागि सिक्किम, भारतको वंशावली संकलक।

८. रामबहादुर फयङ साँबा (पुस्ताक्रम २८), पाँचथर, नेपाल, फयङ साँबा वंशावलीको लागि पाँचथरका स्रोतब्यक्ति।

९. मनाहाङ फयङ साँबा (पुस्ताक्रम ३१), संखुवासभा, नेपाल, फयङ साँबा वंशावलीको लागि संखुवासभाको वंशावली संकलक।

१०. चन्द्र प्रसाद फयङ साँबा (पुस्ताक्रम ३१), ललितपुर, सहजकर्ता ।

११. कौशलराज सुब्बा (पुस्ताक्रम ३० लेखकका छोरा), महालक्ष्मी नगरपालिका–४ ललितपुर, नेपाल, सूचना–प्रविधि सहजकर्ता।

१२. निश्छलराज सुब्बा (पुस्ताक्रम ३० लेखकका छोरा), विराटनगर महानगरपालिका–५ मोरङ, नेपाल, सूचना–प्रविधि सहजकर्ता।

१३. पुस्तकको आवरण सहयोगः Canva.com

# विषयसूची

# अध्याय १ -विषय प्रवेश

## १.१ फयङ परिचय

मुन्धुम तथा किरात इतिहास अनुसार फयङ साँबा किरात–सेन वंशबाट विकसित नेपालका आदिवासी हुन्। (Sen Chobegu, 2007) यिनीहरू काशीगोत्रे जनजाति हुन्। (Chongbang, 2009) किरात–सेन वंश र सभ्यतासित गाँसिएका फयङ साँबा किरात राई र लिम्बू जातिका सदस्य हुन्। (Yonghang, 2011) यिनीहरूले लिम्बुवानमा लिम्बू र खम्बुवान भूमिमा राई थर धारण गरेका छन्। जे भए पनि यिनीहरू फयङ साँबा पहिचानले परिचित छन्।

फयङ थर रहनुमा एउटा रोचक किंवदन्ती छ। उखान अनुसार फयङ थर उत्पत्ति उसले लगाउने पहिरनको आधारमा भएको थियो। लिम्बू भाषामा फयङको शाब्दिक अर्थ हो– झल्लरी, फूल फक्रनु। उसले लगाएको लुगा फयङ–फयङ झल्लरीझैँ हल्लिएको हुँदा त्यही अनुकरणात्मक शब्द चरिचायक उपथरका रूपमा फयङ चल्न गयो।

भाषातत्वले पोशाककै आधारमा साँबा परिवारका अर्का सदस्यको पनि उपथर बनेको संकेत पाइन्छ। साँबा परिवारका फेन्छाङ्वा उपथरको व्युत्पत्ति पनि पहिरनबाटै भएको लेखकीय विश्लेषण छ। लिम्बू भाषा अनुसार ‘फेन’ भनेको लगौँटी वा धोती, ‘चाङ’ भनेको लगाउने लुगा र

'बा' भनेको लगाउने मानिस हो। धोती लगाउने मान्छे जनाउने 'फेनचाङ्बा' हुँदै फेन्छाङ्बा उपथर बनेको शब्द संरचनाले जनाउँछ।

कुनै कालखण्डमा घटेको कुनै विशेष घटनाक्रम वा सन्दर्भसित गाँसिएर थर वा उपथर बनेका पाइन्छन्। साँबा परिवारमा पहिरनलाई नै पहिचानको रुपमा मान्नु पर्ने अवस्था कसरी अयो भन्ने सम्बन्धमा विश्लेषण गर्न सकिन्छ। तत्कालीन समाजले उक्त पहिरनलाई अनौँठो देखेकोले समाजले नै उसको नाम राखेको हुनुपर्दछ। साँबा पूर्वज मधेशबाट पहाड उक्लेका जाति हुन् भन्ने ऐतिहासिक तथा मुन्धुमी तथ्य छन्। सोही आधारमा गर्मी क्षेत्रको पहिरन हिमाली क्षेत्रमा अनौठो देखिएको हुनाले फयङ उपथर गढन्त भएको हुन संभव छ।

हाल यिनीहरूको बसोबास ताप्लेजुङ, पाँचथर, संशुवासभा, सुनसरी, मोरङ, झापा, ललितपुरमा रहेको छ। विदेशमा सिक्किम, असम, भुटान, नागाल्याण्ड र बेलायतमा यिनीहरू फैलिएका छन्।

जेहोस्, फयङ साँबाको माङ्गेना यक पूर्वी हिमाली जिल्ला ताप्लेजुङमा पर्ने मेवाखोला साँबा गाउँ हो। जहाँ यिनीहरूको माङगेना यक स्थल लिङ थाङ यक रहेको छ। साथै, तुङदुङ्गे पूजा यिनीहरूको कूला पूजा हो। उक्त मुन्धुमले यिनीहरूको पैत्रिक सम्बन्ध कोशी बराहा क्षेत्रसित रहेको जनाउँछ। हाल जहाँ रहे पनि लिङथाङ यक र कोशी बराह क्षेत्रलाई यिनीहरू पवित्र पितृस्थलका रूपमा मान्दछन्।

## १.२ साँबा परिचय

साँबाको शाब्दिक अर्थ पुजारी, सरदार वा मुखिया हो। किरात लिम्बू समुदायमा पुजारीलाई साम्बा भनिन्छ। किरात लिम्बू समुदायको थर पनि साम्बा वा साँबा रहेको पाइन्छ। सामान्यतः बोलिचालिमा र लेखाइमा साँबा शब्दले जाति वा थर जनाउँछ भने साम्बा शब्दले पेशाबोधक पुजारी

जनाउँछ। तर साँबा थर जनाउन कतिपयले साम्बा लेख्ने गरेको पनि पाइन्छ। यसबारेमा थप चर्चा अलग शिर्षकमा गरिनेछ।

यहाँ साँबा थर भन्नाले मेवाखोलामा उत्पत्ति भएका जातिलाई बुझ्नुपर्दछ। यी बहादुर र बुद्धिमान जाति थिए भन्ने कुरा इतिहासले बताउँछ। संखुवासभाको चैनवपुरमा चलेको ऐतिहासिक गोरखाली – लिम्बुवान युद्धमा फाक्ते र शिपा नामका दुई साँबा योद्धाहरू सहिद भएका थिए। (Samba Mingshra, 2018) यिनीहरू जनैधारी शैव मतावलम्बी रहेको कुरा पनि सोही युद्धमा गरिएको वंशावली अध्ययनबाट थाहा हुन्छ। लिम्बूलाई दिइएको जग्गाको किपट अधिकार कायम राख्नलाई काशी गोत्रे साँबाहरूले जनै त्याग गरेको तथ्य इतिहासबाट थाहा हुन्छ। (Ingnam, 2012; Chemjong, 1974)

यो संज्ञा शिव, सबा (बाँदर/ पुर्खा) को अपभ्रंश हो। यसको जरा कोट्याउँदा यो नाम प्राचीन पर्सियामा शिव आस्था राख्ने सबियन्स जातिसित गाँसिएको पाइन्छ। (Thulung, 1985; Percy, 1951) यो साँबा नाम जम्मु कश्मीरका साँबा र कठुवा स्थानसित पनि गाँसिएको पाइन्छ। हाल त्यहाँ कश्मिरी लिम्बूको उपस्थितिले साँबा र कठुवा जस्ता किरात लिम्बू संज्ञा सन्दर्भिक लाग्दछन्। स्मरण रहोस् जम्मु–कस्मिर क्षेत्रमा अझै पनि कस्मिरी लिम्बूको उपस्थिति रहेको छ। (Limbu translation services, 2002)

यसै गरी जुम्ला क्षेत्रको साँबालोलमा र सुनसरी कोकाहा बराहा क्षेत्रमा पाइएका ढुङ्गाका मूर्तिबीच सम्बन्ध एक अध्ययनमा पाइएको छ। (Oli, 1988) साँबा शब्द बराहा माङ (देव), कोकाहा माङसित सम्बन्धित रहेको तथ्यलाई उक्त पुरातात्विक प्रमाणले बल पुऱ्याउँछ। (Subba, 2021)

किरात लिम्बू समुदायमा ३७५ भन्दा बढी थर, उपथर छन्। (LimbuPeople, 2021) त्यसमध्ये साँबा एक थर हो। हालसम्मको अध्ययनको आधारमा साँबा थरभित्र पनि १८ (अठार) उपथर छन्।

यद्यपि, यसमा कोही छुटेका पनि होलान्। अनुसन्धानले संख्या थपघट हुनसक्दछ।

यत्रो संख्या देख्दा सबै साँबाका पुर्खा एकै हुन् जस्तो लाग्न सक्दछ। ख्याल गर्नु पर्ने कुरा के छ भने वंश वा वंशावलीभित्र रक्तगत नाता भएका भ्राता र मिसलभाइ (मानसपुत्र) दुवै प्रकारका दाजुभाइ सदस्य हुन्छन्।

विभिन्न स्रोतबाट संकलित साँबाका १८ उपथरहरू निम्नानुसार छन् – चङबाङ, लुङहिम्बा, फेन्छाङ्वा, फयङ, काईदाङ्बा, मिक्केन्दाङ, मादेन, तङदप्पा, स्रेङ, मुदेन्छङ, तेस्येबा, वेत्नेबा, पाक्साँवा, तुम्साँवा, लेगुवा, साँबाहाङ, ताप्मादेन र हिनाहाङ साँबा। (Chongbang Samba, 2009; Samba Mingshra, 2018; Sembu, 2014; Tumbahang, 2011)

हालसम्म यी साँबामध्ये चङबाङ, मुदेन्छङ र फयङ साँबाको वंशावली मात्र प्रकाशमा आएका छन्। तीन वंशावली अध्ययनको आधारमा निकटतम पुर्ख्यौली हाँगा छुट्टिएर बनेका साँबाका आठ उपथरहरू चङबाङ, लुङहिम्बा, फेन्छङवा, फयङ, काइदाङबा मिक्केन्दाङ, मादेन र तङदप्पा रक्तअनन्या भ्राता हुन्। अन्य साँबा उपथरबारे अध्ययनपछि मात्र बताउन सम्भव छ।

जेहोस्, यी सबै साँबाको माङ्गेना यक मेवाखोला साँबा गाउँमा अवस्थित लुङथाङ यक हो। यिनीहरू कश्यप गोत्र वा काँशीगोत्रे वा काशीवंशका हुन्। (Thulung, 1985; Chemjong, 2003a)

त्यसैगरी सेन वंशी साँबासेरेङका सन्तान स्रेङ, सोलङ्गेन, ताम्मादेन, लाबुङ, मुदेनहाङ, मिफेङगेन साँबा पनि फयङ साँबाका अलि दूरका तर सगोत्री रक्तअनन्या वंशज हुन्। (Sen Chobegu, 2007) यसमा थप अध्ययन गर्न सकिन्छ।

# १.३ लिङथाङ यक

मुन्धुमअनुसार फयङ साँबा परिवारको पैत्रिक स्थललाई माङ्गेना यक भनिन्छ। यो मेवाखोला स्थित साँबा गाउँमा रहेको छ। जसलाई लिङथाङ यक भनिन्छ। (Chongbang, 2009) ऐतिहासिक तथ्य तथा मुन्धुमी कहावतका आधारमा, लिङथाङ यकमा विभिन्न साँबा थर उद्भव भएका हुन्। त्यसैले यस स्थानलाई फयङ साँबाको मुनातेम्बे पनि मानिन्छ।

माङ्गेना यकमा पारिवारिक थर, उपथरहरूले कुलपूजा गर्ने परम्परा छ। हाल टाढा छरिएर बसेका परिवारका सदस्यले पनि घरमा पूजाआजा गर्दा आफ्नो पैत्रिकस्थल माङगेना यक अर्थात् लिङथाङ यकको नामोच्चारण गर्ने गर्दछन्। अतः लिङथाङ यक साँबा परिवारको पवित्र आराध्यस्थल हो।

जनश्रुतिअनुसार साँबाका पुर्खा फेम्बुनहाङको वासस्थान लिङथाङयक नजिक रहेको र उनले पूजा गर्ने गरेको ढुँङ्गालाई लिङथाङ यक भनिएको हो। लिम्बू भाषामा ढुङ्गालाई लुङ भनिन्छ। थर विकास भएको वा उम्रेको भनी जनाउने शब्द थाङ र यक भन्नाले स्थल हो। साँबा परिवारले उक्त स्थान पितृस्थल मान्दछन्। उक्त लिङथाङयक ढुङ्गाको ऐतिहासिक फोटो चङबाङ साँबा वंशावलीको अग्रपृष्ठमा प्रकाशित छ। (Chongbang, 2009)

चङबाङ साँबा वंशावलीअनुसार मेवाखोला साँबा तत्कालीन वडा न.९ मा अवस्थित उक्त लिङथाङ यक ढुङ्गे डाँडामा रहेको एक चुच्चे ढुङ्गालाई लिङथाङ यक भनिन्छ। त्यसकै नजिक साँबा पुर्खा फेम्बुनहाङको निवास थियो। उनै पितृले पूजा गर्ने गरेको उक्त ढुङ्गालाई आज साँबा उत्पत्ति भएको स्थल वा चिनोको रूपमा हेरिन्छ। (Chongbang, 2009)

हेर्दा लिङथाङ यक एक अग्लो चुच्चे ढुङ्गा देखिन्छ। त्यसैलाई साँबा उम्रिएको स्मारक जनाउने भाव भूआकृतिले पनि सादृश्य गराउँछ। हामीलाई माटोमा ढुङ्गा पलाएको हो कि जस्तो लाग्दछ। सायद त्यसै भावलाई समातेर उक्त स्थानमा साँबा जाति कुनै कालखण्डमा पलाएका थिए अर्थात् उनीहरूको जातीगत उद्विकास भएका हो भन्ने सन्देश लिङथाङयकले दिन्छ।

यद्यपि, वर्तमान अवस्थामा उक्त स्थानलाई सम्याएर आधुनिक यक हिम मन्दिर भवन बनाइएको छ। ढुँङ्गाको प्राकृतिक रूप अब फोटोमा मात्र सीमित भएको छ। जसलाइ चङबाङ साँबा वंशावलीबाट साभार गरी यस वंशावलीको अनुसूचीमा देखाइएको छ। (Chongbang, 2009)

ताप्लेजुङको मेवाखोला थुमको साँबा गाउँ वडा नं. ९ मा प्राकृतिक अवस्थामा शान्तिपूर्वक ध्यानमग्न बसेको चुच्चे ढुङ्गा छ। त्यसको वरिपरि उसका सन्तानजस्ता देखिने ढुङ्गै ढुङ्गाको सुन्दर डाँडालाई टाढैबाट देखिन्छ।  यो नै पैत्रिक तथा ऐतिहासिक लिङथाङ यक हो। लिम्बू भाषामा लिङ भन्नाले उम्रनु र थाङ भन्नाले आउनु हो। उक्त ढुङ्गानेरबाट सृष्टि भएका/ पलाएका दरसन्तान साँबा थर/ उपथर हुन्। यही जातीय उत्पत्ति जनाउने ढुङ्गाको चिनोका आधारमा लिङथाङ यक संज्ञा गढन्त भएको जनश्रुति रहेको छ।

नेपालमा उर्लेको नयाँ राजनीतिक लहर र संघीयताको राप मेवाखोलामा पनि पस्यो। त्यहाँका साँबाहरूले आफ्नो पैत्रिक स्थललाई संरक्षण र सम्बर्धन गर्ने सङ्कल्प गरे। (Samba Mingsra, 2018) फलस्वरुप स्थानीय साँबाहरूले वि.सं. २०७५ सालतिर प्राकृतिक अवस्थामा रहेको पुर्खाको नासो लुङथाङ यक स्थललाई आधुनिक स्वरुपमा ढाल्ने योजना गरे। योजना कार्यान्वयन गर्न विश्वभर छरिएका साँबासित सम्पर्क बढाए र आर्थिक संकलन गरे। फलस्वरूप उक्त लिङथाङ यक नयाँ रूपमा उभिएको छ। प्राकृतिक अवस्थाको मौलिक

लिङथाङ यक अब तस्वीरमा सीमित भएको छ। यस्ता पुरातात्विक महत्वका स्मारकहरूको जिर्णोद्धार गर्दा त्यसको विशिष्ठतालाई विशेष ध्यान दिनुपर्दछ।

ऐतिहासिक तथा पुरातात्विक महत्वका स्थानलाई संरक्षणका नाममा भक्षण हुनबाट रोकियोस्। हामीलाई हाम्रा पुर्खाका प्राकृतिक अर्थात् मौलिक स्वरूप नै प्यारो लाग्दछ। पैत्रिक स्थलको मौलिकता वा विशेषतालाई कतै आँच नपुगोस्। लिङथाङयकको संरक्षण गर्नु हामी सबैको कर्तव्य हो। यद्यपि, समय परिस्थिति र विश्वमा छरिएका साँबाजन सबैले स्थानीय मेवाखोलावासीको काँधमा यक संरक्षण र प्रबर्द्धनको थप जिम्मेवारी सुम्पेका छन्। जसलाई गम्भीरतापूर्वक लिइयोस्।

वर्तमानमा तीन तहका सरकार छन्। राज्यले स्थानीय तहमा रहेका सबै जाति वा जनजातिका पुरातात्विक तथा ऐतिहासिक स्थलहरूको सहभागितामूलक ढंगले संरक्षणमा ध्यान देओस्। यो हामी सबैको अपेक्षा हो।

## १.४ कोशी बराह क्षेत्र

साँबा जातिको पुर्खा बराह माङ, कोकाह माङ बराह क्षेत्रमा रहने गरेको कुरा तुङदुङ्गे मुन्धुममा उल्लिखित छ। (Chonbang, 2009) उनै बराह देव, कोकोह देवका कान्छा छोरा तुङदुङ्गे देव दाजुभाइ खोजी गर्दै मेवाखोलामा पुगेर साँबासित भेट भएको मुन्धुमी कथन छ।

सेन चबेगु वंशावलीले बराह माङ सेन वंश भएको बताएको छ। (Sen Chobegu, 2007) सोही आधारमा तुङदुङ्गे देव सेन वंशका कान्छा राजकुमार भएको थाहा हुन्छ। तुङदुङ्गे मुन्धुम अनुसार तुङदुङ्गेले बराहमाङका कान्छा छोराका रूपमा अंश र शक्ति पाए। त्यसपछि दाजुभाइ खोज्दै उनी पहाडतिर उकालो चढे। उनले मेवाखोलामा साँबा

जातिबाट दाजुभाइका रूपमा स्वागत पाएको र तुङदुङ्गे देवले साँबाहरूलाई आशिर्वाद दिएको मुन्धुमी कथन छ।

संस्कृतिविद् सोमप्रसाद खतिवडा अनुसार कोशी बराह क्षेत्रमा अर्थात् चौदण्डी इलाकामा सेन राजाहरूको दरवारका भग्नावशेष रहेको स्थलगत अध्ययनका आधारमा बताए। (Khatiwada,2013) पुरातत्व विभागबाट पनि यस सेन दरवार क्षेत्रको स्थलगत अनुसन्धान भएर लेख प्रकाशित भइसकेको छ। सोही क्षेत्रका दरवारका भग्नावशेषलाई आफ्ना पुर्खाका चिनो वा पैत्रिक स्थलका रूपमा सेन चबेगुले दावी गर्दछ। उक्त प्रमाण सेन चबेगु वंशावलीमा सचित्र प्रस्तुत गरिएको छ। (Sen Chobegu, 2007)

योङहाङ वंशावलीले पनि सेन चबेगु वंशावलीलाई पुष्टि हुने तथ्य उल्लेख गरेको छ। सेन वंश र बराह क्षेत्रबारे वंशावलीले जानकारी दिएको छ। सेन चबेगु र योङहाङ वंशावली दुवै वंशावलीले सेन वंशका चार भाइ मध्येबाट सेन चबेगु, योङहाङ, लिङदेन र साँबा लगायतका लिम्बू उद्विकास भएको बताएको छ। लिङदेन वंशावलीले पनि उक्त तथ्यलाई बल पुग्ने प्रमाणहरू प्रस्तुत गरेको छ। (Lingden, 2010)

यसरी वंशावली, इतिहास, अनसन्धान र मुन्धुमका आधारमा बराह क्षेत्र वा कोकोहा क्षेत्र साँबा जातिका पुर्खाको महत्वपूर्ण स्थल रहेको पुष्टि हुन्छ। उक्त स्थान नेपालको इतिहासमा ऐतिहासिक चौदण्डी क्षेत्रको रूपमा प्रसिद्ध छ। इतिहास अनुसार चौदण्डी र विजयपुर सेन वंशद्वारा शासित क्षेत्र हुन्। (Chemjong, 1974)

अतः साँबा जाति भित्र पर्ने फयङ साँबाले कोशी बराह क्षेत्रलाई पवित्र पंत्रिक तथा धार्मिक स्थलका रूपमा मान्दछन्।

# अध्याय २ -साहित्यिक पुनरावलोकन

पृथ्वीमा प्राणी जगतको विकासक्रम धेरै लामो छ। अहिले त्यता नलागेर हामी आधुनिक मानव जाति होमोसेपियन्सको उद्विकास पछि तिनीहरूको बसाइसराइबारे वैज्ञानिकहरूले गरेका अध्ययनतर्फ केन्द्रित होउँ। हालसम्म गरिएका बृहद खोज र अनसन्धानबाट प्राप्त प्रमाण र तथ्यले पृथ्वीमा मानव जातिको विकासक्रम र क्रमिक वितरणबारे सिद्धान्त निर्माण भएका छन्। अफ्रिका बाहिर नमूनाले मानिसका धेरै जिज्ञाशालाई शान्त पार्नेछन्।

## २.१ अफ्रिका बाहिर नमूना

अफ्रिका बाहिर' सिद्धान्तले आनुवंशिकी, भाषाविज्ञान र पुरातत्विक प्रमाणहरूका आधारमा आधुनिक मानव (होमोसेपियन्स) प्रजातिको उदय कसरी भयो र तिनीहरू कसरी विश्वभर वितरित र विकसित भए भन्ने व्याख्या  गर्दछ। (University of Cambridge, 2007) उक्त सिद्धान्त अनुसार सर्वप्रथम १ लाख ५० हजार वर्षपूर्व पूर्वी अफ्रिकामा आधुनिक मानिसका प्रजाति देखा परे। त्यहाँबाट मानवजाति अफ्रिकी महादेशको उत्तर, दक्षिण र केही पश्चिम क्षेत्रमा विस्तारित भए।

पूर्वी अफ्रिकाबाट विभिन्न समूहमा मानिस उत्तर र पश्चिम अफ्रिकातिर फैलिए। त्यहाँबाट तिनीहरू अफ्रिकाभर विस्तारित भए त्यसका साथसाथै संसारभर छरिए। फैलने क्रममा ८९,००० वर्ष अघिसम्ममा अफ्रिकाभित्रै फैलन समय लागे तापनि १ लाख वर्षपूर्व नै उनीहरू दक्षिणी चीन र ७५ हजार वर्षपूर्व भारत (जवालपुरम्) सम्म फैलन सफल भैसकेका थिए।




उक्त सिद्धान्तअनुसार प्रागैतिहासिक कालको होमोसेपियन्स आजभन्दा ८५ देखि ७५ हजार वर्षपूर्व उत्तरपूर्वी अफ्रिकाको इथियोपिया तथा एरिट्रियाबाट रक्तसागर पार गरेर अरब प्रायदिप आइपुगे। त्यहाँबाट उनीहरू अझ अघि बढे। उनीहरू पर्सियन खाडी पार गरेर इरान, पाकिस्तान र दक्षिण एशियामा फैलिए। तिनीहरू इन्डोनेशियासम्म फैलिए। त्यहाँबाट एक समूह पुनः फर्किएर आयो र दक्षिणी चीनमा फैलियो।

७५०००- ७०,००० वर्षअघि इण्डोनेसियाको तोबा ज्वालामुखी विस्फोट भइ पृथ्वीमा महाप्रलय भएको थियो। जसले मानिस सभ्यता नराम्ररी प्रभावित भयो। उक्त घटनाको करिब १ हजारवर्षपछि मात्र मानव जाति तङ्ग्रिन थाले। (University of Cambridge, 2007)

अफ्रिका बाहिर पूर्वी एशियामा फैलिएका मानिस इण्डोनेसियामा ७५,०००-७०,००० वर्षअघि उक्त तोबा ज्वालामुखी विस्फोटले उत्पन्न गराएको हिमयुगको अन्त्यपछि मात्र दक्षिण एशियातिर फैलिए। तिनीहरू चीनको महासागरीय तटबाट चीनको भित्री भूभागमा क्रमशः फैलिएर चीनको तिब्बतसम्म आइपुगे। करिब ७३०००-६५००० वर्ष

अघिको महाप्रलयपछि मानवजाति पुनःस्थापित हुँदै आए। (University of Cambridge, 2007)

आजभन्दा ६०,००० वर्षपूर्व मानवजातिको एक हुलले अफ्रिका महादेश छाडेको प्रमाण पाइन्छ। त्यो हुल पाकिस्तान र उत्तरपश्चिमी भारतीय भूभागमा आइपुग्यो। ५०,००० वर्षअघि मानिस उत्तरपश्चिम भारतबाट उत्तरपूर्वी भारत, बर्मा, थाइलैण्ड हुँदै अष्ट्रेलिया पुगे। आजभन्दा ४५०००-४०००० हजार वर्षपूर्व धेरै तरङ्गमा मानिसहरू फैलने क्रम जारी रह्यो। यही क्रममा चीनको किनाराबाट भित्री भूभागमा तथा जापानमा जनसंख्या फैलियो। भारतको दक्षिणी भूभागबाट उत्तरी भूभागमा जनसंख्या फैलियो। त्यहाँबाट बर्मा हुँदै नेपाल लगायत हिमाली तथा तिब्बती भूभागमा जनसंख्या फैलिएको थियो। (University of Cambridge, 2007)

यसरी 'अफ्रिका बाहिर' ढाँचाअनुसार होमोसेपियन्स अफ्रिकाबाट १००,००० देखि ७०,००० वर्षअघि संसारमा फैलिसकेका थिए। उत्तर पाषाण युग अर्थात् ईशापूर्व ४०,००० देखि ईशापूर्व १०,००० सम्मको (Upper Paleolithic 40,000 BC-10,000 BC) कालखण्डमा नियन्डरथल प्रजातिलाई मानवको पछिल्लो प्रजाति आधुनिक मानिस (Neolithic) होमोसेपियन्स (Homo Sapiens) ले विस्थापित गरिदियो। (University of Cambridge, 2007)

आजभन्दा ३५,००० वर्षअघि मानवजातिको एक अर्को समूहहरू रुस, मङ्गोलिया, चीन हुँदै बर्मा, कोरिया र जापानतिर बढ्यो। त्यसैबेला मङ्गोलियाबाट एक समूह भारतको सिन्ध घाँटी, काशी हुँदै दक्षिणतिर भारतको मध्यभागसम्म आइपुग्यो। त्यसपछि पुनः भारत, नेपालमा दुई दिशाबाट मानवजातिको आगमन भयो। एउटा पूर्वीमार्ग बर्मा, बङ्गलादेश भएर भारत तथा नेपालमा मानिसको आगमन सुरू भयो भने अर्को मार्ग पश्चिममार्ग इरान, पाकिस्तानबाट भारत, नेपालमा मानिस प्रजातिको आगमन सुरू भयो। (Jurmain, 2008)

उल्लिखित 'अफ्रिका बाहिर' सिद्धान्त विवरणबाट हाम्रो दिमागमा एउटा रेखाचित्र बन्दछ। मानिसको सांगपांग परिवहन कहाँ कहिले भयो भन्ने थाहा हुन्छ। मानिस त्यसबेला त्यसरी किन छरिए भन्ने कारण पनि वैज्ञानिकहरूले बताएका छन्। प्रमुख कारणहरूमा जनसंख्या वृद्धि भएपछि चलेको आपसी युद्ध, जलवायु परिवर्तन, प्राकृतिक प्रकोप जस्तै बाढी, सुख्खा, अनिकाल, महामारी आदि थिए। अतः सुरक्षित र उर्वर स्थानको खोजीमा मानिस अफ्रिकाबाट चारैदिशा फैलिएका हुन्। (University of Cambridge, 2007)

## २.२ मेसोपोटेमिया सभ्यता

प्राचीन सभ्यताभित्र प्रवेश नगरी मानिसको अतीत वा इतिहासलाई अवलोकन गर्न सक्दैनौँ। यद्यपि यो विषय वृहद भएकाले यसको सामान्य परिचय मात्र यहाँ दिइएको छ। लेखमा सान्दर्भिक तथ्यहरू मात्र छन्।

किरात इतिहासको जरो लामो छ यसले धेरै सभ्यताहरू छिचोल्दै आएको छ । किरात पुर्खा सुमेर, काशी, रुद्र, दास, असुरका पदचिन्ह मिश्रको सभ्यता, मेसोपोटेमियाको सभ्यता, बेबोलिनको सभ्यता, सिन्धुघाँटी हड़प्पा सभ्यता, वैदिक, उत्तरवैदिक सभ्यता तथा चीन सभ्यताभित्र भेटिन्छन्।

ईशापूर्व ६००० मा Tigris/ Euphrates नदीको घाँटीमा एउटा सभ्यताको विकास भयो, जसलाई मेसोपोटेमिया सभ्यता भनिन्छ । यो भूभाग हाल इराकमा पर्दछ । यो सभ्यतालाई सुमेरिया, बेबोलोनिया, असिरिया र चाल्डीयन चार भागमा बाँड्न सकिन्छ।

## २.३ सुमेरिया सभ्यता

प्राचीन कालमा फारसको खाडी Persian gulf को उत्तरी क्षेत्रलाई सुमेर वा सुमेरु क्षेत्र भनिन्थ्यो। Tigris/ Euphrates नदीले बगाएर

ल्याएको मलिलो माटोको कारण यो भूमि उब्जाउ थियो। त्यसकारण यो क्षेत्रमा विभिन्न जाति बस्न थाले। (Chemjong, 2003a)

यहाँ बस्नेमा प्रमुख सुमेरियन जाति थिए। ती सुमेरियन जाति को थिए भन्ने सवालमा विद्वानहरूको विभिन्न मत पाइन्छ। कसैले यिनीहरू चीनका बासिन्दा भनेका छन्। कसैले भारतबाट आएका द्रविड मानेका छन्। तर विद्वानकरूका मतमा ती जाति आर्य र सिमेटिक Semitic दुवै जाति होइनन्। (Chemjong, 2003a)

इतिहासकार चेमजोङले सुमेरलाई किरातका पुर्खा बताएका छन्। (Chemjong, 2003a) सांस्कृतिक विश्लेषण गर्दा सुमेर जाति मरेको मानिसको लाससितै मृतकलाई मनपर्ने सामग्री गाडिदिन्थे। (Kafle, 1983) अन्त्येष्टिका आधारमा समेत केलाउँदा ती सुमेर जाति किरात पूर्वज भएको थाहा हुन्छ।

## २.४ बेबोलिनिया सभ्यता

विश्वको इतिहास अनुसार ईशापूर्व २७५० मा बेबोलिनियालाई अक्कड जातिले विजय गरे। उनीहरूले सुमेर क्षेत्रलाई समेत आफ्नो क्षेत्रमा गाभे। त्यहाँ राजा सारगनले ईशापूर्व २७१७ सम्म शासन गरे र त्यसपछि नरमसिन राजा भए। (Kafle, 1983)

ईशापूर्व २२०० मा उक्त अक्कड राज्यमाथि Semetics को अर्को एक शाखा एमोराइटले अधीनमा लियो। उनीहरूले बेबिलोनलाई राजधानी बनाए। त्यसबेला समाजमा उच्च, मध्यम र दास गरी तीन वर्गका मानिस थिए। समाजमा स्त्री र पुरूषको समान स्थान थियो। (Kafle, 1983)

यिनीहरू लेख्दा दायाँबाट बायाँतिर लेख्दथे। त्यसबेला साहित्यको पनि विकास भएको थियो। त्यही कालमा 'गिलगमेस' महाकाव्यको रचना भयो। बेबिलोनका मानिसलाई त्यसबेला यजुर्वेद र स्वास्थ्य

विज्ञानको जानकारी थियो। वैद्य शुल्क लिएर उपचार गर्ने गर्दथे। उपचारका क्रममा उनीहरू जादु र टुनामुना समेत प्रयोग गर्ने गर्दथे। (Kafle, 1983)

## २.५ सिन्ध हड़प्पा सभ्यता

मानव जातिको बसाइँ सराइँ मनसुनी वायुको लहरजस्तै वर्षेनी विस्तारित भएको थियो। यही क्रममा एक मानव शाखा मध्यपपूर्वबाट मध्यएशिया हुँदै सिन्ध हड़प्पा, गंगा मैदान, भारत र हिमालयतिर बढेको प्रमाणहरूले बताउँछन्।

प्राचीन सिन्ध–हड़प्पा सभ्यता ईशापूर्व ३३०० देखि ईशापूर्व १७०० सम्म सिन्धुघाँटीदेखि विभिन्न स्थानमा फैलिएको थियो। त्यहाँ कृषि व्यवसाय प्रमुख थियो। मानिसहरू यसका अतिरिक्त विभिन्न व्यवसायमा आबद्ध थिए। त्यसबेला मानिसहरू कृषक, व्यापारी, श्रमिक, राजमिस्त्री, पुरोहित, सुरक्षाकर्मी, वास्तुकार, कुम्भकार, धातुकर्मी थिए। यसका साथै कोही जलहारी, सफाइ कर्मचारी, तान बुन्ने बुनकर, मूर्तिकार, रङ्ग साजसज्जा गर्ने कामदार, नाविक, शासक, चुरा बनाउने चुरौटे, शैल्य चिकित्सक, नर्तक, ईंटा बनाउने मजदूर थिए। (Kafle, 1983)

सिन्ध हड़प्पा क्षेत्रमा ईशापर्वू ३३०० देखि ईशापूर्व १७०० कालीन शिव, पशुपतिका चिन्ह फेला परेका छन्। स्वस्तिकाको आराधना गरिने गरिएका चिन्ह र प्रमाण उत्खननमा भेटिएका छन्। सिन्ध–हड़प्पा सभ्यतामा मानिस शिव, प्रकृति र मातृशक्तिका उपासक थिए। त्यसबेला प्रचलित पशुपति, साँढे, नाग, प्रजनन् शक्ति, पानी, रुख, पशुपंक्षी, स्वस्तिक चिन्ह आदिको उपासना गरिन्थ्यो। त्यसबेला यज्ञ र पशुबलिको प्रथा भएको प्रमाण भेटिएका छन्। (Kafle, 1983)

राज्यमा पुरोहितको विशेष भूमिका हुन्थ्यो। हड़प्पा सभ्यताका मानिस कर्मकाण्ड र अनुष्ठानमा विश्वास गर्ने गर्दथे। मानिस त्यसबेला काल्पनिक रुपमा पशु मिश्रित मानवको उपासना पनि गर्दथे। पशुपति मोहडाले सन्यासवाद वा समाधि वा योगको महत्वलाई दर्शाउँछ। (Kafle, 1983)

यस सभ्यताका मानिस मृत्युपछि पनि जीवन र पुनर्जन्ममा विश्वास गर्ने गर्दथे। त्यसैले मृत मानिसको चिहानमा मानिसलाई चाहिने वस्तु र प्रिय वस्तु पनि सँगै गाडी दिने गर्दथे। सिन्ध–हड़प्पेली मानिस अदृश्यशक्ति, भूतप्रेत, राक्षस वा त्यस्तै अहितकारी शक्तिको कल्पना गर्ने गर्दथे। हड़प्पा सभ्यतामा धार्मिक विविधता भए तापनि आपसमा सहिष्णुता थियो। यसैकारण यो सभ्यता विकसित अवस्थामा पुगेको इतिहासकारहरूको मत छ।

सिन्ध–हड़प्पासभ्यतामा शिव, पशुपति, शिवलिङ्ग, मातृशक्ति आदिको उपस्थिति देखिएकाले त्यहाँ किरात वंशको उपस्थिति रहेको सिद्ध हुन्छ।

सिन्ध हरप्पा क्षेत्रमा आर्यको आगमन ई.पू. १७००–ई.पू. १५०० मा मात्र भएको थियो। इण्डो–आर्यनले सर्वप्रथम पञ्जाब उपत्यका आक्रमण गरेको प्रमाण भेटिएको छ। सिन्धु हड़प्पाक्षेत्रमा आर्य प्रवेश भएपछि मात्र संस्कृत भाषा र साहित्यको विकास भयो। पछि सोही भाषामा वेद, मन्त्र आदि ई.पू. १५०० देखि ई.पू. ५०० सम्मको कालखण्डमा रचना भयो। यही वैदिक धर्मबाट कालान्तरमा सनातन र हिन्दु धर्ममा विकसित भयो। (Sanijit, 2011)

## २.६ चिनियाँ सभ्यता

इतिहासमा पाइए अनुसार भूमध्यसागरीय क्षेत्रमा ईशापूर्व ३३००–१२०० तिर फक्रेको कास्य युगको पतन विभिन्न कारणबाट भयो।

एकातिर बाढी, भूकम्प, जलवायु परिवर्तनले ल्याएको खडेरीजस्ता प्राकृतिक प्रकोपले सभ्यता प्रभावित भयो। अर्कातिर मानवसिर्जित अन्तरवर्गीय द्वन्द्व, व्यापार व्यवस्था सङ्कट, बाहिरी शक्तिको सामुन्द्रिक घुसपैठ तथा आक्रमण भए जसले सभ्यताको पतन गरायो। यसका साथै राजनीतिक तनाव पनि सभ्यताको पतनको प्रमुख कारण बन्यो। त्यसपछि त्यहाँका मानिस मलिलो जग्गाको खोजीमा विभिन्न दिशामा छरिए। (Mark, 2019)

चीनको हुवाङ–हो (Yellow River) नदीको माथिल्लो भूभागमा ई.पू. ३००० देखि ई.पू. २००० मा एउटा गतिलो सभ्यताको उदय भयो जो माजियाओ संस्कृति (Majiayao Culture) को नामले चिनिन्छ। उत्तरी हुवाङ–हो नदी क्षेत्र, पूर्वी गान्सु, र उत्तरी सिंचुवान क्षेत्रमा काँस युगीन (ई.पू. ३१००–ई.पू. २७००) ऐतिहासिक सामग्री उत्खननबाट प्राप्त भएका छन्। (Duan et al., 1998)

उत्खननबाट प्राप्त भाँडाकुँडा, सङ्ख, एवं लिखित प्रमाणका आधारमा भन्न सकिन्छ कि ई.पू. २१०० देखि ई.पू. १६०० अवधिमा चीनमा एक सभ्यता विकसित अवस्थामा थियो। (Sheth & Khushboo, 2017)

## २.७ काशी वंश खाम्बोङ्बा

काशी भनेको गंगा मैदान हो भन्ने धेरै मानिसको बुझाइ छ। कुरो सत्य हुँदाहुँदै पनि यो बुझाइ अपूर्ण छ।

प्राचीन काशी भनेका निकटपूर्वी (टर्की) निवासी जाति हुन् जसले बेबिलोन १६९५ देखि ईशापूर्व ११५५ सम्म कब्जा गऱ्यो। (Bryce, 2009) त्यहाँ यिनीहरूको सुमेर (सुमेर) सित रक्तमिश्रण भयो। (Pokhrel, 1998) सुमेर प्रभाविक किरात र काशी प्रभावित कश्यप, खस, शक आदि भए। यिनीहरू मध्य–एशिया (ताक्लामकान), भारतमा पुगेपछि त्यहाँ पनि

यिनीहरू बस्ने स्थानलाई काशी भनियो। यसकारण काशी भनेको काशी वंश बस्ने प्राचीन स्थान हुन्। ती प्राचीन काशी स्थल मेसोपोटेमिया (सुमेर), मध्यएशिया (ताक्लामकान) र भारत (गंगामैदान) मा भेटिन्छन्।

भारत नजिक भएकाले तथा हिन्दु सांस्कृतिक प्रभावले गर्दा हामी काशी भन्नाले केवल गंगा मैदानलाई बुझ्दछौँ। यद्यपि, काशी शब्द मेसोपोटेमियादेखि मध्यएसिया र गंगामैदानसम्म जोडिएको जातिबोधक, नश्लबोधक र संस्कृतिबोधक संज्ञा हो।

काशी वंश अर्थात् कश्यप गढन्त (Coinage) क्यास्पियन सागर आसपास बस्ने जाति भएको आधारमा बनेको हो। (Thulung, 1985) यो काशी संज्ञाले काशी वा कश्यप जातिको अघिल्लो भौगोलिक उपस्थिति क्यास्पियन सागरमा रहेको बताउँछ।

किरात इतिहास अनुसार एक थरीका काशी वंश किरात मेदिया (पर्सिया) देशको दक्षिणी भूभागमा बस्दथे। उनीहरू त्यहाँ प्राचीन मुनातेम्बेबाट आएका थिए। (Chemjong, 2003b) उनीहरूले आफू बसेको स्थानको नाम काशी राखे। उनीहरूको आफ्नै राजा हुन्थ्यो। ईशापूर्व १५७० मा यिनीहरूले प्राचीन बेबोलिन चढाइ गरे र राज्य विजय गरे । यी काशी वंशलाई ईशापूर्व १३०० मा पुनः दक्षिण–पूर्वका एलामहरूले हराए र त्यहाँबाट काशी वंशलाई विस्थापित गरिदिए। त्यसरी काशी स्थानबाट विस्थापित हुँदा काशी वंशका नामदिवेर नामका राजपुरोहित थिए। उनकै नेतृत्वमा काशी वंशका किरात पूर्व (अफगानिस्तान) तर्फ लागे।

ईशापूर्व १४०० तिर दक्षिण पर्सिया र ड्रभिडियन मुलुकबीच बन्दव्यापार चल्दथ्यो। उनीहरूले भारतवर्षको चर्चा सुनेका थिए। यिनीहरू वर्तमान अफगानिस्तानको गोलकु (काबुल) मा आएर बसे। त्यहाँ राजपुरोहित नामदिवेरको देहवसान भयो। उनले मृत्युअघि सबैलाई भेला गरी उनका दुई पुत्र राखेर अर्ती उपदेश दिए।

यो काशी वंशको एक हाँगो पछि सिन्धुघाँटी हुँदै गंगा मैदानमा गयो र त्यहाँ १२ पुस्ता शासन गऱ्यो। त्यहाँबाट एउटा हाँगाले बनारसमा सुकी गंगाजी नामक स्थानमा राज्य स्थापित गऱ्यो। हाल काशीथाङ्बा किरात लिम्बूका पुर्खा यिनै काशी वंशलाई मानिन्छन्। त्यहाँबाट एक हाँगो उत्तर हिमालयतर्फ लाग्यो। उनीहरू सिमाङगढ/ सिम्रौनगढ हाल नेपालको बारा जिल्लामा पर्ने सिमरामा आई बसे। त्यहाँ उनीहरूले तराई जंगल फाँडेर १२ गाउँ बसाले।

समय बित्दै जाँदा त्यहाँ तिनीहरूको जनसंख्या धेरै भयो र दाजुभाइ आपसमा मनमुटाव पनि बढ्यो। राजपुरोहितको अनुमतिले लौहचन्द र महाचन्द त्यहाँबाट छुट्टिए। महाचन्दले डोटी र लौहचन्दले प्युठानमा राज्य स्थापित गरे। ईशापूर्व ८०० मा यलम्बरले काठमाडौँ उपत्यकामा शासन गरे। खिम्चिले सुनकोशी नदी वरिपरिको जंगल फाँडी राज्य स्थापना गरे जुन क्षेत्रलाई त्यसबेला नामदोपालु र किरात प्रदेश भनियो।

## २.८ आख्यानात्मक र ऐतिहासिक आधार

इतिहासकारद्वय माबोहाङ र ढुङ्गेल (1990) अनुसार उहिल्यै हेमन्तभूमिमा स्वयम्भू मनु र माता सतरुपाका एक पुत्र मङ्गोल जन्मियो। मङ्गोलका (१) मुनाइङ्बा (२) थोबोइङ्बा र (३) योबोइङ्बा तीन छोराहरू भए। हेमन्तभूमि गर्मी भएकाले सन्तान फैलाउन उनीहरू अन्यत्र फैलिने निधो गरे। (Mabohang & Dhungel,1990)

जेठो मुनाइङ्बाको छोरो किरातइङ्बा परिवार त्यहाँबाट पश्चिमतर्फ हिन्द महासागरवारि हुँदै सीमान्तभूमिमा पुगेर बसोबास गऱ्यो। माइला भाइ थोबोइङ्बाका सन्तान उत्तरतर्फको हिमालपारि किपु रुस खण्डमा गयो, त्यहाँबाट चीन, ल्हासा, उत्तर मङ्गोलियातर्फ फैलिएर बस्यो। कालान्तरमा माइला थोबोइङ्बाका सन्तान चीना, चावा, तुक्पा र भोटिया भए। उता कान्छा योबोइङ्बाका सन्तान भने दक्षिणतर्फ

ज्वालामुखी पर्वत पार गर्दै दक्षिण मङ्गोलिया, जापान, श्याम, बर्मामा कोचीन जाति भइ दक्षिणपूर्व दिशातर्फ फैलिए। (Mabohang & Dhungel,1990)

माबोहाङ र ढुङ्गेल (1990) अनुसार सीमान्तभूमिमा छुट्टिएर बसेका मङ्गोलका नाति, मुनाइङ्बाका छोरा किरातइङ्बाका १० भाइ छोरा भए। ती दश भाइ छोराहरू- याक्तुम्बा, अप्लिवा, याक्खाबा, लुङफेवा, याङफेवा, सुहाचेप्पा, गुरुप्पा, मगप्पा, थोक्लेप्पा र थाङदावा हुन्।

समय बित्दै जाँदा यलम्बरको पालामा यिनीहरूको कुल फुट हुने समय आयो। कुल फुट हुने क्रममा याक्तुम्बाका सन्तानबाट याक्तुम्बा, अप्लिवाका सन्तानबाट अठपरे राई, याक्खाबाका सन्तानबाट याक्खा, लुङफेवाका सन्तानबाट लहरूङ, याङफेवाका सन्तानबाट याम्फू, सुहाचेप्पाका सन्तानबाट सुनुवार, हायु र चेपाङ उद्विकास भए। यसैगरी गुरुप्पाका सन्तानबाट गुरूङ, मगप्पाका सन्तानबाट मगर, थोक्लेप्पाका सन्तानबाट थाकाल वा थोकल (थकाली) र थाङदावाका सन्तानबाट थारु र दनुवार आदि उद्विकास भए। (Mabohang & Dhungel,1990)

छोटकरीमा भन्नुपर्दा, किरात पुर्खा अफ्रिकाबाट मेसोपोटेमिया हुँदै पूर्व सरेका हुन्। यही क्रममा मुन्धुमको सृष्टि वा रचना ग्रीसबाट आरम्भ भएको र मध्यएसिया, चीनमा यो विकसित भएको विश्लेषण गर्न सकिन्छ। किरात पुर्खाको केही हाँगा चीनमा पुग्यो। उनीहरूले त्यहाँ पुगेर आफ्ना पुर्खास्थल मुनातेम्बे सम्झिए, जुन किरात मुन्धुममा वर्णित छ। (Chemjong, 2003a; 2003b)

मुन्धुममा वर्णित पुराकथामा जुन सुन, चाँदीको मानिसको कथा छ, त्यो ग्रिसेली मिथकमा समेत मिलेकाले मुन्धुम र ग्रिसेली मिथक तुलनीय छन्। सुन, चाँदि तथा घटनाका प्रतीक र विम्बहरू लक्षार्थ हुन्। जेहोस्, मुन्धुममा मानव रचना सम्बन्धी पुराकथा र ग्रिसेली मिथक तुलनीय र सम्बन्धित देखिन्छन्। (Subba, 2022)

मुन्धुममा चीन (तिब्बत सहित), सप्तसिन्धु, गङ्गामैदान, र किरात लिम्बुवानका विभिन्न स्थलहरूका प्रभाव परेका छन्। अर्कातिर, आदिवासी किरात मुन्धुम साहित्यलाई संस्कृत साहित्यले ब्यापक रूपमा अनुवाद गरेर आफ्नो साहित्यिक ग्रन्थ बनाए। (Kalyanaraman, 2019) जेहोस्, किरात भाषा, मिथक र मुन्धुमले संस्कृत साहित्यलाई गतिलो टेवा दिएको छ।

नवौं-दशौं शताब्दीतिर मुन्धुमको लेखन राजा सिरिजङ्गाको पालामा भएको किरात इतिहासले बताउँछ। किरात पुराकथाको गहिराइ ग्रिससम्म गहिरो छ। बहुसङ्ख्यक मुन्धुम बाह्रौँदेखि अठारौँ शताब्दीमा रचना भयो। धार्मिक तथा साहित्यिक रचना आदिभौतिक काल अर्थात् बाह्रौंदेखि अठारौं शताब्दीमा भएको समाजशास्त्रीय मत छ। अतः किरात लिम्बू मुन्धुम साहित्यको रचना पनि त्यही कालमा बढी मात्रामा भएको मान्न सकिन्छ।

किरात जाति किरात लिम्बुवान राज्यमा स्थापित भएपछि मुन्धुममा स्थानीयताको प्रभाव पर्न गयो। अहिले मुन्धुममा स्थानीयताको रंग, गंध, रूप र स्वर पाइन्छन्। किरात लिम्बूका विभिन्न थर वा उपथरका उद्भवस्थललाई मुन्धुमले उक्त जातिको मुनातेम्बे कहेको पाइन्छ। त्यसबाट मानव विकासक्रमको वैज्ञानिक विश्लेषणमा भ्रम सिर्जना भएको हो।

यद्यपि, किरात लिम्बूमा परम्परागत रुपमा बोन दर्शनको प्रभाव थियो र छ। बोनले जीववाद र आत्मवाद मान्दछ। जीववादी दृष्टिद्वारा हरेक स्थानीय प्राकृतिक वस्तु हिमाल, पहाड, ढुङ्गा, माटोमा आत्मा, पितृ, देवता देखिन्छन्। यही दर्शनलाई आत्मवादी फेदाङ्बा/मा, साँबा, धामीझाक्रीले स्थापित गरिदिएका हुन्।

यसबाट के थाहा हुन्छ भने शिवलाई थेबा, तागेरा निङ्वाभु माङ वा कुलगुरू मान्ने किरात प्राचीन कालदेखि जीववाद र आत्मवादमा

आधारित बोन धर्मबाट प्रभावित थिए जुन हालसम्म निरन्तर चलेको पाइन्छ।

## २.९ भाषाशास्त्रीय पृष्ठभूमि

प्राचीन नेपालमा निग्रो जाति र तिनका भाषा नै पहिलो भाषाको रुपमा रहेको भाषाशास्त्री विश्वास गर्दछन्। (UpadhyayRegmi, 1990) उनीहरूलाई कालान्तरमा द्रविड भाषीले विस्थापित गरिदिए। (Logan, 1853)

एक दिन ती द्रविड भाषीलाई पनि अस्ट्रोएसियन भाषीले सीमान्तकृत पारिदिए। (UpadhyayRegmi, 1990) यसको अर्थ आरम्भमा द्रविड र अस्ट्रोएसियाली परिवारका भाषा बोल्ने प्राचीन आदिवासी नेपालमा बसोबास गर्दथे।

कालान्तरमा भोटबर्मेली भाषा परिवारले नेपालमा बोलिने द्रविड, अस्ट्रोएसियाली भाषालाई पुनः विस्थापित गरिदियो। चाखलाग्दो कुरो के छ भने हाल भोटबर्मेली भाषा बोल्ने किरात मङ्गोल यसअघि नेपालमा बोलिने द्रविड, अस्ट्रोएसियाली भाषा बोल्ने गर्दथे। (Logan, 1853; UpadhyayRegmi, 1990) नेपालका किरात (खाम्बोङ्बा) जातिमा मंगोल (ताङ्साङबा) र भोटेली चिनिया (मुनाफेन) को अधिक मिश्रण भएपछि भोटबर्मेली भाषा र संस्कृतिको प्रभाव पर्न गयो।

चीन, तिब्बतबाट बहुल संख्यामा भोटबर्मेली भाषीको प्रवेशपछि उनीहरूले प्रयोग गर्ने भाषाले अघिल्लो भाषालमई विस्थापित गरिदियो। फलस्वरुप द्रविड, अस्ट्रोसियाली भाषा लगायतका प्राचीन आदिवासी भाषाहरू नेपाली भूमिबाट क्रमसः लुप्त हुँदै गए।

नेपाल एकिरण भएपछि भारोपेली भाषा परिवारले भोटबर्मेली भाषा परिवारलाई पनि क्रमसः विस्थापित गरिदियो। हाल भोटबर्मेली भाषा परिवारको स्थिति पनि सीमान्तकृत बन्दै गएको छ।

भाषाशास्त्रीले खस भाषालाई आर्यभारतीय भाषा अन्तर्गत वर्गिकृत गरेका छन्। उनीहरूले खस भाषालाई संस्कृतबाट विकसित भएको मानेका छन्। यद्यपि, संस्कृत भाषा विकास हुनभन्दा अघि सप्तसिन्ध क्षेत्रमा बसोबास गर्ने किरात र खस भ्राता हुन्। यिनीहरूको वासस्थल क्षेत्र समीप थिए। सप्तसिन्धमा पुग्दा उनीहरू द्रविड, अस्ट्रोसियाली भाषा बोल्दथे भन्ने मानवशास्त्रीय मत छ। यस आधारमा आदिवासी खस भाषा द्रविड, प्राकृत भाषाबाट विकसित भएको मान्न सकिने भाषाशास्त्रीय आधार छन्।

खस भाषाका जननी संस्कृत भाषा भन्ने जुन भ्रम छ त्यो चिर्न आवश्यक छ। कारण, संस्कृत शब्द सम र कृत को योगले बनेको छ जसको अर्थ विभिन्न भाषाहरू पकाएर बनाइएको  समृद्ध भाषा हो। (Pandian, 2019) संस्कृत भाषामा साहित्य लेखन परम्परा वैदिक कालमा आरम्भ भयो। यसले औपचारिक लेखन तथा दरवारी बोलिचालिका भाषाको रूपमा कुलीन वर्गमा मान्यता पायो। फलस्वरूप प्राचीनकालदेखि जनस्तरमा बोलिचालिमा रहेका द्रविड, प्राकृत तथा आदिवासी भाषालाई संस्कृत भाषाले विस्थापित गर्न खोज्यो।

संस्कृतलाई सबै भाषाकी जननी भनेर जुन पगरी भिराइएको छ त्यो मान्न भाषाशास्त्री तयार छैनन्। भाषाशास्त्रीहरू संस्कृत भाषालाई विभिन्न भाषाको शब्दभण्डार मान्दछन् जहाँ द्रविड, प्राकृत तथा आदिवासी शब्दहरूको प्राचुर्यता छ। (Pandian, 2019) यस आधारमा किरात भ्राता खस जातिका खस भाषा संस्कृतबाट पछि प्रभावित मूलतः रैथाने भाषा हुनुपर्दछ। यसमा थप अध्ययनको आवश्यकता छ।

## २.१० किरात इतिहासको रूपरेखा

किरात भूमिलाई इतिहासमा किरात देश भनी सम्बोधन गरिएको छ। (Chemjong, 2003c) यसको पृष्ठभूमि हेरौँ। ईसापूर्व ४००० तिर

इजिप्टका राजा स्नेफेरुले आफ्नो देशमा पहिलो पिरामिड बनाए। त्यसैबेला पर्सियन खाडीको उत्तरी मैदान (हालको इराक/ इरान) मा दुई खालका सभ्य जाति बसोबास गर्दथे। उत्तरी मैदानमा बस्नेलाई अकादवंश (अक्कड) र दक्षिणी मैदानमा बस्ने जातिलाई सौमरवंश (सुमेर) भनिन्थ्यो। (Chemjong, 2003c)

यिनीहरूको आ–आफ्नो नगर थियो, राजा थिए। सौमर जातिलाई उसबेला मङ्गोल जाति पनि भनिन्थ्यो। यिनीहरू नदीमा बाँध बाँधेर सिँचाइ गरी खेतीपाती गर्ने गर्दथे। यी जातिले लिपिको पनि विकास गरेका थिए। उनीहरू ढुङ्गालाई उभ्याएर शिलालेखमा अक्षर कुँदेर सूचना जारी गर्ने गर्दथे। (Chemjong, 2003c)

सौमर जाति र अक्कड जाति आपसमा लडाइँ झगडा गरिरहन्थे। लडाइँमा हारेपछि सुमेर जाति पराजित दास बनेर बस्नुभन्दा अर्कै भूभागमा सर्दथे। यसै क्रममा सौमर/ मङ्गोल को एक ठूलो हाँगो सर्दै जाँदा चीनमा पुग्यो र क्राइष्टपूर्व ३००० मा एक सबल चीन राज्यको स्थापना गऱ्यो। सौमर/ मङ्गोलको अर्को हाँगो पनि त्यहाँबाट छुट्टिएर काबुल, पञ्जाब हुँदै गङ्गामैदानमा पुग्यो। त्यो समूह काशी गङ्गामा कैयौँ पुस्ता बसोबास गऱ्यो। यिनै सौमर/ मङ्गोललाई पछि आर्यले किरात नामले सम्बोधन गरे। (Chemjong, 2003c)

अफगानिस्तानका कूर्द, किरात र खस एकै वंशका थिए। (Chemjong, 2003a) एक किरात किंवदन्ती अनुसार सौमर वंश काबुलमा आइपुगे र बसोबास गर्न थाले। त्यसबेला यिनीहरू हिन्दु वा मुसलमान धर्म मान्दैनथे। सौमर हुद्दाको जेठो भाइको नाम लाले हाङ थियो। दक्षिणमा गङ्गामैदानतिर गएर उक्त स्थान बस्नयोग्य छ छैन बुझेर आउँछु भनेर ऊ त्यसतर्फ झऱ्यो। (Chemjong, 2003a)

अरुलाई काबुलमै छाडेर जेठो भाइ लाले हाङ गङ्गामैदान पुगेर हेर्दै बुझ्दै जाँदा उक्त स्थान बस्न उपयुक्त लाग्यो। ऊ त्यहीँ बस्न थाल्यो।

कालान्तरमा उसको समुहले गङ्गामैदानमा जमेर राज्य गऱ्यो तर उनीहरू कसैले काबुल फर्केर काबुलमा छुटेका आफ्ना परिवारका वंशलाई बोलाएनन्। गङ्गामैदानमा कैयौँ पुस्ता बसेपछि तिनीहरू हिमाली भूभाग नेपालतर्फ लागे। उनीहरू कालान्तरमा हिन्दु, खस, गोर्खा भए। (Chemjong, 2003a)

यता काबुलमा बस्ने सौमर वंश कमजोर हुँदै गए । यिनीहरूलाई पठानले विजय गरे र मुसलमान बनाए । हाल यनीहरू हजारे नामले अफगानिस्तानमा चिनिन्छन्। उनीहरूले गोर्खालीलाई भेट्दा काकाजी वा चाचाजी भनेर सम्बोधन गर्ने गर्दछन्। (Chemjong, 2003c)

यसबाट किरात र खस मात्र हैन अफगानिस्तानमा बसोबास गर्ने हजारेबीच रक्तगत–अनन्या रहेको खुल्दछ। किरातको ससी मुन्धुम अनुसार सौमर/ किरात तीन दिशाबाट हुद्दाका हुद्दा भएर नेपाल आए। यिनीहरूले हिमालय, पहाड र तराईमा आफ्नो बासस्थान बनाए। पश्चिम दिशाबाट आउने काशी वंश/ खाम्बोङ्बा/ खाम्बोज भए। पूर्वबाट आउने ताईस्यान वंश/ ताङसाङथाज/ ताङसाङ्बाज/ मङ्गोल भए। उत्तरबाट आउने ल्हासावंश/ मुनाफेन/ चिनियाँली/ भोटेली भए। (Chemjong, 2003c)

यीमध्ये काशी वंश खाम्बोङ्बा किरात सबभन्दा पहिले हिमाली भूभाग र नेपाल आइपुगेका हुन्। उनीहरू द्वापर युगपूर्व आएका थिए। यिनीहरूले किरात देशको स्थापना गरेको तथ्य महाभारतमा उल्लिखित छ। त्यसपछि नेपालमा क्रमशः ताईस्यान वंश र ल्हासा वंशको प्रवेश भयो। यिनीहरूको किरात वंशसित रक्तमिश्रण भयो। उल्लिखित कतिपय किरात खसमा सम्मिलित भए। यिनीहरू नेपालमा पश्चिम दिशाबाट पसेका काशीगोत्रे हुन्। (Chemjong, 2003c)

खाम्बोङ्बा किरातीले किरात देश स्थापना गरे। यिनीहरूलाई भुइँफुट्टा पनि भनिन्छ। छैटौँ शताब्दीमा किरात देश विघटन भएर दश लिम्बुवान गठन भयो। लिम्बुवान गठनताका त्यहाँ ल्हासागोत्रे प्रवेश

भइसकेको थियो। यसकारण ल्हासागोत्रेको प्रवेशपछि दश लिम्बुवान आरम्भ भएको इतिहासले बताउँछ। सातौँ सताब्दीमा ल्हासागोत्रे किरात लिम्बू सुनकोशी पूर्व, टिस्टा पश्चिम, दक्षिण मोरङ कन्काईसम्म फैलिसकेका थिए। (Chemjong, 1974, 2003c)

सातौँ शताब्दीमा नेपाल आक्रमण गर्ने तिब्बतेली किरात माराङहाङले चालेको काशीगोत्रे र ल्हासागोत्रे युद्ध रणनीतिले किरात लिम्बू समाजमा फाटो ल्यायो। माराङहाङलाई किरात इतिहासमा कतै मावाराङ पनि भनिन्छ जुन नामबाट हालको मोरङ नाम रहेको थियो। उनैका पालामा रङ्गोली अर्थात् हालको रंगेली नाम रहेको किरात इतिहासले बताउँछ। उनका पुर्खा काठमाडौँबाट विस्थापित किरात राजा थिए। यिनै किराती राजाका दरसन्तान माराङहाङ नेपालमा बौद्ध धर्म फैलाउने निँहुले भेदिया खटाएर लिम्बुवानभित्र ल्हासागोत्रेलाई भित्रभित्रै संगठित पारे। (Chemjong, 1974; 2003c)

माराङहाङले अंशुबर्माको मृत्यु (ई.स. ६४०) भएपछि सातौ शताब्दीमा तिब्बती राजा स्रङचङ गम्पोको समर्थनमा किरात देश विजय गरेका थिए। उनले तिब्बती सैनिक बलको सहयोगमा किरात लिम्बुवान चढाइ गरेका थिए। त्यसबेला किरात लिम्बुवानमा बस्ने ल्हासागोत्रे लिम्बूहरू तिब्बती आक्रमणकारी पक्षतिर लागेर किराती शासकलाई पराजित तुल्याइदिए। फलस्वरुप आपुङ्गी राजाहरू भोटेली शत्रुको शरणमा पर्नु पऱ्यो। (Chemjong, 2003c)

माराङहाङले राज्यविस्तार दक्षिणमा मिथिला, पूर्वमा सोङडोकपु पहाड, पश्चिममा हथौडा पहाड र उत्तरमा खम्पाजोङसम्म फैलाए। उनले खाम्पाजोङमुनि रादोकलाई गृष्मकालीन दरवार र सानगढी (साँगुरी धनकुटा) लाई शिशिरकालीन राजधानी बनाए। उनले राज्यमा बौद्ध धर्मको प्रचारप्रसार गरे। (Chemjong, 1974, 2003c) यसरी किरात इतिहासमा सातौँ शताब्दीमा काशीगोत्रे र ल्हासागोत्रे पहिचानको झण्डा

भित्रभित्रै उचालेर किरात लिम्बूबीच पहिलोपटक रणनीतिक द्वन्द्व चलेको थियो।

## २.११ वंशावली र पुरातत्व

हाङसेनलुङ धनकुटा जिल्लामा पर्ने एक ऐतिहासिक किरात स्थल हो। यो स्थानमा छैटौँ शताब्दीमा दश लिम्बुवान गठनपछि दश सरदारहरू भेला भए। सेन मकवान वंशका दश सरदारहरूले लिम्बुवान गठन गरेर दश थुम विभक्त गरे। प्रत्येक थुममा सरदारहरू राजा छानिए। उक्त स्थलमा ढुङ्गा गाडेर चिनो राखे। त्यसपछि उनीहरू आ-आफ्नो थुमतर्फ लागे। जसलाई हामी हाङसेनलुङ भन्दछौं। (Chemjong, 2003a; Tumbahang, 2011)

किरात इतिहास अनुसार चौधौँ शताब्दीमा चौदण्डी चतराका सेन वंशका राजकुमारहरू पहाड उक्लने क्रममा त्यहाँ आइपुगे। यो धनकुटाको बोधे गाउँमा पर्ने तेलिया खोला, छरुवा खोला र तम्बर नदीको सङ्गमस्थलमा छ। उनीहरू त्यहाँ केही वर्ष बसेर फेरि उकालो लागे। उनीहरूले उक्त ठाउँ छाड्ने बेलामा चार भाइले एकेक ढुङ्गा हाङसेनलुङ चिनो गाडेर गए।

किरात भाषामा हाङ अर्थ राजा, सेन अर्थ वंश र लुङ अर्थ ढुङ्गा हो। स्मरण रहोस्, अघि छैटौँ शताब्दीमा दश लिम्बुवान गठन गर्दा भेला भएर ढुँगा चिनो राख्ने पनि सेन मकवान वंशका किरात नै थिए।

धनकुटा जिल्ला बोधे गाउँस्थित उक्त हाङसेनलुङलाई किरात लिम्बू जातिका विभिन्न वंशावलीले आफ्नो पुर्खाका महत्वपूर्ण अनुचिन्ह मानेका छन्। किरात सेनेहाङ लिम्बू (चबेगु) वंशावली र योङहाङ वंशावलीले यो स्थानलाई आफ्ना पैत्रिक चिन्हस्थल दाबी गरेका छन्। योङहाङ वंशावली अनुसार त्यहाँ चार भाइ सेनेहाङले चारढुङ्गा गाडेर छुट्टिएका थिए। वंशावलीअनुसार उनीहरू त्यहाँबाट छुट्टिएर एकभाइ

पोक्लाबाङ, एकभाइ याङरुप र दुईभाइ तम्बरखोला, मेवाखोला लागे। उक्त हाङसेनलुङ संज्ञामा सेन नाम पनि जोडिएको हुँदा सेनेहाङ चारभाइले ढुङ्गा गाडेको तथ्यलाई समर्थन जनाउँछ। (Yonghang, 2011)

सेनवंशी समुदाय किरात सेनेहाङ थेगिम लिम्बू वंशावली तथा इतिहास (वि.सं. २०६४) ले आफ्ना पुर्खा सेनवंशी अभिसेन (उदीमसेन) को इतिहास पहिल्याएको छ। अभिसेन पछि क्रमशः पदमसेन, लारासेन, फोरासेन र चुडामणिका नाम वंशावलीमा उल्लिखित छन्। (SenChobegu, 2007, p228)

सेन चबेगु वंशावली अनुसार चुडामणि सेनका चार सन्तान सेनेहाङ्ग, साँबासेन (साँबासेरेङ), सुरदसेन र मणिसेन थिए। ती चारजना चौदण्डी कोशीबराह क्षेत्रबाट साँगुरी नाघेर धनकुटा जिल्लाको बोधे गाउँ वडा न. ५ तम्बर खोलाको किनार सधाममा गएर बसे। त्यहाँ बसेर छुट्टिने बेलामा सम्झनास्वरुप चार भाइले एक एक ढुङ्गा गाडेर छुट्टिए। (SenChobegu, 2007)

हाल त्यहाँ चारवटा ढुङ्गा गाडिएको स्थानलाई हाङसेनलुङटार वा हाङसेन मोरङटार पनि भनिन्छ। जसमध्ये तीनओटा ढुङ्गा विधर्मीहरूद्वारा वि.सं. २०१२ सालमा नष्ट गरियो भन्ने बुढापाकाले भनाइ किरात सेन चबेगु लिम्बू वंशावलीमा उल्लिखित छ। (Sen Chobegu, 2007)

योङहाङ वंशावलीअनुसार चार भाइ सेनेहाङ वि.सं. १३८८ मा साँगुरी भञ्ज्याङ नाघे। त्यहाँबाट उनीहरू भित्री पहाड सङ्गमटार पुगेर बसोबास गरेका थिए। (Yonghang, 2011)

योङहाङ तथा सेन चबेगु वंशावली अनुसार सेनवंशी चार भाइका पूर्वज अभि सेन सिमाङगढ (सिम्रौनगढ) मा थिए। उनका सन्तान चौदण्डी/ चतरा बसे। त्यहाँबाट उनीहरू साँगुरी नाघेर सङ्गमटार पुगेका थिए। एक भाइ धनकुटा हुँदै तम्बरखोलाबाट अलग्गिएर याङरुप

पाँचथरतर्फ लागे। पछि उनीहरूबाट योङहाङ, थेगिम विकसित भए। यसरी सेनेहाङका पाँचथर याङरुपमा छुट्टिएका दरसन्तान योङहाङ र थेगिम थरमा उद्‌विकासित भए। वंशावलीमा उनीहरूका पूर्वज राई पदवीधारी थिए। (Yonghang, 2011)

यसरी सेन र राईको पदवीधारी पुर्वजका सन्तान याङरुपमा योङहाङ, थेगिम र लिङदेन थरमा उद्विकास भएका हुन्। (Yonghang, 2011; SenChobegu, 2007) बाँकी दुई भाइ सेनेहाङमा एकजना मेवाखोला र अर्का भाइ तम्बरखोला लागे। उनीहरूबाट साँबालगायत अन्य लिम्बू विकसित भए।

हाङसेनलुङबारे चबेगु समुदायले वंशावलीमार्फत् चासो र चिन्ता व्यक्त गरेको छ । यसका चार ढुङ्गामध्ये तीनवटालाई कसले किन कहिले नष्ट गऱ्यो भन्ने चिन्ता प्रकट गरिएको छ। हुन पनि यो किरात–सेन–लिम्बू धरोहर हो। यो केवल सेनेहाङ तथा दश सरदारका दरसन्तानका मात्र सरोकारको विषय होइन। यो सबै नेपालीको ऐतिहासिक गाथा र नेपाली सम्पदा हो। ऐतिहासिक सम्पदाको संरक्षण गर्नु हामी सबैको दायित्व र चुनौति हो।

कतिपय पाठकलाई हाङसेनलुङ केवल लिम्बुवान गठन गर्ने सेन मकवान दश सरदारको अनुचिन्ह भनी इतिहासमा पढेको बताउँछन्। फलस्वरुप अन्य याक्थुङ वंशावलीमा यसको चर्चा आउँदा शङ्का उपशङ्का गर्ने गर्दछन्। भौगोलिक अवस्थिति मुल्याङ्कन गर्दा उक्त स्थान पहाड, मदेश प्रवेश गर्ने एक नाका थियो। मदेशबाट पहाड उक्लँदा देखिने शीतल स्थान पनि हो। यो स्थान तीन नदीको त्रिवेणी स्थल भएकोले प्राकृतिक रुपमा सुन्दर पनि छ।

भौगोलिक तथा रणनीतिक दृष्टिले महत्वपूर्ण स्थललाई विभिन्न कालखण्डमा महत्वपूर्ण ऐतिहासिक घटनाहरूले समेटेका छन्। इतिहासमा कुनै एक घटना घटेपछि अर्को महत्वपूर्ण घटना सोही स्थानमा

भएगरेका अन्य धेरै दृष्टान्त पाइन्छन्। अतः हाङसेनलुङलाई किरात सेन र दस लिम्बुवानका नेताहरूले विभिन्न समयमा आएर चिन्ह छाडेका हुन्। हाङसेनलुङ शब्दमा रहेको सेन शब्दले सेनसित किरात जाति र सभ्यतालई जोडिदिएको छ।

कोशीबराह क्षेत्र चतरामाथि जंगलमा रहेको सेन दरबारको भग्नावशेषलाई आफ्ना पुर्खाहरूको दरबार भएको किरात सेन चबेगु लिम्बू वंशावलीले जनाएको छ। (SenChobegu, 2007) जुन सान्दर्भिक देखिन्छ।

पुरातात्विक प्रमाणसम्बन्धमा संस्कृतिविद् सोमप्रसाद खतिवडा (S. N. Khatiwada, Personal communication, Oct 16, 2019) अनुसार चतरामाथि वयरवन जंगलमा सेन राजाहरूको लालकोट रङ्गमहलको अवशेष पाइन्छ। त्यहाँ सेनहरूको सैनिक भएको चिन्ह फेला नपरे तापनि उनीहरूको धनसम्पत्ति लुकाउने कक्ष तथा वासस्थल भेटिएको उनको भनाइ छ।

अतः कोशी बराह क्षेत्र तथा चौदण्डि चतरा एवं हाङसेनलुङ किरात–सेन–साँबा इतिहास र सभ्यतासित गाँसिएको ऐतिहासिक क्षेत्र हो। जसको संरक्षण र थप अध्ययन हुन जरूरी छ।

## २.१२ किरात

किरातको शाब्दिक अर्थ समूहगत रुपमा गढ बनाएर बस्ने जाति हो। संगठित भएर बस्ने मानिसका रुपमा चिनिएका जनसमूह त्यसबेला किरात नामले चिनिएका हुन्। (The New Biblical Atlas and Scripture Gazetteer, 1860)

किरात आख्यान अनुसार किराती 'कि–रा–वा' अर्थात् सिंह, बाघ जस्ता शक्तिशाली जीव हुन्। हुन पनि 'मोङ्' को अर्थ जङ्गली राजा सिंह हो, जसबाट मङ्गोल बनेको छ। (Thulung, 1985) भाषाशास्त्री बालकृष्ण

पोखरेल अनुसार किरातका पूर्वजले यही सिंह प्रभाव लिबिया, लेबनानबाट आउँदा ल्याएका थिए। (Pokhrel, 1998)

माथिका भनाइबाट किरात समुदाय सिंह आस्था भएका जाति हुन् भन्ने थाहा लाग्दछ। किरात इतिहास अध्ययन गर्दा यी जाति अरुसित लड्ने, भिड्ने, राज्य हात पार्ने जाति हुन्। इतिहासमा उल्लिखित घटनाक्रमले उनीहरू युद्धप्रेमी भएको वा सिंह आस्था रहेको पुष्टि हुन्छ।

लामो कालखण्ड पार गर्दै जाँदा किरात संज्ञाको अर्थमा ब्यापकता आयो। हुन त यो नाम मौलिक भए पनि अहिले समुदायभित्रै कतिपयलाई नौलो लाग्दछ। माथि उल्लेख भएको किरात खाम्बोङ्बा जातिमा ताङसाङ्बा मंगोल र मुनाफेन भोटेली चिनियालीबीच मिश्रण हुँदा उत्पन्न सांस्कृतिक प्रभावले गर्दा सो स्थिति उत्पन्न भएको सहज अनुमान गर्न सकिन्छ। त्यसैले भोटबर्मेली भाषामा गाइएको वा लेखिएको गीत वा मुन्धुममा किरात शब्द उल्लेख नभएको हो। संस्कृत साहित्यमा किरात शब्दलाई आदिवासी जातिका रूपमा उल्लेख पाइन्छ। हाल यस शब्दले जाति वा वंश जनाए पनि यसभित्र राष्ट्रियता, संस्कृति र सभ्यता लुकेको छ।

लिम्बू जातिले गैरलिम्बूलाई आफ्नो परिचय दिँदा आफूलाई लिम्बू बताउँछन् तर समुदायभित्रै परिचय गर्दा आफूलाई याक्थुङ बताउँछन्।

## २.१३ याक्थुङ

याक्थुङ भित्रीया वा इमिक शब्द हो। यसको शब्दार्थ पनि किरात शब्दसंगै मिल्दोजुल्दो छ। याक्थुङ शब्द भोट–बर्मेली भाषा परिवारमा व्युत्पन्न भएको शब्द हो।

'यक' भनेको लिम्बू भाषामा गढ हो। थुम, थुम्बा भनेको बस्ने ठाउँ, वीर मान्छे हो। त्यसैले याक्थुङ शब्दले समूहगत रुपमा कुनै गढमा बस्ने

वीर जाति वा पुरुष भएको समूह, वंश, जातिलाई जनाउँछ। यसकारण शब्दार्थका आधारमा किरात र याक्थुङ पर्यायवाची शब्द हुन्।

'याक्थुङ' शब्दको शाब्दिक अर्थ र 'किरात' शब्दको अर्थबीच समानता पाइन्छन्। जसरी किरात शब्द गढसँग सम्बन्धित छ उसैगरी 'याक्थुङ्बा' शब्द 'यक्' र 'थुम्बा' दुई शब्दको योगले बनेको छ। 'यक' भन्नाले गढ, बस्ती, भूमि, राज्य बुझिन्छ भने 'थुम्बा', 'थुम' भनेको वीर, स्थान हो। यसर्थ यी दुईको मिश्रित शब्द याक्थुङले कुनै गढ वा बस्ती वा निवासी, वीर, राजा जनाउँछ।

लिम्बू समुदायभित्र बोलीचालीमा प्रयोग गरिने जातिबोधक संज्ञा 'याक्थुङ' हो। पुरूषलाई 'याक्थुङ्बा' र महिलालाई 'याक्थुङ्मा' भनिन्छ। लेखापढीमा 'किरात' र 'लिम्बू' शब्द बढी प्रयोग गरिन्छन्। बाहिरीया समुदायका मानिसले 'याक्थुङबा' शब्द त्यत्ति प्रयोग गर्दैनन्। उनीहरू 'किरात' वा 'लिम्बू' शब्द नै बोल्न वा लेख्न सहज मान्दछन्। किनभने 'याक्थुङ्बा' शब्द भोट–वर्मेली भाषा परिवारको शब्द भएकाले भारोपेली भाषीलाई श्रुतिकटु लाग्नसक्दछ।

याक्थुङ शब्द लिम्बू भाषाको मौलिक शब्द भए तापनि नेपाली भाषाको लागि एक आगन्तुक नेपाली शब्द हो। यही शब्दलाई लिम्बू जातिले आफ्नो पहिचानमूलक शब्द मान्दै आएको छ। लिम्बू समुदायमा 'याक्थुङ' थर र उपथरको विशेष महत्व हुन्छ।

त्यसैले 'याक्थुङ्बा' वा 'याक्थुङ्मा' शब्दभित्र अन्तर्निहित 'वीर' भावनाले हरेक लिम्बू जातिले आफ्ना जातीय पहिचान जनाउँछ। फलस्वरुप यो शब्दको शब्दोच्चारण गर्दा उनीहरू गौरव महसुस गर्दछन्। त्यसैले याक्थुङ संज्ञा लिम्बू जातिको एक मौलिक पहिचानमूलक शब्द मानिन्छ।

## २.१४ राई लिम्बू

किरात राई र लिम्बू रक्तगत अनन्या मात्र नभएर सांस्कृतिक रुपमा एकै परिवारका सदस्य हुन्। राई र लिम्बू एकै परिवारका भौगोलिक क्षेत्रीय नाम हुन्। सामान्यतया: अरुणपूर्वका धेरै राईहरू लिम्बू भए भने अरुण पश्चिमका राई (राजा) राई नै रहे। यस्तो हुनुमा गोरखाविस्तार तथा नेपाल निर्माणको क्रममा परेको सामाजिक तथा राजनीतिक प्रभावलाई प्रमुख कारण मान्न सकिन्छ।

फलस्वरूप राजनीतिक कारणले गर्दा किरातलाई राई निकट मानेर कतिपय लिम्बू किरात संज्ञासित तर्किन खोज्दछन्। खम्बुवानसित गाँसिएका राईलाई आफू लिम्बुवान राज्य पुनःप्राप्तिको रणनीति अनुरुप राई भन्दा भिन्न जाति भनेर इतिहासलाई अपब्याख्या गर्ने प्रवृत्ति उनीहरूमा हावी छ। किरात जातिमा ताङसाङबा (मंगोल) र मुनाफेन (भोटेली चिनियाली) रक्तमिश्रण हुँदा किरातभन्दा मिसिन आउनेको संख्या र प्रभाव बढी हुन गएकाले भोटबर्मेली भाषा र संस्कृतिको प्रभाव हावी भएको हो। यसैको प्रभावका कारण पनि किरात (खाम्बोङबा) लिम्बू र राईलाई याक्थुङ लिम्बूभन्दा भिन्न खोजिएको हो। तिब्बती शासकको सहयोग लिएर नेपाल तथा किरात राज्य विजय गर्ने माराङहाङले पनि किरात देशमा लासागोत्रे र काशी गोत्रे नारा उठाएका थिए। उनले किरात राज्यमा अधिदेखि बसिआएकालाई खाम्बोङबा काशीगोत्रे राई लिम्बू र तिब्बतबाट झरेका जतिलाई लासागोत्रे याक्थुङ नाम दिएर लासागोत्रे जतिलाई संगठित तुल्याएका थिए। (Chemjong, 2003c)

इतिहासको एक कालखण्डमा गठित लिम्बुवान राज्य स्मरण गर्दै अरुण पूर्वका नौ जिल्लालाई वर्तमान संघीय नेपालमा पुनर्जीवित गर्न खोजिएको छ। जुन आज कति सान्दर्भिक छ त्यो छुट्टै विषय हो। जेहोस्, ऐतिहासिक तनावलाई आज ब्युँताउन खोजिएको छ। फलस्वरुप किरात

शब्द लिम्बूले प्रयोग गर्दा लिम्बुवान अभियान भुत्ते हुने भएकाले किरात भन्दा याक्थुङ उच्चारण गर्ने रणनीतिक चाल चालिएको बुझ्न गाह्रो छैन।

भाषिक वाच्यार्थको दृष्टिले राई (राय=राजा) र लिम्बू (धनुधारी) दुवै तत्कालीन प्रशासकीय पदवी मात्र हुन्। लिम्बू आफूलाई हाङ (राजा) वंश ठान्दछन्। राई र लिम्बू थरबीच राजवंशीय आपुङ्गी संस्कार छँदैछ। केही शताब्दी अघिसम्म राई र लिम्बूले एकै वंश जनाउथे भन्ने अनगिन्ति प्रमाण छन्।

नेपाल निर्माण अन्तर्गत गोरखा विस्तार भएपछि नै अरुणपूर्वका राईले लिम्बू लेख्न थालेको तथ्य पाइन्छन्। करिव २४५ वर्षअघिको शाहकालीन ऐतिहासिक सरकारी कागजातमा उपलब्ध तथ्य र प्रमाणले राई लिम्बू एकै जाति भएको जनाएको। (Shrestha, 1985)

उपरोक्त भनाइलाई समर्थन गर्ने अन्य तथ्य पनि पाइन्छन् । किरात लिम्बू संस्कृतिका ज्ञाता काजीमान कन्दङ्वा (१९८८) ले किरात लिम्बू वंशावलीका आधारमा राई नै पछि लिम्बू भएको दाबी गर्दछन्। वंशावलीमा आजभन्दा ७ पुस्ताअघि कन्दङवाहरूका पुर्खा टटुवा राई, याङ्द्वा राई तथा पोना राई थिए, कन्दङ्वाको भनाइ छ।

त्यसै गरी आजभन्दा ८ पुस्ताअघि मेयाङ्बो, आङबुहाङ थरका किरात लिम्बूका पुर्खा नामित राई, मुगाम राई, चन राई, खन राई, सिन राई, ताला राई आदि थिए। आङदेम्बे, लाउती, इङ्नाम, तुम्वापो, शेर्मा थरका पुर्खाहरू कोच राई, राज राई, ओम राई, पाना राई थिए। थाम्सुहाङ तथा जवेगुका पुर्खा क्वाव राई, लाङभो राई तथा मिफोन राई थिए। यिनीहरू कोही ७ पुस्ता, कोही ९ र १० पुस्ता अघिका नाम हुन्। कन्दङवा अनुसार यी आँकडा करिव २०० वर्ष अघिका हुन्। (Kandangwa, 1988)

शासक, समुदायका अगुवा र राजनीतिक कार्यकर्ताले थरलाई स्पष्ट पार्नभन्दा बढी जटिल बनाउने काम इतिहासदेखि नै गर्दै आएका छन्। उनीहरू जातिबीच एकता गराउन भन्दा पनि फुटाएर राज गर्न रूचाउँछन्। जात जातिबीच मात्र नभएर मिलेर बसेका एकै समुदाय वा जातिबीच पनि विभिन्न बखेडा निकालिदिन्छन् र मिलेर बस्न दिँदैनन्। यो कुरा सोझासाझाले बुझ्न जरूरी हुन्छ।

## २.१५ लिम्बू

लिम्बूको शाब्दिक अर्थ धनुर्धारी हो। किरात लिम्बू भाषामा ‘लि’ भनेको धनु र ‘बु’ भनेको हान्नु हो। किरात लिम्बू भाषामा ‘लिम्’ भन्नाले मीठो र ‘बू’ भन्नाले धनुकाण हान्नु जनाउँछ। यसैले लिम्बू जाति धनुकाँणप्रति लगाव राख्ने जाति रहेको भाषातत्वले संकेत गर्दछ।

लिम्बू र धनुबीचको अन्तरसम्बन्ध यिनीहरूले प्रयोग गर्ने सिरिजङ्गा लिपिमा पनि देखिन्छ। किरात लिम्बू भाषामा चार अङ्कलाई ‘ली’ भनिन्छ। सिरिजङ्गा लिपिमा पनि उक्त चार अङ्क जनाउने ‘लि’ वर्ण हो। चार अङ्कलाई ‘ली’ किन भनियो होला? जुन उनीहरूको जातीय नामको समध्वनि पनि हो। यसलाई विश्लेषण गर्दा धनुकाँणको ताँदो तान्दा चार औँलाले तानिन्छ। बायाँ हातले धनु समाएपछि त्यसमा रहेको तन्किने डोरीमा चार औँला राखेर आफूतिर तानिन्छ। यसैले चार अंक बुझाउन ‘लि’ वर्ण प्रयोग भएको हुनसक्छ। कुनै जात विशेषले चार औंलाको मद्दतले प्रहार गर्ने हतियारको नाम पनि उनीहरूको जातीय नामसित गाँसिदिएको संकेत ‘ली’ वर्णले गरेको छ।

हिन्दु धर्मग्रन्थ महाभारतमा अर्जुनले हिमालयमा धनुर्धारी किरातसित युद्ध भएको थियो। सर्वश्रेष्ठ धनुर्धरी मानिएका अर्जुनले पनि हार खाएपछि उनले उक्त किरातलाई भगवान शिवको अवतारको रुपमा दर्शन गरेको वर्णन महाभारतमा पाइन्छ। संस्कृत ग्रन्थले धनुर्विद्यामा

सिद्धहस्त किरात एकलव्यको वर्णन गरेको छ। यसरी पौराणिक कालदेखि नै किरात जाति धनुर्विद्यामा पारङ्गत रहेको थाहा हुन्छ।

ऐतिहासिक तथ्य केलाउँदा छैटौँ शताब्दीमा आठजना राई (राजा) हरूद्वारा शासित आठराई किरात देशलाई दश लिम्बू सरदारले लडाइँ गरेर जिते। उनीहरूले किरात राज्यसत्ता आफ्नो हातमा लिए र दस लिम्बुवान राज्य गठन गरे। त्यसबेला लिम्बूहरूले धनुकाँणको मद्दतले युद्ध जितेका हुनाले जितेको राज्यको नाम धनुबोधक शब्द लिम्बुवान राखे। (Chemjong, 2003c)

तथ्यका आधारमा लिम्बू संज्ञाले धनुकाँण चलाउन निपूर्ण जाति जनाउँछ। यो वीरता दर्शाउने संज्ञा हो। दश लिम्बुवान गठनसंगै लिम्बू जातीय संज्ञाबाट राष्ट्रबोधक राजनीतिक संज्ञामा लिम्बू र लिम्बुवान परिभाषित भएको थियो।

आज लिम्बू जाति नै एक महाजाति भइसक्यो किनभने यस अन्तर्गत ३७९ थर, उपथर छन्। लिम्बूको सयौँ थर मध्ये एक थर साँबाभित्र पनि डेढदर्जन उपथर रहेका छन्। यद्यपि साँबा उपथर गणना बारे स्वयम् उनीहरूबीच मतैक्यता छैन। यद्यपि, साँबा उपथरको संख्या एकिन गर्न उनीहरू तल्लीन छन्।

विभिन्न साँबा वंशावली, साँबा समाज तथा अन्य ऐतिहासिक स्रोतका आधारमा संकलित साँबा उपथर यसप्रकार छन्– (१) चङबाङ (२) लुङहिम्बा (३) फेन्छाङ्वा (४) फयङ (५) काईदाङ्बा (६) मिक्केन्दाङ (७) मादेन (८) तङदप्पा (९) स्रेङ (१०) मुदेन्छङ (११) तेस्येबा (१२) वेत्नेबा (१३) पाकसाँबा (१४) तुम्साँबा,(१५) लेगुवा (१६) साम्बाहाङ (१७) ताप्मादेन र (१८) हिनाहाङ। (Chongbang, 2009; SambaMingshra, 2018; Tumbahang, 2011; Sembu, 2014)

# २.१६ किरात लिम्बू संस्कृति

किरात लिम्बू जातिका मौलिक संस्कार, धार्मिक अनुष्ठान, चाडपर्व, नाचगान, खानपान छन्।

जन्मदेखि मृत्युपर्यन्त परम्परागत संस्कृतिले ढाकेको हुन्छ। जन्मअघि र मृत्युपछि पनि सांस्कृतिक कर्म गर्ने गरिन्छन्। जीवनकालमा गरिने संस्कारहरूमा *साप्पोक चोमेन्, याङदाङफोःङ्, नारामप्पा, चाङवाङ लेक्मा, विवाह, साइफुम्मा,* मृत्युसंस्कार प्रमुख छन्।

धार्मिक अनुष्ठानमा *नाहाङ्गा, माङ्गेन्ना, ताःप्फेःङ्, युमासाम् थेबासाम् थेप्मा, हिमसाम्माङ, अक्वामा र तङसिङ* प्रमुख छन्। (Laoti, 2005) त्यसैगरी चाडपर्वमा याक्वा, सिसेक्पा तङ्नाम्, चासोःक् तङ्नाम, कःक्फेक्वा तङ्नाम प्रमुख छन्।

लिम्बू जातिको संस्कृतिको अर्को रमाइलो पक्ष यिनीहरूको नाच या?लाङ्, केलाङ्, हाङ्साम्लाःङ्, हाक्पाऱ्या, पक्कन्दी र बजाउने बाजामा के: च्याब्रुङ, चेत्थ्या, कोःम्, मुंफ्रो र मेंफ्राङ, यलम्बर मुङ्ला, पःङ्गें, ताङ्कें र ताः रहेका छन्। (Laoti, 2005)

*साप्पोक चोमेन* अनुष्ठान महिला गर्भवती भएको ५/६ महिनामा गरिन्छ। महिलाको गर्भावस्थालाई सुरक्षित बनाउन, पेटको बच्चाको सुरक्षाको लागि यो कर्म गरिन्छ। *याङदाङफोःङ्* बच्चाको न्वारान गर्ने कर्म हो। छोरा भए चार दिन र छोरी भए तीन दिनमा यो कर्म गरिन्छ। *नारामप्मा* नवजात शिशुको अनुहार हेर्ने परम्परा हो। नयाँ बच्चाको जन्म भएपछि उसलाई हेर्न माइतबाट सुत्केरीका आमा, दिदी, बहिनी अर्थात् परिवारका सदस्यले खानेकुराका परिकार उपहारस्वरूप लिएर आउने चलन छ।

*चाङ्वानु लेक्मा* भनेको लुगा फेर्ने चलन हो। जब बालक वा बालिका १५–१६ वर्ष उमेरका हुन्छन् तब तन्देरी वा तरूनी भएको मानेर

एक विधिद्वारा उसलाई जिम्मेवारी र कर्तव्यबोध गराइ लुगा फेर्ने चलन छ। यस कर्मलाई आर्यको व्रतबन्धसित तुलना गर्न सकिन्छ। आर्यजन छोरीलाई द्विजकर्म गराउँदैनन्। तर किरात लिम्बूमा छोरा र छोरीमा विना भेदभाव लुगा फेर्दिने कर्म गरिन्छ।

*मेक्खिम* अर्थात् विवाह गर्ने चलन लिम्बूमा प्रायः मन परापर गरेर ल्याउने चलन छ। धान नाचेर आपसमा मायाप्रीति भएर रोजीविवाह वा प्रेमविवाह गर्ने चलन छ। आजकल मागी विवाह पनि चलेको छ।

मागी विवाहमा 'कुम्माथाक्ना' अर्थात् दुलहीको भविष्य आर्थिक रूपमा सुनिश्चित गर्न रकम लिने चलन छ। यो रकमको मात्रा हेरीहेरी छ। कसैले नियमको रूपमा रू. एकसय, रू. हजार लिने चलन छ भने कसैले रू. १०/१५ हजार वा सुन लिने गर्दछन्। आजकल यो चलन लाहुरे संस्कृति र विदेशी कमाइधमाइका कारण ज्यादै खर्चिलो बनेको छ। हुन त यो रकममा माइतीले थपेर छोरीलाई फिर्ता दिने चलन गरिएको हो। आजकल विवाह कर्म सम्पन्न गर्दा कमसेकम १०-२० लाख खर्च हुन्छ। जुन सर्वसाधारणका लागि ठूलो भार बनेको छ।

विवाह गर्दा आफ्नो वंश (उपथर) मा विवाहबारी चल्दैन। मावली पट्टि बाजे, बजुको मावली थरसित पनि विहेबारी चल्दैन।

*ईत्तोन्* अर्थात् मृत्युसंस्कारमा आरम्भमा एकपटक वा विजोर बन्दुक पड्काएर आफन्तलाई मृत्युसूचक आवाज दिइन्छ। बन्दुकको आवाज सुनेपछि आफन्त र छरछिमेक भेला भएर अन्त्येष्ठी कार्य आरम्भ गरिन्छ। शव राख्नलाई पुरूष भए चार र महिला भए तीन तेर्सो काठ राखी 'चेधाप' मृतक राख्ने बाकस बनाइन्छ। चेधापलाई दुई बाँसमाथि राखिन्छ। वरिपरि सेतो कपडाले बेरिन्छ। दाहसंस्कारमा शवलाई जमीनमा गाडने चलन छ। नदीमा लगेर शवलाई जलाउने चलन पनि छ।

सांस्कृतिक तथा धार्मिक अनुष्ठानमा *नाहाङ्गा, माङ्गेन्ना, ताप्फेङ, युमासाम् थेबासाम् थेप्मा, हिमसाम्माङ, आक्वा नामा, तङसिङ* महत्वपूर्ण

मानिन्छन्। घरमुलीको नाममा हरेक तीनवर्षमा जन्मोत्सव पारेर विशेष पूजा गर्ने गरिन्छ जसलाई *नाहाङ्गा* भनिन्छ। यस अनुष्ठानमा फेदाङबाले घरमा धुपबत्ति बाल्दै पूजा गरेर घरमूलीको कल्याण र श्रीवृद्धिको कामना गर्ने गरिन्छ। *माङ्गेना* चाहिँ परिवारका कुनै एक वा सबै सदस्यको कल्याणार्थ गरिने अनुष्ठान हो। यो वर्षमा एकपटक गर्ने गरिन्छ।

*मप्फेङः* अनुष्ठान उँधौली (योबेक्बा) र उँभौली (थोबेक्बा) पर्वमा घरको कल्याणार्थ गरिने पूजा अनुष्ठान हो। यो अनुष्ठान घरमा फेदाङबाले पूजाविधि गर्ने गर्दछन्। सक्नेले हरेक साल नसक्नेले पाँच वा दशवर्षमा युमासाम र थेबासाम थेप्मा अनुष्ठान घरमा गर्ने गर्दछन्। कुलदेवताबाट घरपरिवारको रक्षा, कल्याण, श्रीवृद्धि होस् भनी पूजा गर्ने चलन छ।

*तङसिङ्* भनेको आफ्ना दाजुभाइलाई बोलाएर तागेरानिङ्वाभु माङको पूजा गर्ने एक परम्परा हो। यो एक कुल पूजा हो। पूजा गर्दा हाम्रो कल्याण होस्, बल प्राप्ति होस् भनी कामना गरिन्छ।

किरात लिम्बू आफूलाई घामको सन्तान भनी विश्वास गर्दछन्। महत्वपूर्ण अनुष्ठान जस्तै घरपरिवारमा कुनै सदस्य जन्मँदा वा मृत्यु हुँदा घामलाई सर्वप्रथम सम्बोधन गर्ने अनुष्ठान हुन्छ। जन्मदा सन्तान जन्मेको वा थपिएको अवस्थामा सोको जानकारी घामलाई दिइन्छ। बच्चाको अनुहार सर्वप्रथम घामलाई देखाइन्छ।

यसैगरी परिवारको कुनै सदस्यको मृत्यु भएमा त्यसको जानकारी घामलाई सविस्तारपूर्वक गरिन्छ। मृत्यु हुँदा फेदाङ्बाले अब लौ घामको सन्तान घामसँगै गयो है भनेर उपस्थित शोकाकुल समूहलाई जानकारी गराउँछन्। यसबाट किरात लिम्बू सुर्यवंशी (नामसामी) भएको छर्लङ्ग हुन्छ।

कार्तिक औँशीमा घरघरमा दियोबत्ती बालेर बलिहाङलाई पूजा गरिन्छ। बलीहाङ राजाको नाममा देउसी भैली खेल्ने चलन चलेको लोकोक्ति छ।

*बलिहाङ तङनाम* अर्थात् तिहारमा खेलिने देउसी भैली किरातको प्राचीन इतिहाससित गाँसिएको पर्व हो। देवासुर सङ्ग्रामताका बलि राजा अत्यन्त दानवीर राजाको रूपमा प्रकट भए। उनको सोझोपनको फाइदा उठाउँदै आर्यले उनको राज्य छलकपटपूर्वक हडपेछन्। असुर गुरू शुक्राचार्यले बलि राजालाई जति सम्झाउँदा मानेनन्। फलस्वरूप बलि राजा पक्षको सर्वस्व गुमाएपछि हार भयो। त्यसबाट निरास भएर गुरू शुक्राचार्य अरबभूमिमा लागेछन्। (Thulung, 1985)

यद्यपि, आज राजा बलिलाई आर्य र अनार्य दुवैले आदर गर्दछन्। उनीहरू वर्षमा एक पटक पूजा गरी सम्मान प्रकट गर्दछन्। यसर्थ बलि राजा सदा अमर बनेका छन्। उनी अमर भएको सन्देश फैलाउन देउसी खेल्ने चलन चलेको जनविश्वास रहेको छ।

*चासोक तङनाम* अन्नबाली पाकेपछि माङ अर्थात् देवतालाई चढाउने पर्व हो। मङ्सिर महिनामा यो पर्व मनाइन्छ। यो बेलामा लेक, औल सबैतिर अन्नबाली पाकिसकेका हुन्छन्। भूमिपूजा गरेर पाकेको नयाँ अन्नलाई तागेरानिङ्वाभू माङलाई चढाउने परम्परा छ। सबा साम्माङ मुन्धुम अनुसार नयाँ बाली पाकेपछि सबा साम्माङ देव घरघरमा डुल्ने गर्दछन्।  उनले न्वाँगी नचढाउने घरमा दुःखबिमार गराउने उखान रहेको छ। जेहोस्, यो पूजालाई परमात्मा र प्रकृतिप्रति अनुगृहित भाव प्रकट गर्ने चाडको रूपमा रहेको मान्न सकिन्छ।

*कःक्फेक्वा तङ्नाम* किरात नववर्षको रूपमा माघ महिनामा मनाइन्छ। चाँप फुलेको याममा यो पर्व पर्दछ। माघे सक्रान्तिका दिन बिहानै नुहाएर तागेरानिङ्वाभू माङको पूजा गरिन्छ। हरेक नयाँ वर्ष फलिफाप होस् भन्ने शुभकामना आपसमा साँटासाँट गर्दै यो पर्व मनाइन्छ। मानिसले सभ्यताको विकासक्रममा खान जानेको पहिलो खाद्यवस्तु तरूल कन्दमूल भएकाले यो पर्वमा त्यही वस्तु खाएर दूर अतीतलाई हरेक साल सम्झना गरिन्छ।

किरात लिम्बू जाति गीतसङ्गीत र साहित्यमा रूचि राख्ने जाति हुन्। *पालाम* लोकसाहित्य र लोकसङ्गीतको एक समृद्ध र परिष्कृत नमूना हो। किरात याक्थुङ लोकसाहित्यमा बिम्बको सटिक प्रयोग हुन्छ र भावको अनन्त गहिराइ भेटिन्छ। यिनीहरूले गाउने गीतसङ्गीत जो कोहीले गाउन नसक्ने विशेष लगाव र अभ्यास भएका व्यक्तिले मात्र गाउन सक्ने खालका हुन्छन्। यसमा प्रवीणता पाउन सांस्कृतिक लगाव जरूरत पर्दछ। अन्य जातिको लोकगीत वा आधुनिक गीत गाउन सिपालुले पनि लिम्बू जातिका मौलिक शैलीमा पालाम गाउन सक्दैनन्। यो पालाम गायनको एक विशिष्ठता हो।

*धाननाच* लिम्बू जातिको विशेष नाच हो। उहिले यो धाननाच खेतमा धान पाकेपछि काटेर खलामा राखेर खुट्टाले माड्दा रमाइलो गर्दागर्दै आरम्भ भएको नृत्य मानिन्छ। यसलाई लिम्बू भाषामा *यालाङ* भनिन्छ। 'या' भनेको धान र 'लाङ' भनेको नाच हो। धाननाच संस्कृतिले किरात याक्थुङ कृषियुग आरम्भ भएदेखि नै धानखेतीमा आबद्ध रहेको प्रमाणित हुन्छ।

*धाननाच* नाच्दा युवा, युवती २ जना देखि १०–१५ जनासम्म मिलेर हात समाएर लहरै उभिएर कदम मिलाएर अघिपछि सर्दै पालाम गाउँदै नाच्दछन्। यो नाच हाटबजार, मेला, विवाह, काजक्रिया, पाहुना आएको बखत नाचिन्छ। धाननाच सुरू गर्नुअघि युवायुवतीबीच एकआपसमा परिचय गरिन्छ। साइनो केलाउँदा नाता नलाग्ने भएमा मात्र धाननाच आरम्भ गरिन्छ। यो नाच केही समयदेखि केही दिनरातसम्म जारी रहन्छ। एकराते धाननाच बढी प्रचलित छ।

*केलाःङ* अर्थात् *च्याब्रुङ* नाच किरात याक्थुङको एक मौलिक नाच हो। यो नाच च्याब्रुङ बाजा सहित नाचिन्छ। 'के' भनेको च्याब्रुङ र 'लाङ' भनेको नाच हो। यसमा युवकहरूले च्याब्रुङ भिरेर लहरै उभिएर हातले बजाउँदै विभिन्न शैलीका नृत्य देखाउँछन्। यो केलाङ नाच शुभकार्य

जस्तैः– विवाह, नयाँघर प्रवेश अवसर आदिमा नाचिन्छ। युवतीले पनि हातमा झ्याम्टा बोकेर लहरमा मिलेर ताल मिलाउँदै सार मिलाउँदै नाच्दछन्।

# २.१७ किरात लिम्बूका धर्म

किरात लिम्बू शैव प्रभावित बोन दर्शन मान्ने आदिवासी हुन्। यिनीहरूका आत्मापूजक धामीझाक्री मान्ने, मुन्धुमी धर्म मान्ने प्रकृतिपूजक जाति हुन्।

हुन त हिन्दु धर्मावलम्बी पनि आफूलाई प्रकृतिपूजक नै भएको दाबी गर्ने गर्दछन्। तर किरात शैव वोन दर्शन र वर्तमान हिन्दु दर्शन र संस्कारमा मूलभूत भिन्नता विकास भएका छन्।

किरात इतिहास अनुसार नवौँ शताब्दीमा किरात लिम्बुवान क्षेत्रमा युमा धर्म भित्रियो। (Chemjong, 2003a) यो युमा धर्मलाई अनुसन्धाताहरूले बौद्ध वोन धर्मको एक प्रकार मान्दछन्। (Balikci-Denjongpa, 2003; Dutta, 2014; Encyclopedia Britannica, 2019)

तिब्बतबाट झरेर किरात भूमिलाई लिम्बुवान घोषणा गर्ने उबाहाङ, माबोहाङलाई आज एकथरी लिम्बू गौरव र आदर्श मान्दै लिम्बुवानमा आयातित बौद्ध बोन धर्म (युमा धर्म) लाई मौलिक धर्मका रूपमा मान्दछन्। स्मरण रहोस्, यस किरात देशमा त्यसअघि शैव र प्राचीन बोनधर्म अनुयायी थिए, जो पितृसत्ता वा सत्य वा शिव र प्रकृतिलाई मान्दथे। आदिवासी किरात आफू किरात भएकोमा गौरव मान्ने जेठो खाम्बोङ्बा समूह पनि समुदायमा अद्यावधि छँदैछन्।

शैव मतावलम्बी पितृदेव शिव वा थेबाका साथै मातृसत्ता युमा वा प्रकृतिलाई समान रूपमा मान्दछन्। उनीहरू शिव पार्वती, उमाशङ्कर, शिवलिङ्ग र योनीलाई धार्मिक चिन्ह र सत्य (सनातन) खोजी गर्नुलाई जीवन दर्शन मान्दछन्। समाजशास्त्रीय दृष्टिमा शिव, पार्वती वाह्यबोधक

'इटिक' शब्दहरू र थेबा, युमा संज्ञाहरू किरात लिम्बुका अन्तरमुखी अर्थात् 'इमिक' शब्द हुन्।

तिब्बतमा बौद्ध धर्म प्रवेश भएपछि बोनधर्म बौद्ध बोन धर्ममा परिवर्तित भयो । बौद्ध धर्मको प्रभावले बौद्ध बोन धर्ममा मद र मांस (बलिप्रथा) निषेध गरियो। लामावादले दबाएपछि बौद्ध बोन धर्मले पहिचान लुकाउन स्थानीय युमा धर्मको विकल्प खोजी गरेको हो। (Dibeltulo, 2015)

यसरी लामावादको प्रहारबाट बच्न बौद्ध बोन धर्मले स्थानीय नाम युमा धर्म धारण गऱ्यो। यही बौद्ध बोन (युमा) धर्मलाई किरात लिम्बुवान, भारतमा कतिपय किरात लिम्बूले मौलिक धर्मको रुपमा ग्रहण गरेका छन्। वास्तवमा युमा धर्म अघि किरात राज्यमा किरात लिम्बूले शिव र शिव प्रभावित वोन धर्म मानिल्याएका थिए। बौद्ध बोन (युमा) धर्म तिब्बतबाट नवौँ शताब्दीमा प्रवेश भएको धर्म हो।

अतः किरात लिम्बूका सांस्कृतिक तथा धार्मिक फेद शिव, बोनदर्शनबाट उद्विकास भएर हाल यिनीहरू बोन, शिव, हिन्दु, बौद्ध, बौद्ध बोन (युमा), सत्तेहाङ, किरात तथा अब्राहम धर्ममा आस्था राख्दछन्। यही प्रभाव फयङ साँबा संस्कृतिमा पनि परेको छ।

# २.१८ किरात लिम्बू मुन्धुम

## २.१८.१ तुङदुङ्गे मुन्धुम

*तुङदुङ्गे* मुन्धुम साँबा लिम्बू जातिको एक विधिवत पितृ–पूजा हो।

विभिन्न पूजा सामग्री सजाएको माङथानमा फेदाङ्बा, येबाद्वारा गाथा गायन गरी अनुष्ठान सम्पन्न गरिन्छ। हरेक तीन वर्षमा तीनवर्षे बोका र भालेसहित तुङदुङ्गे देवका प्रिय हातहतियार, वाद्यवादन, खाद्यवस्तु सजाएर पूजा थान बनाइन्छ।

पूजा गर्दा परिवारजनको मनस्थिति, क्रोध, आवेगलाई नियन्त्रण हुने, घरपरिवारलाई रक्षा हुने र मङ्गल प्राप्ति हुने जनविश्वास रहेको छ। (Chongbang, 2009)

तुङदुङ्गे पूजा विशेषतः साँबा परिवारको कूलपूजा हो। साँबा छोरीचेलीद्वारा परम्परा फैलिएर हाल गैर–साँबा लिम्बूले पनि तुङदुङ्गे पूजा गर्ने गर्दछन्। यो पूजा हाल सबै लिम्बूको साझा पूजा बनेको छ।

मुन्धुमी तहमैँ सांस्कृतिक सम्बन्ध रहेका निङलेखु, खजुम र वरूमहाङ थरका लिम्बूमाझ तुङदुङ्गे देवलाई फरक ढङ्गले हेरिएका मुन्धुम छन्। त्यसले तुङदुङ्गे देवको ऐतिहासिकतालाई समर्थन गर्दछ।

तुङदुङ्गे मुन्धुमको एक अंश–

आल्ल खेने लेक्वादो सुम्बदो माङले कुस्सा फोक्वा तुङदुङ्गे माडे साँबा माङ्डे खेने सोदान याःरिन कोत्छे केबेयाङ केयागेल्ले थाबेरा केम्बारे सिङ्धक्से केन्तुम्भु हाः माङवाहाङ्वा हातुसुरू, पिरूसुरूसिल्ले खेन ग आत्तु केत्येआङ याङ्नु केत्येआङ थाबेरा पानु यम्बाए आङ्गा केसा फोक्वाँग साम्मादिङ माङ्वाहाङ्वा आलक केन्बिराङगेन फाङ पेली पान्जा केनाक्तुल्ले आसा फोक्वाए खनेआङ साक्वादिङ हाङवा माङवा केदेक्लो! (Chongbang, 2009)

**नेपालीमा अनुवाद**– अब तिमी त्रिवेणी बराहामाङ देवका कान्छा छोरा दुङ्दुङ्गे देव साँबादेवले बीउबीजन पुऱ्याउन जाँदा यता तिम्रा बाबुले तिम्रा दाजुभाइलाई शक्ति वरदान बाँडिसकेकाले तिमी फर्की आउँदा आफ्ना बाबुसँग मलाई पनि शक्ति वरदान देऊ भनी विन्ति गर्दा तिम्रा बाबुले हे! मेरा कान्छा छोरा तिमीले पनि मबाट शक्ति र वरदान लौ पायौ भनी आशीर्वादसहित शक्ति, वरदान दिए अनि ती तिम्रा बाबु ओरालो लागे। तिमी कोकाहाका कान्छा छोरा भने उँभो थाक्सुबा, सोगबु, लेगुवा, पिखुवा, कुरूले, जल्हारा, बेल्हारा पाख्रिबास मैदान माथि रमिता हेर्दै डुल्दै खम्बु गाउँ याख्खा गाउँबाट अरुण बरुण नदी डुल्दै रमिता हेर्दै

बाह्रबिसे, कोसुवा, सजिक, सिगेदिम्बा, फाख्खङ्बा, याङ्बङ्बा, तिराफारा, चिदेन, साम्धोक, कंधोक गाउँहरूका नाम पुकार्दै उकालो लाग्यौ। ... (Chongbang, 2009)



तुङदुङ्गे पूजाको एक झलक (तस्वीर- फयङ साँबा विश्वराज, २०२४)

## २.१८.२ चङबाङ साँबा माङ्गेना मुन्धुम

साँबा किरात लिम्बू परिवारको एक सदस्य हो। यही साँबा परिवारभित्र चङबाङ साँबा, फयङ साँबा लगायत सदस्यहरू छन्। यिनीहरूको वंशवृक्षमा समानता पाइन्छन्। हाल साँबाका विभिन्न उपथरमा छुट्टिएको अवस्था भए तापनि वंशावलीमा यिनीहरूको रक्तगत अनन्यता देखिन्छ। (Chongbang, 2009; Phyang MC, 2019) त्यसैले गर्दा फयङ साँबाको अध्ययन गर्दा भ्राता चङबाङ सम्बन्धित मुन्धुम लिइएको हो। किनभने चङबाङ साँबा माङगेना मुन्धुमले फयङ लगायत अन्या साँबाहरूको ऐतिहासिकता प्रतिनिधित्व गर्दछ। मुन्धुमको झलक–

कोचीयो मेचीयो साहा यङगनताप्पा साराहा ताप्पा चङबाङ साँबा हाङदेन यो काशी क्षेत्र साम्याङले सिक्री युप्पारे सिक्री वान्छाङमु थासिङ काशी क्षेत्र साम्सो यमिङ वान्छिङ खुने युक्फुङमु कन्नु थाङे सावाङमु

कन्नु थाङे थङगनमु नात्नु याङे साराहा मु नात्नु थाङमु, यो कोशी गंगा तेम्बे यो अतुदिङ योलाममु योङ सप्तकोशी दूधकोशी तामाकोशी यङगन तात्नु साराहा नात्नु युक्फुङ कन्नु सावाङ कन्नु वसादिङ योलाम थासिङलो पिच्छा कन्नु,

वसादिङ योलाम थासिङलो पिच्छा कन्नु, साम्भोग कन्नु कई काक्नु फाङजाङ काक्नु चबतिङ थुङवा काक्नु विजयपुर ना वसा तोलाम लन्दे कई काक्नु फाइजङ काक्तुर कोचीयो बा मेचीयो बा यङगन ताप्पा साराहा ताप्पा रे मिनु होप्पा तम्बर होप्पा बसा योलाम खङकेलन्दे यङगन नात्नु साराहा नात्नु हाक्फारा नौँ ढुङ्गे बसा थोलाम खडकेधाङे सिगेक्सुरूङ सिगी सोसाम सन्भेन्वोत्ते माता इभे मेन्बोनते सिगी सोसाम फोङनु माता इमे फोङनु मिनु होप्पा तम्बर होप्पा युक्फुङ कनु सावाङ कन्नु यङगन नात्नु साराहा नात्नु वशा योलाम थाङे रो

मिनु होप्मा तम्बर होप्मा नुबोघाट सिम्राघाट युक्फुङदिङ सावाङ कन्न यङगन नात्नु साराहा नात्नु वशा थोलाम ताङेरो मिनु होप्मा तम्बर होप्मा नुबोघाट सिम्राघाट युक्फुङदिङ सावाङ कन्नु यङगन नात्नु साराहा नात्नु वसा योलाम खङकेलन्दे कई फाङजङ काम्नु मिनु होप्मा तम्बर होप्मा करकौले युक्फुङ बक्खिम युक्फुङ काक्तुर मिलु होप्मा तम्बर होप्मा साराहा नात्नु यङगन नात्नु वसा थोलाम खङकेलन्दे कोचीयो बा मेचीयो बा यङगन ताप्पा साराहा ताप्पेन बसा योलाम खन्केलन्दे, मिनु होप्मा तम्बर होप्मा खड्कुरे तरङ बसा थोलाम खडकेथारेथाङे कइफाङजङ काक्नु मिनु होप्मा तम्बर होप्मा यङगन नात्नु साराहा नात्नु खुक्वा धोरो लुङघारी रो। (Chongbang, 2009, pp. 145-148)

**सारांश र विवेचनाः** प्रस्तुत चङबाङ साँबा माङ्गेना मुन्धुममा चङबाङ साँबाका पुर्खाको घटनाप्रधान गाथा गाइएको छ। यो चङबाङ साँबा माङ्गेना मुन्धुम र फयङ साँबा उत्पत्ति मुन्धुमका सार समान छन्। अघि यिनीहरूको परिवार काशी वंश हो जो गंगा मैदानबाट आएका

थिए। यिनीहरू राजवंश भएकाले सुन चाँदी धनसम्पत्तिले सम्पन्न थिए। यिनीहरूको कर्मस्थल तथा क्रिडास्थल मेची, कोशी, तामाकोशी, दूधकोशी, सप्तकोशी नदी क्षेत्र, विजयपुर र वरपरका क्षेत्र हुन्। ती क्षेत्रमा घुमेको, बँदेलको सिकार गरेको मुन्धुम बताउँछ। ती पुर्खाहरू कोशीबराह क्षेत्रमा बँदेलको सिकार गर्ने गर्दथे, मुन्धुम बताउँछ।

तिनै वंशका राजकुमार अर्थात् चङबाङ साँबाका पुर्खाहरू कोशी बराहबाट बँदेलको सिकार गर्दै तम्बरखोलाको किनारै किनार उँभो लागे। उनीहरू तम्बरखोला किनारै किनार यात्रा गर्दा बाटामा पर्ने नुबोघाट, सिम्राघाट, खड्कुडे पुल, चुङ्वाखोला, सोबुवाखोला दोभान, मियाखोला तेम्बे दोभान, रामदुवाली काटेर मेवाखोला पुगे। तागेरा निङ्वाःभू माङले सपनामा दिएको सन्देश बमोजिम उनीहरू मेवाखोला पुगेको मुन्धुम बताउँछ।

सिकारी भेषमा राजकुमार मेवाखोलाको जंगलमा पुगे। उनका साथमा सुन, चाँदीको फाली पनि थियो। उक्त जंगल साम्योकहाङ राजाको शासन क्षेत्रभित्र पर्दथ्यो। राजकुमारले जंगलमा सिकार गरेको केही दिनमा साम्योकहाङका सिपाहीले देखे। जंगलमा सिकार खेल्ने राजकुमारसित सुन चाँदीको फाली भएको र त्यो त्यहीँ जंगलमा भेटेको भनी सैनिकले राजालाई पोल लगाए। राजाले आफ्ना थप सिपाही पठाएर राजकुमारलाई दरवारमा उपस्थित गराए।

राजाले दरवार झिकाइएका राजकुमारलाई सोधे– “तिमी कहाँबाट मेरो देशमा किन आयौ?” राजकुमारले आफ्ना कुरा सविस्तार बताइदिए। आफूसाथ भएको सुनचाँदीको फालीहरू पनि उनले राजालाई चढाए। तर राजाले सोचे, यसरी कसैको धनसम्पत्ति खोस्नु हुँदैन, बरु राजकुमारलाई आफ्नै दाजुभाइ बनाएर संगै राख्नुपर्दछ। त्यसैले राजाले राजकुमारलाई संगै मिलेर बस्न आग्रह गरे। किनभने अघि साम्योकहाङ राजाका पुर्खा पनि कोशी बराहबाट बँदेल सिकार खेल्दै

आएको कथा राजाले सम्झिए र राजकुमारलाई सुनाए। त्यसपछि चङबाङका पुर्खा मेवाखोला क्षेत्रमा बसे। यसरी चङबाङ साँबाका पुर्खा मेवाखोलामा स्थापित भए, मुन्धुम बताउँछ।

यस अतिरिक्त मुन्धुमभित्र माङ्गेना गर्ने विधि बताइएको छ। बिहानी पख माङ्गेना पूजा गर्दा राम्रो हुन्छ। चङबाङ साँबाको माङ्गेना मुन्धुम र फयङ साँबाको उत्पत्ति मुन्धुममा समानता छन्। फयङ साँबा उत्पत्ति मुन्धुममा पनि नाल्बो राजाले राजकुमार (सारातापा्पा) लाई जंगलबाट झिकाएपछि उनले चढाएको सुन–चाँदी ग्रहण गरेको कथा छ। कथाअनुसार उनले आफ्नी कान्छी छोरीको विवाह सारातापा्पासित गरिदिए। पछि छोरी ज्वाइँलाई राज्य पनि छुट्याएर दिए।

थुतुरे वेद वा मौखिक परम्परामा विविधता देखिनु स्वाभाविक छ। कथाका पात्र र कथासारलाई आधार मान्दै विश्लेषण गर्न सकिन्छ। दुवै मुन्धुमलाई तुलनात्मक विश्लेषणको आधारमा चङबाङ साँबाको पुर्खा राजकुमार र फयङ साँबाको सारातापा्पा पुर्खा पात्र एकै भएको कथासारले जनाउँछ।

यस मुन्धुमले किरात लिम्बू वंशको इतिहास समेट्ने तथ्य पनि उजागर गरिदिएको छ। अघि साबा येत्हाङ हावाहुरीझैँ फनफनी घुमे। कोही ल्हासा भएर आए तब उनीहरू ल्हासागोत्रे भए। कोही तल गंगामैदान घुमेर आए तब उनीहरू काशीगोत्रे भए। मुन्धुम अनुसार काशीगोत्रे र ल्हासागोत्रे दुवै एकै साबा येत्हाङ थिए। समय र परिस्थितिले आपसमा छुट्टिएर अलग देखिएका मात्र हुन्। यही क्रममा काशी वंशका चङबाङ साँबा, फयङ साँबा लगायतका साँबाहरू काशीगोत्रे भएको कुरामा मुन्धुमको जोड छ।

## २.१८.३ चङबाङ साँबा पुङ मुन्धुम

चङ्बाङ् साँबाको पुङ् साम्माङ् मुन्धुम मौखिक रूपमा सर्दै आएको अर्को एक महत्वपूर्ण परम्परागत ज्ञान र दर्शन हो। यसले चङबाङ साँबाको मात्र नभएर फयङ साँबाको ज्ञान, दृटिकोण र दर्शन आँकलन गर्न आधार प्रदान गर्दछ। स्मरण रहोस्, चङ्बाङ् साँबा र फयङ साँबाको पुर्खा एकै रक्तगत अनन्या भएकोले यो मुन्धुमले पनि ती दुई साँबा लगायत अन्य साँबाका ज्ञान र दर्शन  समेत प्रतिबिम्बित गर्दछ।

'मिसेक साम्माङ् सिरेङ् साम्माङ् के पोक्मा के साम्मा सुरुम्थो सियोदेरुम्यो खेयेक थक्नेरे आसेन् इक्सा खाम्बेक तरक ताङ्साङ् पच्छेल्ले कगेत्नाङ् येच्छी पच्छे थो कुथानाम फाङ्जे पच्छे खम्बेलग मुसेन्दामु आपते मियामु आप्ते सेन्दाङ् आप्मोर मिया आप्मारे केत्तकुम हेरे नुधिनु हेरे थाबुमु हेरे सिङ्लाङ्ङ हेरे पोक्लामु हेरे खक्के बेलाले यो सो रिखी माङ्हा थो सो रिखी माङ्हा नौलाख चौरासी रिखी माङ्हा सेन्दाङ् सेप्सा लाछी सेप्मा मिया हेप्मा नाम्ही सेप्मा फाआङ्ग लामन्ते मु कुबे मेजोगे नाममतो मु कुबे मेचोगे

लासभामु मेयुङे नामसभामु मेयुङ् कुगेत्नाम येत्छी केपप्पा कुयानाम फाङ्जे केपप्पा सेन्दाङे सेप्माफाआङ् लाही खेप्माफाआङ् मिया सेप्मा फाआङ् बाम्ही सेप्मा फायुङ् आसभा नामसभा कुबे मेयुङ्लेन मिनु सामा बइए सामेन लाप्मुयोक मुधोक सिमुथोक मुथोक लोक्साङ् फुरुत्त तेयाङ् थक्ले तुम्बो हा साम्माङ् तुम्बो हा नौ लाख तारा चौसट्ठी रिखी हा याङ्सा कुन्धे के जोगी पेरी पान्जा सान्जा इङ्जा नेत्नुसिलेग मु आनी गे गयो सेन्दाङ् केआप्पा मिया केआप्पा, सेन्दाङ् सेप्मा फाआङ् लाही सेप्मा फाआङ्, मिया सेप्मा फाआङ् नामही सेप्मा फाआङ् लामतो कुबे चोगिगे नाममतो कुबे चोगिगे।

मिनु सामेन बइसमिन पेरी पन्छा सान्जा इङ्जा मेनेत्तुलेग आङ्गा यारिन तुम्बा सोधान तुम्बा नारी कुदेन आग्नेतगर सेन्दाङ् सेरुङ् लाही

सेरुङ् मिया सेरुङ् नामही सेरुङ्, पेरी पान्जा सान्जा इङ्जा मिनु सामावई सामा नेत्तुसिलेग साक्फारी थोक्वा हाङ्फारी थोक्वा नारी कुजेन मेनेत्तु लापा मुथोक मि मुधोक लकमु मङेरो,

मिनु सामा पर्ध सामा खुने आङ् लोक्से तेयाङ् फुरुत तेयाङ् सिक्चोवा हा थाक्वाबा हा नारी कुजेन मेनेत्तु आ इक्सा तन्दुरो खाम्बेक तन्दुरो इक्सा सिघाइङ् खाम्बे सिंघाङ् नु मिनु सामेल सुबा सामेन हेल्लाङ् सोमेन नारी कुजेन मनेत्नुआङ् सिवाङ् खाम्मेक सिघाङ् मिनु सामेल्ले पधे सामेल्ले इक्सा खाम्बेक तन्दु लोक्साङ् पुरुत्त लासेरो सुवा सामेन हेल्लाङ् सामेन उत्तरखण्ड व्यापीखण्ड थो मिनु तेम्बे साण्डङ्वा तेम्बे कइदिङ् फङ्जङ् यम्बेओ आठवटा फाःमु मेयोप्सुसिरो खायो सामु फामिक्मु पच्छे।

फबकमु पच्छे खान्हा सामु सुवासोमा थेगाङ् सोमा लोक्साङ् फुरुत्त पेयाङ् फामिकमु उत्तुरो फाबकमु हङ्सुरो। खाथ्यो सामुमिनु सामेन वाइ सामेन लाप मुथोक मुथोक मि मुथोक मुधोक साम्याङ् तोङ्गु युप्पा तोङ्गु काशा तोङ्गु तामा तोङ्गु लाफ्लेरे लाप्मेलछिङाङ् मिरेरे मि मे मेतछिङाङे लोक्साङ् पुरुत्त पोमु हन्नङग कुगेत्नाङ् येत्छी केबत्पेथो युथानाम फाङ्सी केबत्पेथो लोक्साङ् फुरुत्त केरेयाङ् सेन्दाङ् मु आबु मिया मु आबु, सेन्दाङ्गु सेरेरो मिया मु सेसेरो लाही नामही मु सेरोरो। लाही नामी मु सेरोरो खान्हा सा खेन्दाङ् ग्रह, लाही ग्रह मु पोक्से रो, सेन्दाङ्रे तेत्तुसी लाही रे तेत्तुसी मिया रे तेत्तुसी नाम ही रे तेत्तुसी खान्हासा ग्रह पोक्मा मुन्धुम हा साप्तुहाङ् पत्लो।” (Chongbang, 2009, 148-151)

**मुन्धुमको नेपालीमा सारांश र विवेचनाः** प्रस्तुत चङबाङ साँबा पुङ मुन्धुमले प्राचीन कालीन झलक दिएको छ। मुन्धुममा उहिले पुर्खाहरू ऋषिमुनिका साथ भेला हुन्थे। तल (गंगामैदान) बाट, माथि (भोट, चीन) बाट नौलाख ऋषिमुनि भेला भए। सभाहरू सम्पन्न भए। ऋषिमुनिबीच छलफल, शास्त्रार्थ हुन्थ्यो। मुन्धममा सुन, चाँदी, काँश,

तामा धातु (लाक्षणिक रूपमा युग) को चर्चा गरिएको छ। पुर्खाहरूलाई ग्रहसित तुलना गरिएको छ। मुन्धुममा एकजना सिरेङ साम्माङको पनि चर्चा छ। उनलाई एक्ले (एक्लै सिकार गर्ने) चकमके सिकारीको रूपमा स्मरण गरिएको छ।

उहिले आगोको लागि चकमक बोक्ने चलन थियो। त्यसैको आधारमा सिरेङ साम्माङ (पूर्वज)लाई चकमके सिकारी भनिएको हो। किरात सेनेहाङ लिम्बू वंशावलीमा साँबा सेरेङबाट चङबाङ, फयङ लगायतका साँबा उद्विकास भएको देखिन्छ। (SenChobegu, 2007)

यहाँ मुन्धुमले सेरेङलाई साम्माङ (पूर्वज) मानेको सन्दर्भ अन्य वंशावलीसित मिल्न आउँछ। अतः साँबासेरेङबाट फयङ साँबा समेत उद्भव भएका हुन्। सेरेङ साम्माङ चङबाङ, फयङ लगायत साँबाका पूर्वज हुन्। मुन्धुमले साँबाका पुर्खा सिकारी मात्र होइनन् ऋषिमुनिको संसर्ग गर्ने सभ्य जाति थिए भन्ने जनाउँछ।

## २.१८.४ सबा साम्माङ मुन्धुम

लिम्बू भाषामा 'सबा' भनेको बाँदर र 'साम्माङ' भनेको देव हो। यो देव वा सम्बन्धित जातिको स्वभाव चकचके, स्वच्छन्द तर शक्तिशाली भएकाले जो कोहीले तह लगाउन गाह्रो भएको हुँदा देव मानेर फकाएर राख्नु नै श्रेयस्कर ठानिएको विश्लेषण गर्न सकिन्छ। सबा मुन्धुममा वर्णित सबा, बाँदर देवको शक्ति भनेको मानिसलाई लाग्ने दुःख, बिमार मानिएको छ। मानिस विभिन्न रोगबाट बच्न सबा साम्माङको आराधना गर्ने गर्दछन्।

सरसर्ती हेर्दा आख्यान केवल अभिधामूलक शब्दशक्ति भएको लोककथा मात्र नभएर शब्दनिर्माणमा यो मुन्धुम रूपक र बिम्बले भरिपूर्ण सन्देशमूलक ज्ञानको भण्डार भएको यो कलमको बुझाइ छ। किनभने मुन्धुममा वर्णित 'सबा' शब्द हाल लिम्बूको पद, थरसित पनि

सम्बन्धित छ। सबा मुन्धुममा बराहदेव कोकोहा माङ र कोशी नदी, तम्बरखोलाको वर्णन छ। यही क्षेत्रका प्रख्यात कोकोहा माङका सन्तान तुङ्दुङ्गे देव तुङदुङ्गे मुन्धुमका नायक पनि सम्बन्धित छन्। तम्बरखोला क्षेत्रका सोधुङ लेप्मुहाङका सन्तान सबा र पर्सियन इतिहासमा वर्णित सबाबीच प्राचीन दूर सम्बन्ध रहेको भाषाशास्त्रीय विश्लेषण पनि छ। (Pokhrel, 1998; Thulung, 1985)

पर्सियन इतिहास अनुसार अघि पर्सियामा शिव मतावलम्बी सबा थिए, जसलाई सबियन्स भनिन्थ्यो। (Thulung, 1985) सबा साम्माङ शब्द पछि किरात लिम्बूको पदवी एवं थरमा विकसित भयो। (Subba, 2005) साम्बा, साँबा थरको व्युत्पत्तिको मूल आधार प्राचीन इतिहासमा गएर ठोक्किन्छ। साँबा जातिको सम्बन्ध किरातेश्वर शिव, शिवलिङ्ग, शिवालय आदिसँग छ। जुन कुरा साँबा जातिको उत्पत्तिस्थल मेवाखोला थुम साँबास्थित प्राचीन, ऐतिहासिक स्थल फङफङ्गे झरना नजिक भेटिएको शिवलिङ्गले पुष्टि गर्दछ।

नेपाल एकीकरण अन्तर्गत गोरखाविस्तारको बेला वि. सं. १८३१ सालमा गोर्खाली र लिम्बूबीच चैनपुरमा लिम्बूको वंशावली झिकाएर हेरियो। अध्ययन गर्दा काशीवंश किरात लिम्बूको सम्बन्ध सेन, मगरसित भएको पत्ता लाग्यो। त्यसले गोरखालीसित सम्झौता गर्न लिम्बूलाई प्रेरित गर्‍यो। फलस्वरूप नुनपानीको सन्धि भयो। पछि वि.सं. १८६५ मा गिर्वाणयुद्ध शाहले काशीवंशलाई किपट नदिने उर्दी जारी गरेपछि लिम्बुवानमा खलबली मच्चियो। त्यसबेला किपट रक्षार्थ काशीवंश लिम्बू र ल्हासावंश लिम्बू एकजूट भए। आपसमा मिलाप गरी कुटुम्बेरी चलाउने लगायतका सम्झौता गरेर गोर्खाली विरुद्ध मोर्चा कसे। त्यसैबेला काशीवंश लिम्बूले तीन ढाकर जनै तम्बरखोलामा बगाइदिए। (Ingnam, 2012)

ऐतिहासिक तथ्यको आधारमा हाल मेवाखोला, तम्बरखोला, ताप्लेजुङ लगायत विभिन्न स्थानमा बस्ने साँबा शिव/ थेबासाम/

थेबाहाङसाम, सबा साम्माङ सम्बन्धित छन। सबा मुन्धुम, तुङदुङ्गे मुन्धुमका सारतत्त्वबीच केही समानता भेटिन्छन्। सबा, साम्बा, सब शब्दहरूले साँबा जातिको प्राचीनता झल्काउँछ।

इतिहासलाई फर्केर हेर्दा पर्सियाको प्राचीन इतिहासमा उल्लिखित शब्द सब, सबा र साबा, साँबा शब्दका ध्वनिसाम्य तथा समअर्थका आधारमा 'सबा' र 'साँबा' बीच सम्बन्ध पाइन्छ। सबा साम्माङको 'सबा' शब्दबाट परिचयबोधक शब्द 'सबा', 'साबा' हुँदै जातिबोधक शब्दमा 'साँबा' शब्दमा विकासित भएको विश्लेषण गर्न सकिन्छ। जेहोस्, सबा साम्माङ मुन्धुम एक लोक आख्यान हो जसको एक अर्थभित्र साँबा थरको उद्भवको पृष्ठभूमि लुकेको छ। त्यसैले सबा मुन्धुमलाई यहाँ प्रस्तुत गर्नु सान्दर्भिक हुनेछ।

किरात भाषा र संस्कृतिका ज्ञाता चन्द्रकुमार सेर्माद्वारा लिखित सबा साम्माङ मुन्धुम (Sherma, 2009) अनुसार उहिले सोधुङ लेप्मुहाङले मान्छे र बाँदरको आकृति भएको सबा (बाँदर) छोरा पाए। उनले त्यो सन्तान मरे पनि मरोस् भनेर बाटोमा छाडिदिए। तर आठदिनसम्म त्यत्तिकै छाड्दा पनि ऊ मरेन। त्यसरी नमरेपछि सोधुङ लेप्मुहाङले सबालाई आकाशको कुहिरोमा फाली दिए। सबा पहाडको भीरको टुप्पोमा पुगेर अड्कियो। भीरमा सबा भोकले रोइकराइ गर्न लाग्यो।

सबा भीरमा भोकले रोइकराइ गरेको देखेर सोधुङ लेप्मुहाङले सबालाई भीरबाट निकालेर पश्चिम दिशामा रहेको साबा येत्हाङ् नामको गाउँ छ, त्यहाँ खानेकुरा खोजेर खानु भनेर सम्झाई पठाए। त्यसपछि सबा आफ्नो बाटो लागे। जाँदा जाँदै उनी तम्बरखोलाको छिरवानी भन्ने ठाउँमा पुगे। त्यहाँ उनले तिब्बतबाट नुन ल्याउन हिँडेका हेम्भ्या थरका लिम्बूलाई भेटे। बाटोमा दुईजनाको भेटघाट, गफगाफ पछि मित्रता भयो। हेम्भ्याले छुट्ने बेलामा कुनै दिन मेरो घर आउनु है भनेर सबालाई निमन्त्रणा दिए।

नभन्दै एकदिन सबा अन्न पाकेको कात्तिक मंसिर महिनामा घुम्दै हेम्भ्याको घरमा पुगे। तर त्यसबेला सबालाई हेम्भ्याले चिनेनन्। अघि बाटामा भेटेर मित्रता भएको र त्यसबेला दिएको निम्तो सम्झेर सबा हेम्भ्याको घरमा पाहुना गएका थिए। उनले हेम्भ्याको घरमा मेजमान खान पाउने आशा राखेका थिए। तर हेम्भ्याले उनलाई नचिनेपछि सबा निराश भए। सबा भोकभोकै बरालिए।

एक दिन हेम्भ्याको घरमा कोही नभएको मौका छोपेर सबाले घरभित्र पसेर जाँडको घ्याम्पो नै खाइदियो। त्यो देखेर हेम्भ्यालाई रिस उठ्यो। उनले पासो थापेर हेम्भ्यालाई पक्रिए। हेम्भ्याले छरछिमेकसंग मिलेर सबालाई मरणासन्न हुने गरी पिटे। त्यसपछि सबा मरेको ठानेर तम्बरखोलामा बगाइदिए।

सबाको लासलाई तम्बरखोलाले बगाउँदै बगाउँदै कोशीबराह बगरमा पुऱ्यायो। बग्दै आएको जीव के रहेछ भनेर कोकोहामाङ (देव) ले नदीबाट सबालाई उद्दार गरे। कोकाहा देवले सबालाई उपचार गरे र बचाए। यो कसरी भयो भनी कोकोहादेवले सबालाई सोधे। आफूलाई हेम्भ्याले मरणासन्न धुलाई गरेको कुरा सबाले बताए। खानेकुरा चोरी गरेकोमा यथोचित दण्ड दिनुपर्नेमा मृत्युदण्ड नै दिएकोमा कोकोहा देव चिन्तित भए। उनले सबालाई उपचार गरेर दुरुस्त बनाए। त्यसपछि कोकोहादेवले सबालाई आदेश दिए– "हे सबा साम्माङ, हे बाँदरदेव! अब तिमी हेम्भ्याको घरमा जाऊ। त्यहाँ पुगेर तिमीलाई अघि पिट्दा जेजस्तो सास्ती दिएको थियो त्यसको बदला लेऊ। उसको शरीरमा दुःख बिमार उत्पन्न गराऊ।"

सबा साम्माङले कोकोहादेवको आज्ञा पालन गरे। नभन्दै एकदिन हेम्भ्या आफ्नो घरमा सिकिस्त बिरामी भयो। उनले काम्बाङ थरका फेदाङ्मालाई बोलाए र जोखना हेर्न लगाए। उनले जोखना हेर्दा सबा साम्माङलाई बोलाएर खान नदिइ हिर्काइ मारेकाले यस प्रकारको रोग

लागेको जोखना बताइदिए। त्यसपछि उनले हरेक साल कार्तिक मंसिरमा अन्नबाली पाकेपछि सबा साम्माङ्लाई अन्न चढाए, उनको पूजा गर्न थाले। यसरी सबा साम्माङको पूजा गरेपछि मात्र आफूले खाने चलन चल्यो।

अर्का लेखक जसराज सुब्बा अनुसार सबा साम्माङलाई येच्छामा वा येच्छाम् पनि भनिन्छ। फेदाङमाले कुनै व्यक्तिको दुःखकष्टको कारण सबा साम्माङ बताउँछ। सबाको आराधना फलफूल, अन्नबाली चढाएर गरिन्छ। सबा लिम्बू जनजातिको एक आराध्य साम्माङ बन्न पुग्यो। यो किरात लिम्बूका विभिन्न थरमा रुपान्तरित समेत भयो। (Subba, 2005)

बराहा क्षेत्रका प्रख्यात कोकोहा देवलाई भाषाशास्त्री सुमेरसित सम्बन्धित देख्छन्। भाषाशास्त्री बालकृष्ण पोखरेल अनुसार सुमेरका किर जातिबाट अर्को शाखा युरोपमा सुकर (Suker) जाति जन्मियो। यही सुकरलाई ग्रिसेलीहरू बराह (Batrahos) भन्दथे जसलाई उनीहरूले सनातनीले कोक भने। सिसलीको पुराकथाका राजा कोक (कोकलस) र किरात बराहक्षेत्रको कोका/ कोकाहा/ कोकाहाङ नदीको सन्दर्भ सादृश्य र अर्थपूर्ण छ। (Pokhrel, 1998)

अतः इतिहासको विभिन्न कालखण्डमा विभिन्न भूगोलमा सबा, साँबा, शिव सम्बन्धित रहेका पाइन्छन्। यसै आधारमा साम्बा वा साँबा वा सुब्बा प्रचलनमा आएको बुझ्न सकिन्छ।

# अध्याय ३ -समस्याकथन

## ३.१ समस्याका पृष्ठभूमि

ऐतिहासिक अध्ययन तथा वंशावली विश्लेषणका आधारमा किरात लिम्बूभित्र विभिन्न थर र उपथरको उत्पत्ति र विकास करिब ६/७ सय वर्षयता भएको देखिन्छ। त्यसै आसपासका समयावधिलाई किरात लिम्बूका स्थानीय मुन्धुमले आफ्नो उत्पत्ति काल र उत्पत्ति स्थान मान्दछन्। त्यसैलाई आधार मानेर किरात लिम्बूले आफ्नो वंशावली लेख्ने चलन चलाएको पाइन्छ।

लिम्बुवानमा किपट प्रथा चलेपछि लिम्बू जातिमा आपूङ्गी भएर गाउँ गाउँमा सामन्त बनेर शासन चलाउने चलन चल्यो। यसले पनि लिम्बूका थरमा विभिन्न उपथर विकास गरेर जाने परम्परालाई बढावा मिल्यो। फलस्वरूप राई भन्दा लिम्बूको जनसंख्या कम भए तापनि उनीहरूको उपथर कैयौ गुना बढी पाइन्छन्।

२०४७ सालपछि नेपालमा आदिवासीलाई जनजातिका तहमा राखेर आरक्षण दिने आवाज उठ्यो। २०७२ सालको नेपालको संघीय गणतान्त्रिक संविधानले आदिवासी जनजातिलाई आरक्षणको ब्यवस्थालाई सुनिश्चित पनि परिदियो। आदिवासी बन्न सबै रैथाने समुदाय जातीय रूपमा एकबद्ध हुन भन्दा पनि अलग अलग जातीय मुन्धुम, ज्ञान, साहित्य अघि सार्न थाले।  आफू अरूभन्दा जेठो र भिन्न रहेको दावी गर्न थाले। यी सबै दावी मानवशास्त्रीय सिद्धान्त र ऐतिहासिक तथ्यभन्दा अलग ढंगले प्रस्तुत भए।

मौलिक ज्ञान र मुन्धुमको अपब्याख्या पनि भएका छन्। समाजका जान्नेबुझ्ने लेखक र अगुवा प्रायोजित रूपमा लागेको महसुस गरियो।

एक कालखण्डमा उर्लेको आदिवासी अभियानले समसामयिक राजनीतिमा एक हदसम्म सफलता पायो। यसबाट समाजमा एक प्रकारको भ्रम फस्टायो र मान्छेलाई अतिउन्मादित तुल्यायो। मुन्धुमलाई धार्मिक ग्रन्थ मान्नु एक ठाउँमा छ। मानिस सामाजिक प्राणी भएकाले कुनै जातिबारे वैज्ञानिक ढंगले नसोचे हामी जनजातिको संकीर्ण परिभाषाबाट माथि उठ्न कहिल्यै सकिन्न।

जातीय वा नश्लीय परिभाषा मानिसले बनाएका हुन् जुन समय सापेक्षित हुन्छ र परिवर्तनशील रहन्छ। कुनै समूहलाई राज्यले कुनै समयका लागि पिछडिएको जाति भनिदियो र केही खान दियो भन्दैमा त्यसैमा त्यो जातिले रमेर बस्नु हुँदैन। जागृत भएर प्रतिस्पर्धामा लाग्नु पर्दछ। त्यसका लागि अध्ययन अनुसन्धानमा ध्यान दिनुपर्दछ। वर्तमान र भावी पुस्तामा सही ज्ञानको खोजी निरन्तर चल्नुपर्दछ भन्ने दृष्टिकोण बौद्धिक तथा प्राज्ञिक क्षेत्रमा रहन्छ।

कतिपय किरात लिम्बूको धारणा के पाइयो भने पारिवारिक वंशावली लिम्बू भित्रै सीमित रहोस् र आदिवासी जानजातिको पगरी सुरक्षित रहोस्। आफ्नो वंशावली समुद्रको कुनै टापुजस्तो छुट्टै देखियोस, अन्य थर वा जातिसित गाँसिएर लामो नहोस्। अरु थर, जातिसित सम्बन्ध जब जोडिन्छ तब एकता गर्नु पर्दछ विवादको अन्त गर्नुपर्ने हुन्छ। राजनीति गरेर रोटी सेक्नेलाई त्यो अनुकूल हुँदैन। किनभने कुटनीतिले विभाजित गरेर नै राजनीति फस्टाउँछ। सोभ्कासाभ्का किरात लिम्बू समुदायलाई बाहिरभन्दा पनि भित्रैबाट दिग्भ्रमित तुल्याइएको छ। एक प्रकारको जडसूत्रको विकास गरेर आधुनिक ज्ञानको प्रकास छिर्नबाट रोकिएको अवस्था छ।

अव वंशावलीलाई वैज्ञानिक दृष्टिले हेर्नु र लेख्नुपर्दछ। राजनीतिक वा रणनीतिक दृष्टिकोणलाई एक छिन टाढा राखेर विषयवस्तु केलाउनु पर्दछ। जातीय अध्ययनका सवालमा कुनै समुदाय वा थर र जात

जातिबीचको सम्बन्ध मानवशास्त्रीय दृष्टिले केलाउँदै यथार्थ देखाउने प्रयास गर्नुपर्दछ।

लिम्बुवान राजनीतिले हाल पहिचानको नारा बोकेको छ। यसले किरात लिम्बूको राजनीतिक चेतना बढाए पनि बौद्धिक तथा प्राज्ञिक अध्ययनलाई प्रभावित तुल्याएको छ। सोच्ने कोण संकुचित र पूर्वाग्रही बनाइदिएको छ। वैज्ञानिक युग आरम्भ भइसक्यो तर समाजलाई अध्ययन गर्ने शैलीमा समयानुकूल परिवर्तन अझै आइसकेको छैन। राजनीतिक प्रभावले गर्दा स्वार्थवश मानिस आपसमा अनावश्यक विवाद गर्दै जनमत बनाउन तल्लीन छन्। विद्यमान सत्तामीमांसाले गर्दा कुनै पाठक खुलेर पढ्न, लेख्न, अध्ययन गर्न र बुझ्न नसकी ज्ञानमीमांसा कठिन बनेको छ। यो सामाजिक र मनोवैज्ञानिक पर्खाललाई भत्काउने चुनौती आज खडा भएको छ।

किरात लिम्बू संस्कृतिबारे अध्ययन नभएको होइन तर ती अध्ययनहरू प्रायः लोकसाहित्यकै वरिपरि घुमेका पाइन्छन्। प्रजाति वर्णन (Ethnography) मा किरात लिम्बू लेखक रमेका छन्। अध्ययनमा आलोचनात्मक विश्लेषण, तुलनात्मक विवेचनाको कमी छ। उनीहरू किरात लिम्बूको सुदूर इतिहास केलाउँदै सौमर, कुर्म, काशी, रुद्रसँग जोडिन अनिच्छुक देखिन्छन्। लिम्बुवान राजनीतिलाई रणनीतिक उकेरा लाउने लेखकको संख्या बढी छ। बौद्धिक तथा प्राज्ञिक रचनाको अभाव छ। त्यसकारण राजनीतिक कुहिरोको प्रभावलाई छिचोलेर गरिएको विशुद्ध अध्ययन आजको आवश्यकता भएको हो।

आदिभौतिक (Metaphysical) मिथक वा मुन्धुमको विशेषता र सीमालाई बुझेर वैज्ञानिक पुनःब्याख्या (Decoding) गर्ने आँट र जाँगर चलाउनु पर्दछ। यसमा आँट पनि चाहिन्छ। किनभने यो कार्य चुनौतीपूर्ण छ। धमिलो समाजले नयाँ विचार र धारलाई निस्तेज पार्न अनेक हत्कण्डा

चलाउँछ। त्यसैले अध्ययनमा धैर्यता चाहिन्छ। समय आएपछि पानी सफा हुन्छ र सत्यतथ्य खुल्दै जान्छन्।

प्रजाति वर्णन (Ethnography) मा अभिव्यक्त शब्दको बाहिरी रुप (अभिधा अर्थ) र भित्री रुप (रुपक/ संकेत/ ब्यङ्ग्यार्थ/ तात्पर्य) खुटयाउन नसकेर पाठक अल्मलिएका छन्। उनीहरू बाहिरी रुपलाई बुझेर तथ्यलाई हुबहु सामान्यीकरण (Simplification and Generalization) गर्ने गर्दछन्। फलस्वरूप उत्पन्न भ्रममा जीउन हामीलाई बाध्य तुल्याइएको छ।

मानवशास्त्री भन्छन्, स्थानीय मुन्धुम वा पारिवारिक मुन्धुमलाई सामान्यीकरण गर्न मिल्दैन। त्यसलाई ऐतिहासिक तथ्य र आँकडासित तुलना र विश्लेषण गर्नुपर्दछ। कुनै थरको विकासक्रम प्रस्तुत गर्दा त्यो तथ्यपरक हुनुपर्दछ। छलफलमा उठेका सवाललाई तार्किक ढङ्गले निरुपण गर्नुपर्दछ। लिम्बुवान अभियानले लिम्बूलाई लिम्बूमै सीमित पार्न खोजे तापनि इतिहास र मुन्धुमले अझै पर जान र खोज्न कर लगाउँछ। हामी हाम्रो ज्ञानको भोक र अध्ययनको क्षितिजलाई राजनीतिक अभियानको मूल्यमा त्याग्न सक्दैनौं।

फयङ साँबाको इतिहासलाई नेपालको इतिहास एवं विश्व इतिहाससित जोड्ने काम हालसम्म भएको छैन। अतः फयङ साँबालाई विश्व समुदायको एक परिवारको रुपमा उभ्याइने काम चुनौतिपूर्ण छ।

विद्यमान चुनौतिलाई स्वीकार गर्दै फयङ साँबा अध्ययनको प्रारम्भिक पाठ 'किरात लिम्बू संस्कृतिः मानवशास्त्रीय विवेचना' २०७७ पुस्तक र फयङ साँबा वंशावली २०८० ईबुकमा प्रकाशित गरियो। पुस्तकमा किरात सेनदेखि साँबा उत्पत्तिकालसम्मलाई एक खण्ड र साँबाबाट फयङ उद्विकास भएपछि वर्तमानसम्म अर्को खण्डमा वंशावली प्रकाशित गरियो। साँबाबाट फयङ विकासक्रम पछि हाल १२/१३ पुस्ता पुगेको अवस्था छ।

हाल अरूले पुस्ताक्रम सोधे फयङ साँबाले आफ्नो जातीय १०-१२ पुस्ताक्रम मात्र बताउँदा सगोत्री किरात लिम्बू वंशावलीसित तुलनीय भएन। किनभने किरात लिम्बूका अन्य वंशावलीमा करिव ३२/३३ पुस्ताक्रम देखाउने गरेका छन्। उदाहरणका लागि सेन वंशबाटै उद्विकासित योङहाङ वंशावली, चबेगु वंशावलीले पनि हाल करिव ३२/३३ पुस्ताक्रम देखाउने गरेका छन्। यसकारण फयङ साँबा सदस्यहरूले पनि आफ्नो वंशावली अरूसित तुलनीय बनाउनु पर्‍यो भनेर आवाज उठाएका छन्। २०८१ साल जेठ २६ गते धरानमा बसेको फयङ साँबा समाजले वंशावलीलाई अन्य वंशावलीसित तुलनीय बनाउने निर्णय गर्‍यो। लेखकले वंशावली बारेमा ब्याख्या गरेपछि फयङ साँबा वंशावलीलाई सेन वंशबाट देखाएर पुस्तक प्रकाशित गर्ने सहमति भयो। फयङ साँबा समाजको त्यही निर्णयलाई आधार मानेर लेखकले फयङ साँबा वंशावली २०८१ लेख्ने जिम्मेवारी पाएको हो।

'किरात लिम्बू संस्कृतिः मानवशास्त्रीय विवेचना' २०७७ र फयङ साँबा वंशावली २०८० ईबुकमा भएका त्रुटीलाई सच्याएर नयाँ तथ्यांकसहित वंशावली अध्यावधिक गर्नु पर्नेछ। फयङ साँबाका मेवाखोला, हाङपाङ, सिक्किम लगायतका हाँगाहरूलाई अद्यावधिक गरिने छ।

## ३.२ अध्ययनको उद्देश्य

सहभागितामूलक अनुसन्धान विधिद्वारा यस समुदायको जनसांख्यिक, सामाजिक, सांस्कृतिक, धार्मिक अवस्था पत्ता लगाउनु प्रमुख उद्देश्य हो। यसका साथै जातीय उत्पत्ति, विकासक्रम र वितरणको अध्ययन गरी फयङ साँबा वंशावली २०८१ लाई किरात लिम्बूका अन्य वंशावलीसित तुलनीय बनाइनेछ।

तुङदुङ्गे मुन्धुमको ऐतिहासिक पृष्ठभूमिको खोजी गरेर साँबा वंशावलीसित यसको सम्बन्ध एकीन गरिने छ। अध्ययनद्वारा किरात, सेन, राई, साँबा र फयङ रक्तगत अनन्याका ठोस आधार पत्ता लगाइने छन्। साँबा थर उद्विकास हुनु अघिका पूर्वज थाहा हुनेछन्। यसरी फयङ साँबाको उदय कहाँ कहिले भयो र हाल तिनका परिवारका सदस्य कहाँ कति छन् तथ्यपरक रूपमा जनाइनेछ।

## ३.३ अध्ययनको औचित्य

ऐतिहासिक प्रमाणअनुसार अघि किरात याक्थुङ समूहमा एकजना वंशावली तथा इतिहास लेख्ने साम्बा रहन्थे। उनले समूहभित्रका सदस्यहरूको वंशावली लेख्दथे। उनले समूहबाहिर गएका, आएकाहरूको पुस्ताक्रमसमेत लेखाजोखा गर्ने गर्दथे।

यो परम्परा समयको अन्तरालमा परिवर्तित हुँदै आयो। आफ्नो जीविकोपार्जनमा सबै व्यस्त भए। गाउँघरमा जान्नेबुझ्ने मानिसले यदाकदा जानकार वा लेख्न जान्ने मानिस बोलाएर वंशावली लेख्न लगाउने चलन पनि चल्यो। उक्त टिपोटलाई पोको पारेर बाकसमा सुरक्षित राख्ने गरिन्थ्यो। यो प्रचलन आजभन्दा करिब ५०/६० वर्ष अघिसम्म थियो।

त्यसरी हातले टिपोट गरेका वंशावली धेरै मात्रामा हराए, धेरै मात्रामा माउकीराले खाए, कोही मुसाले खाए, कतिपय आगोमा जलेर नष्ट भए। जुन उद्देश्यले भावी सन्तातिका लागि वंशावली लेखिए ती अधिकतर पूरा हुन पाएनन्। यस्ता गुनासा धेरै बूढापाकाको मुखबाट हामी सुन्दथ्यौं। कतिपय बूढापाका त्यसरी कागजात सुरक्षित राख्न नसकेकोमा पछुताउने गर्दथे। अतः हामीले चाहेर पनि हाम्रो ज्ञान र इतिहासलाई पुस्तान्तरण गर्न सकेनौँ। त्यसैले लिखित स्रोतसामग्रीको अभाव आज खडकिएको छ।

अध्ययनका क्रममा थाहा भयो कि किरात लिम्बू सम्प्रदायमा जानकारी लुकाउने चलन पनि पाइन्छ। कसैसित वंशावलीबारे जानकारी भए तापनि अरुलाई हत्तपत्त नबताउने प्रवृत्ति छ। कारण, नातागोता सबै खुलस्त बताइयो भने अंशियारको संख्या बढ्न सक्छ। फलस्वरुप आफ्नो जग्गा वा धनसम्पत्ति बाँड्नुपर्ने जोखिम हुन्छ। त्यसैले वंशभित्रै पारिवारिक जानकारी खुलस्त रुपमा छलफल गर्नुभन्दा लुकाउने वा टाढा देखाउने प्रवृत्ति समेत अध्ययन क्रममा थाहा पाइयो। विभिन्न कारणवश आफूसित भएको जानकारी हत्तपत्त अरूलाई नदिने परम्पराले अध्ययन चुनौतिपूर्ण बन्दछ।

नेपालमा २०४६ सालमा बहुदलीय व्यवस्था आयो। सामाजिक वातावरण केही मात्रामा खुल्ला भयो । मानिसका मनमा दबिएर बसेका आकांक्षा प्रकट हुन थाले। २०६३ सालमा नेपामा पहिचानमा आधारित आन्दोलन उत्कर्षमा पुग्यो। २०४६ सालदेखि २०६३ सालसम्ममा नेपाली आदिवासी जनजातिमा जागृतिको नयाँ जनलहर आयो। आदिवासी जनजातिले आफ्नो पहिचान र इतिहास खोजी गर्न थाले। यही सिलसिलामा वंशावली लेख्ने क्रम बढ्यो। फलस्वरुप, आदिवासी लगायत जातजातिका वंशावली लेखिन थाले।

ज्ञानको खोजीले स्वभाविक रूपमा समाजमा नौलो जागरण ल्यायो। तर यसबाट आपसी कटुता पनि जन्मिए। २०६३ सालपछि नेपाली समाजमा जातीय तनावको स्थिति आयो। जातीय आधारमा संघीयताको निर्माण गर्ने सवाल उठ्यो। यसरी कुनै जातिको विशुद्ध इतिहास लेख्ने क्रममा एउटा तगारो आयो। अध्ययन अनुसन्धानमा जातीय राजनीतिको प्रभाव पर्न गयो। राजनीतिक नाराले गर्दा किरात र गैरकिरातबीच मात्र नभएर लिम्बू र राई तथा लिम्बूबीच विवाद भए।

राजनीतिक प्रभावको कारण किरात लिम्बू चेतना पनि बहकिन गयो। लिम्बुवान रणनीतिले गर्दा कतिपय किरात लिम्बूले आफूलाई

लिम्बुवान क्षेत्रको आदिवासी, भूमिपुत्र भनेर दावी गर्नु राजनीतिक दृष्टिले आवश्यक पनि थियो। तर सो क्रममा मुन्धुम र इतिहासको अपब्याख्या गर्ने क्रम बढ्यो। सामाजिक सन्जालमा यस्तो मुन्धुमी भ्रम छर्न थालियो कि ताप्लेजुङमा रहेको एक योनी आकारको ढुङ्गाबाट लिम्बू जाति फुतुफुतु निस्केका थिए।

यसरी राजनीतिको आडमा आदिभौतिक ज्ञानको अपब्याख्याले मानिसलाई दिग्भ्रमित तुल्याउँदो रहेछ। मानिसलाई वैज्ञानिक दृष्टिकोण राख्न वा सोच्नलाई रोक्दो रहेछ। जुन कुरा इतिहासमा पनि थियो, वर्तमानमा पनि भोगिदैछ। अतः मानवशास्त्रीय दृष्टिकोणबाट गरिएको अध्ययनले मात्र हामी सत्य र तथ्य नजिक पुग्न सकिने भएकाले यो अध्ययन गरिएको हो।

यो लेखकको परिवारका करिव चार पुस्ता जानिनजनी वंशावली लेखन कार्यमा गाँसिएका छन्। लेखकका पिता ऐतराज फयङ (पुस्ताक्रम २९) र उनका काका सेरबहादुर फयङ (पुस्ताक्रम २८) ले फयङ साँबा २०५६ को आधारशिला तयार पारेका हुन्। हाल लेखकलाई भाइ धीरेन्द्रराज फयङ (पुस्ताक्रम ३०) र लेखकका दुई छोराले पनि उक्त वंशावली अध्यावधिक गर्ने कार्यमा साथ दिएका छन्। त्यसैले फयङ साँबा समाजले लेखकबाट वंशावली लेखनमा केही आशा राखेको हो।

## ३.४ अध्ययनको सैद्धान्तिक ढाँचा

यो अन्वेषणात्मक, गुणात्मक अध्ययन (Exploratory and Qualitative Study) हो। यो तुलनात्मक अध्ययनमा आधारित छ। प्राप्त ज्ञान वा सिद्धान्तमाथि गरिएको तर्कपूर्ण व्याख्यानमाथि यो अध्ययन अडेको छ।

यहाँ कुनै पनि ज्ञानलाई अन्धानुगत ढङ्गले स्वीकार नगरी विभिन्न तथ्यहरूसित तुलना र विश्लेषण गरी निष्कर्ष निकाल्ने काम गरिएको

छ। आवश्यकतानुसार थप तथ्य र आँकडासित भिडाएर तार्किक विश्लेषण, संश्लेषण वा निष्कर्ष निकाल्ने काम यहाँ भएको छ। निष्कर्ष निकाल्दा आलोचनात्मक यथार्थवाद (Critical Realism) को कसीमा तथ्यलाई घोटेर परख गरिएको छ।

ज्ञानको अवस्था सत्तामिमांसा (Ontology) अन्तर्गत परम्परागत एवं आदिभौतिक ज्ञानसमेत अध्ययन गरिएका छन्। भरपर्दा ज्ञान ज्ञानमिमांसा (Epistemology) अन्तर्गत मानवशास्त्र र आधुनिक विज्ञानका सम्बन्धित क्षेत्रका ज्ञान र सिद्धान्तलाई अध्ययनको दायरामा ल्याइएको छ। अध्ययन गर्दा मूल्यमीमांसा (Axiology) मा जातीय, राजनीतिक, धार्मिक, भौगोलिक आदि कुनै आग्रह पूर्वाग्रह नराखीकन प्राज्ञिक मूल्य र मान्यतालाई विशेष ध्यान दिइएको छ। अध्ययनको रणनीति (Research strategy) मिश्रित प्रकृतिको छ। यो अध्ययनको विशेषता एकातिर अनुदैर्ध्य अन्वेषणात्मक (Longitudinal Exploratory) छ भने अर्कातिर प्रजातिवर्णन (Ethnography) पनि भएको छ।

फयङ साँबा जातिको उद्विकासलाई व्याख्या गर्ने उत्तम सामाजिक–जैविक ढाँचा (Socio-biological model) हो। (Wilson, 1975) प्रस्तुत अध्ययनमा तुङदुङ्गे मुन्धुमलाई सामाजिक–जैविक ढाँचा सिद्धान्त अनुरूप पुनःब्याख्या गरिएको छ। साँबा उद्विकास काल किरात कालदेखि लिएर लिम्बुवान कालसम्म वंश वा जिनको सुरक्षाखातिर आफ्नो वंश खोज्दै विभिन्न लहरमा मेवाखाला आएर साँबा बने। उनीहरूले त्यहाँ भूअमिधा स्थापित गरे । तुङदुङ्गे मुन्धुमले जसलाई प्रमाणित गर्दछ।

सामाजिक जैविक सिद्धान्त (Socio-Biological model) अनुरुप मानिस आफ्नो पुर्खा, वंश, जिन खोज्दै जाने र आफ्नो सङ्गठन बलियो र विस्तारित बनाउने आकाङ्क्षा मानिसको जिनमा अन्तरनिहित रहन्छ। यसक्रममा तुङदुङ्गे अरुण, वरुण, तम्बरको मुहान क्षेत्र हुँदै मैवाखोला,

मेवाखोला तथा तम्बरखोलाको यात्रा गर्दछन्। उनीभित्र रहेको जिनको प्रभावले उनले आफ्नो मानिस खोज पडताल गरेको देखिन्छ। यसकारण यो मुन्धुमको समष्टिगत सार सामाजिक जैविक ढाँचा (Socio-Biological model) अनुरुपको छ।

सूचना, तथ्य, ज्ञानको क्रमबद्ध संकलन, विश्लेषण र प्रस्तुतीकरणलाई सामान्य भाषामा अध्ययन भनिन्छ। तर यसले मात्र अध्ययनको परिभाषा पूर्ण हुँदैन। विद्यमान सूचना, ज्ञानको आधारमा तर्कपूर्ण विश्लेषणसहितको नयाँ ज्ञान हासित, सिद्धान्त प्रेरितीकरण वा निर्माणलाई वास्तविक अनुसन्धान भनिन्छ।

नयाँ अवधारणा, विधि र बुझाइसहित अनुसन्धान गर्ने गरिन्छ। यसलाई सजिलै बुझिने भाषामा भन्नुपर्दा कुनै ज्ञान र सिद्धान्तमाथि तार्किक तर्क राख्नु नै शोधको मूल मान्यता हो। तर्कवितर्कबाट निस्कने ज्ञानलाई पुनः थप तर्कवितर्क गरेर मात्र हामी अनुसन्धानको निष्कर्षमा पुग्दछौँ। प्रस्तुत अध्ययनमा कटौतीकरण (Deduction) र प्रेरितीकरण (Induction) सिद्धान्त अवलम्बन गर्दै विश्लेषण, संश्लेषण कार्य सम्पन्न भएको छ। एकातिर उपलब्ध सिद्धान्त अध्ययनबाट उत्पन्न परिकल्पनालाई प्रमाण अवलोकन पश्चात तथ्य निरुपण गरिएको छ भने अर्कातिर भेटिएका देखिएका प्रमाणको ढाँचा हेरेर परिकल्पना गरी थप प्रमाणको आधारमा तथ्यहरूलाई सङ्गठित बनाई सिद्धान्त प्रेरितीकरण र निर्माण भएका छन्।

ज्ञानको अवस्था सत्तामीमांसा (Ontology) कस्तो छ? यसमा आदिभौतिक ज्ञानको विस्तृत अध्ययन गरिएका छन्। भरपर्दा ज्ञानको अवस्था ज्ञानमीमांसा (Epistemology) के कस्ता छन्? तिनको पनि अध्ययन गरिएको छ। अध्ययनमा कत्तिको मूल्यमीमांसा (Axiology) अपनाइएको छ? यसमा जातीय, राजनीतिक, भौगोलिक आदि कुनै पनि आग्रह पूर्वाग्रह नराखी प्राज्ञिक मूल्य र मान्यतालाई विशेष जोड दिइएको

छ। अध्ययन रणनीति (Research Strategy) मा यो मिश्रित प्रकृतिको छ। यो एकातिर अनुदैर्ध्य अन्वेषणात्मक (Longitudinal Exploratory) रहेको छ भने अर्कातिर प्रजातिवर्णन (Ethnography) मा पनि अध्ययनले दृष्टि पुऱ्याएको छ। सामाजिक–जैविक सिद्धान्तले प्रजातिवर्णन चिरफार गरिएको छ।

पद्धति (Approach) मा पनि यो मिश्रित प्रकृतिको छ। यो अनुसन्धान एकातिर विषयवस्तुबाट स्वतन्त्र रहेर ठोस प्रमाणमा अडेको छ। अध्ययन सकारात्मकवाद (Positivism) मा आधारित छ। अर्कातिर शोधकर्ता स्वयम् शोध शीर्षकको विषयवस्तु भित्र परेकाले उसमा अन्तर्निहित ज्ञान र दृष्टिकोणसमेत घटनाक्रम अध्ययन (Phenomenology) मा परेका छन्।



## ३.५ अध्ययनको सीमा

यो अध्ययन किरात साँबा फयङ जातिमा केन्द्रित  छ। यसका नतिजा सारमा तुलनीय भए तापनि सबै नतिजाका रूपलाई अन्य उपथरहरूमा सामान्यीकरण गर्न सकिन्न। सगोत्री वंशावलीसित भने पुस्ताक्रम सुरूवातका आधारमा भने तुलना गर्न सकिन्छ। अध्ययनका क्रममा उठाइएका ऐतिहासिक घटनाक्रम, तथ्य र प्रमाणलाई सामान्यीकरण गर्न सकिन्छ। सैद्धान्तिक र दार्शनिक पृष्ठभूमिलाई पनि अन्य जाति वा समुदायमा तुलना गर्न सकिन्छ।

साँबाका मुन्धुम र इतिहास सगोत्री सेन वंश वंशावली वा घटनाक्रमसित तुलनीय छन्।  स्थानीय तहमा गाइने विभिन्न मुन्धुमलाई सोही जातिको ज्ञानका रूपमा मात्र लिन सकिन्छ। वंशावलीमा पुस्ताक्रम गणना गर्दा वा सगोत्रीसित तुलना गर्दा सीमा लागु हुन्छन्। सेन वंशको इतिहास वंशावलीहरूले सिम्रौनगढसम्म पहिल्याएका छन्। सिम्रौनगढका अभि सेन, पदम सेन, लारा सेन, फोरा सेन हुदै चौदण्डी कोशी बराहमा पुग्दा चुडामणि सेनको नाम उल्लेख गरेको सेन चबेगु वंशावली (२००७) र योङहाङ वंशावली (२०११) मा पाइन्छन्। वंशावली अनुसार चुडामणि सेनका चार भाइ सन्तान थिए- सेनेहाङ, साँबासेरेङ, सुरद सेन र मणि सेन।

सगोत्री सेन चबेगु, योङहाङ वंशावलीले चुडामणि सेन र सेनेहाङ पुस्ताबाट आफ्नो वंशावली आरम्भ गरेका छन्। अभि सेनबाट गणना गर्दा त्यो पाँचौ र छैटौँ पुस्तामा पर्दछ। प्रस्तुत फयङ साँबा वंशावलीले अभि सेनबाटै वंशावली आरम्भ गरेको छ। त्यसो हुँदा पाँच छ पुस्ताक्रम बढी हुनआउँछ। उक्त आधारमा गणना गरेमा तुलनीय पुस्ताक्रम निस्कन्छ।

सेन वंशीय लिम्बू वंशावलीवीच साँबा पुस्ताक्रममै एकरूपता छैन। तापनि सगोत्री सेन वंशबाट विकसित दावी गर्ने किरात लिम्बू

वंशावलीहरूका तुलनात्मक अध्ययनका आधारमा प्रस्तुत वंशावली तयार भएको हो। सेनदेखि साँबा विकासक्रमसम्म वंशवृक्ष तयार पार्दा सेन चबेगु, लिङदेन र योङहाङ वंशावलीलाई मध्यनजरमा राखिएको छ। साँबादेखि फयङ वंशवृक्ष तयार पार्दा भने नजिकका भ्राता चङबाङ साँबा वंशावलीलाई आधार मानिएको छ।

कुन पुस्ताक्रमलाई वंशावलीले फेद मानेको हो सो विचार गरेर मात्र सगोत्री पुस्ताक्रमको मूल्यांकन गर्नुपर्दछ। यद्यपि, फयङ साँबा वंशभित्र भने उपलब्ध पुस्ताक्रम तुलनायोग्य छन्। उदाहरणका लागि सेन-साँबाको २१ औँ पुस्ताबाट फयङ थर सुरू भएकाले फयङको १० औ पुस्ता सेन-साँबा-फयङ वंशावलीमा ३० औँ पुस्ताक्रममा पर्दछ। सोही आधारमा फयङ साँबा पुस्ताक्रमको गणना र मूल्यांकन गर्न सकिन्छ।

किरात समुदायको अध्ययन बहुआयामिक विषय हो। किरात जाति र संस्कृतिको मानवशास्त्रीय अध्ययनका क्रममा फयङ साँबाका पनि बहुक्षेत्रका तथ्य र प्रमाण संकलन गरिए। जसको बृहत्तर समीक्षा 'किरात लिम्बू संस्कृति मानव शास्त्रीय विवेचना' २०७७ (प्रथम संस्करण), २०८०/२०२३ (ई-बुक संस्करण), फयङ साँबा वंशावली २०८०/२०२३ (ई-बुक संस्करण) मा प्रस्तुत छन्।

समुदायको चाहना बमोजिम नामावली केन्द्रित फयङ साँबा वंशावली शिर्षकमा एक छरितो छापा संस्करणको पुस्तक निकाल्नु पर्ने भएकाले किरात लिम्बू संस्कृति मानव शास्त्रीय विवेचना' २०७७ (प्रथम संस्करण), २०८०/२०२३ (ई-बुक संस्करण) मा समेटिएका यावत् सवाल यहाँभित्र समावेस गर्न संभव र ब्यवहारिक भएन। जनआकांक्षाबाट उत्पन्न  वस्तुगत सीमाले यस वंशावलीको संरचना र प्रस्तुती निर्धारणमा भूमिका खेलेको छ। फलस्वरूप पूर्व प्रकाशित पुस्तकका महत्वपूर्ण अंश र सान्दर्भिक सार मात्र यहाँ प्रस्तुत गरिएका छन्।

त्यसकारण यस वंशावलीमा जिज्ञाशा शान्त नभएका कतिपय सवाल किरात लिम्बू संस्कृति मानव शास्त्रीय विवेचना' २०७७ (प्रथम संस्करण), २०८०/२०२३ (ई-बुक संस्करण) मा भेटिन सक्छन्। यस वंशावलीको सीमालाई बुझेर मेरा अन्य प्रकाशनहरू समेत पढिदिनहुन आग्रह गर्दछु। संस्कृति सम्बन्धी अनुसन्धानात्मक लेखका शिर्षकहरू सन्दर्भसूची पछि दिइएको छ।

वंशावली भन्ने वित्तिकै ठेली जस्तो देखिने तर भित्र हेर्दै जाँदा सामान्य पाठक वा अनुसन्धानकर्तालाई कतिपयमा गुदी भेट्न मुस्किल पर्दछ। प्रायः वंशावली चन्दादाताका तस्वीरहरूले भरिएका फोटो एलबम जस्ता लाग्दछन्। त्यस्ता प्रचारशैलीबाट पाठ सिक्न सकिन्छ। अनावश्यक तस्वीरहरूको आर्थिक भार पाठकलाई बोकाउनु उचित होइन। त्यसकारण एउटा सीमाभित्र रहेर मात्र व्यक्तिगत फोटोहरू प्रकाशन गरेमा उचित मान्न सकिएला।

अर्को कोणबाट हेर्दा प्रस्तुत वंशावलीको अनुसूचीमा उल्लिखित आर्थिक सहयोगदाताले वंशावलीप्रति आफ्नो चाहना दर्शाएका हुन्। आफूले यो समाजलाई सकेको सहयोग गर्न उदारता देखाएका हुन्। उक्त भावनालाई कदर गरेर यथोचित स्थान दिनु लेखक र प्रकाशकको दायित्व पनि हो। सकारात्मक दृष्टिमा पाठकलाई यो जातिका मानिस के कस्ता रहेछन् भन्ने जिज्ञासा सहयोगदाताका फोटोले पूरा गर्नेछन्। स्मरण रहोस्, वेलायतमा बस्नेहरू वेलायती सेनाका अवकासप्राप्त सैनिक सदस्य र तिनका परिवारजन हुन्। जापान र अरब मुलुकका फयङ साँबा भने रोजगारीमा पुगेका हुन्।

नेपालका सुनसरी, पाँचथर र भारतको सिक्किमका फयङ साँबाका अनुहार पनि वंशावलीमा देखिन्छन्। तर वंशावलीमा मेवाखोला ताप्लेजुङ, संखुवासभाका फयङ साँबा समाजका सदस्यहरूको तस्वीर राख्न सकिएन। फयङ साँबा बहुसंख्यक बसेका भुटानमा बसोबास

गर्नेहरूको तस्वीर पनि यस वंशावलीमा राख्न पाइएन। यो कमीलाई पूरा गर्न आगामी दिनमा सम्बन्धित क्षेत्रका फयङ साँबा समाजले आफ्ना तस्वीर लेखकलाई उपलब्ध गराएमा आगामी संस्करणमा प्रकाशित गरिनेछ।

लेखक, प्रकाशकले कहिल्यै कसैलाई आर्थिक सहयोग वा अनुदान आव्हान गरेको छैन र गर्दैन पनि। लेखकले आफूलाई जन्म दिने समाजलाई आफ्नो क्षेत्रबाट सकेको योगदान निस्वार्थ र इमान्दारपूर्वक गर्न खोजेको हो। निःस्वार्थ सामाजिक सेवा नै जन्मनुको अर्थ हो। हुन त कसैले यसलाई जातीयता भन्लान् तर म यसलाई मानव सेवाकै एक रूप मान्दछु। समग्रमा, सीमा र विधिमा रहेर वंशावली अध्ययन र प्रकाशनलाई अघि बढाउने प्रतिवद्धता  व्यक्त गर्दछु।

# अध्याय ४ -अध्ययन विधि

यो अध्ययन मूलतः मानवशास्त्रीय दृष्टिकोणबाट गरिएको ऐतिहासिक अन्वेषणात्मक (Exploratory) अध्ययन हो जसले लिखित आँकडाको वस्तुगत विश्लेषण, तुलनात्मक अध्ययन र संश्लेषण गर्दछ। यसले फयङ साँबाको पारिवारिक विकास र व्यवहारको गुणात्मक सूचना प्राथमिक स्रोतको रुपमा संकलन गरेको छ।

नेपालका ताप्लेजुङ, पाँचथर, संखुवासभा, सुनसरी, झापा, मोरङ, ललितपुर तथा भारतको सिक्किम, असम र भुटानका फयङ साँबा बस्तीलाई समुदाय (Cluster) मानिएका छन्। उद्देश्यमूलक अनुकूल नमूना विधि (Purposive and Convenience Sampling) अनुसार संकलकद्वारा सूचना संकलन भएका छन्। फयङ साँबाको जनसांख्यिक तथा सांस्कृतिक विशेषतामा एकरुपता (Homogenous) भएकाले उपरोक्त नमूना संकलन विधि अपनाइयो जुन अन्य जाति वा थरमा सामान्यीकरण (Generalization) गर्न मिल्दैन।

सामाजिक जैविक ढाँचा (Socio-Biological Model) मा आधारित रहेर जिन (Gene) को खोजी सिद्धान्तमा अध्ययन अघि बढेको छ। यसले रक्तगत अनन्याको खोजी गर्दै पहिचान स्थापित गरेको छ। पहिलो वंशावलीलाई आधार मानेर त्यसमा अद्यावधिक गर्ने वा थप सूचना संकलन गर्ने काम भएको छ। त्यस कार्यलाई यहाँ निरन्तरता दिइएको छ। फयङ साँबा वंशावली २०५६ का माध्यमद्वारा वंशावली अद्यावधिक कार्य भएका छन्। निर्धारित चेक लिष्टबाट सांस्कृतिक अवस्था सम्बन्ध सूचना संकलन गरिएका छन्। वंशावली २०५६ मा नामावली थप गर्नुपरेमा छुट्टै कागजमा टिपेर ल्याइएको छ। जसमाथि अध्ययन, विश्लेषण गरी अद्यावधिक तथ्यांक गरिएको छ। यसका साथै थप विवरण, फोटो र पाण्डुलिपि पनि अध्ययनार्थ संकलन भएका छन्।

संकलकबाट प्राप्त सूचनालाई थपेर वंशावली ताजा बनाउनने काम भयो। लेखक तथा अध्ययनकर्ताद्वारा ऐतिहासिक तथा सांस्कृतिक सूचनालाई बुँधागत रुपमा टिपोट गरी विश्लेषण पश्चात शोध अभिलेखन भयो। विश्लेषित सूचनालाई वेभसाइट, मेसेञ्जर आदि सामाजिक सञ्जालबाट प्रकाशित गरियो। सहभागितामूलक ढंगले नामावली चेकजाँच गरियो। प्राप्त सुझावका आधारमा वंशावली लेखनकार्य परिमार्जित गरियो।

अध्ययनमा प्राथमिक तथा द्वितीय स्रोत दुवै उपयोग भएका छन्। प्राथमिक सूचना संकलन अन्तरवार्ता, सामूहिक छलफल विधिद्वारा भएका छन्। यसका साथै हस्तलिखित मुन्धुम, साँबाका वंशावली, टिपोट, सरकारी तथा व्यावहारिक कागजात, सरकारी कागजातका प्रकाशित प्रतिलिपिहरू, पत्रपत्रिकामा प्रकाशित समसामयिक लेख, अन्तरर्वार्ता, कलाकृति, फोटोग्राफी, भाषण, पालम तथा गीतसंगीत एवं वृत्तचित्रलाई प्राथमिक सामग्रीका रूपमा अध्ययनमा सामेल गरिएका छन्।

विभिन्न स्थानहरूको स्थलगत अवलोकन भ्रमण तथा भेटघाटलाई पनि प्राथमिक तथ्यांक संकलनका आधार बनाइएको छ। यस क्रममा संकलक तथा सहजकर्ता धीरेन्द्रराज फयङले भारतका केही भाग लगायत ताप्लेजुङ, संखुवासभा जिल्लाको स्थलगत भ्रमण गरेर तथ्यांक ल्याएका छन्। विभिन्न स्थानमा छरिएका फयङ साँबासित टेलिफोन, मोबाइल, ई–मेल, भाइबर, म्यासेन्जर आदिबाट सम्पर्क गरी सूचना संकलन गर्ने कार्य भएका छन्। लिम्बू भाषा, संस्कृति र इतिहासका जानकारसित भेटघाट, अन्तर्वार्ता र सुझाव संकलन कार्य पनि गरियो। २०७५ साल माघमा धरानमा भएको साँबाहरूको भेलाहरूमा थप सूचना संकलन गरियो।

द्वितीय सूचना सामग्रीमा इतिहास, साहित्य, भाषाविज्ञान, सामाजिकशास्त्र तथा मानवशास्त्र, धर्मशास्त्र, दर्शनशास्त्र, संस्कृति, जीवविज्ञान, मनोविज्ञान, वंशाणुविज्ञान, पुरातत्त्व आदि विषयका पुस्तकहरू, जर्नल, शोधपत्र, प्राज्ञिक लेखरचना, निबन्ध आदि हार्डकपी तथा अनलाइनमा अध्ययन गरिए। अनलाइनमा प्रकाशित विभिन्न वैज्ञानिक सङ्घसंस्था, प्राज्ञिक प्रकाशन केन्द्र, इन्साइक्लोपिडिया मार्फत् अद्यावधिक तथ्यांक तथा सूचना प्राप्त भएका छन्।

यसका साथै लिम्बूका अन्य थरका वंशावलीको अध्ययन गरियो। किरात लिम्बूको इतिहास, नेपालको इतिहास, प्राचीन भारतीय इतिहास, प्राचीन विश्वको इतिहासलाई प्राथमिकताका साथ अध्ययन र विश्लेषण गरियो । माथिका सबै प्राथमिक तथा द्वितीय सूचनाका स्रोतलाई अमेरिकन साइकोलोजिकल एशोसियसन (APA) शैलीमा स्रोत जनाउ (साइटेसन) तथा सन्दर्भसूची उल्लिखित छन्।

लेखकलाई माता नरमायाले बताएअनुसार वि.सं. २०१६ सालमा हाङपाङबाट ऐतराज फयङ साँबा (पुस्ताक्रम २९) र चारक्याम्बा भनिने सेरबहादुर (पुस्ताक्रम २८) ताप्लेजुङको मेवाखोला थुम साँबा गाउँमा गएका थिए। त्यहाँ दाजुभाइसंग भेटेर त्यहाँका जग्गामा आफ्नो हाँगाका दाजुभाइको किपट हकदाबी स्थापित गरेर ल्याए। त्यसबेला उनीहरूले हाङपाङ छुट्टिएका दाजुभाइको वंशावली टिपेर ल्याए। फर्केर आउँदा साँबाका दाजुभाइले एउटा गतिलो बोका पनि कोसेलीस्वरुप दिएको संस्मरण आमा नरमायाले लेखकलाई बताइन्। त्यसरी वंशावली संकलन कार्यको पृष्ठभूमि त्यसैबेला आरम्भ भएको मान्न सकिन्छ। यसबारेमा विश्लेषण सहितको विवरण वंशावलीको रचनागर्भ शिर्षकमा छ।

यो अध्ययनले लामो कालखण्डलाई आधार बनाएको छ। वि.सं. २०१६ मा संकलित वंशावलीको आधारमा फयङ साँबा वंशावली २०५६ प्रकाशित भयो। २०७५ साल वैशाखमा सुनसरी धरानमा हाङपाङ

हाँगाका फयङ साँबाका पहलमा समग्र फयङ साँबा समाजको वैठक बस्यो। उक्त बैठकले २०५६ सालमा प्रकाशित पहिलो वंशावलीलाई विस्तार र अद्यावधिक गरी पुस्तकका रूपमा वंशावली प्रकाशित गर्ने निर्णय गर्‍यो। देश विदेशमा छरिएका सम्पूर्ण फयङ दाजुभाइको नाम ठेगाना, पुस्ताक्रम तथा सांस्कृतिक सूचना संकलन गर्ने गरी वंशावली लेख्ने कामको जिम्मा डा. नवराज सुब्बालाई दिइयो। त्यसको लागि एक समिति पनि गठन भयो। बैठकले नामावली संकलन तथा सूचना संकलन समितिमा धीरेन्द्रराज फयङ, टेकबहादुर फयङ र चन्द्र प्रसाद फयङलाई तोक्यो।

२०८१ साल जेठ २६ गते धरानमा फयङ साँबा समाजको वैठक बस्यो। वैठकले डा. नवराज सुब्बाद्वारा लिखित 'किरात लिम्बू संस्कृतिः मानवशास्त्रीय विवेचना २०७७' माथि विचार विमर्स र स्वागत गर्‍यो। ग्रन्थ बृहद् भएकाले फयङ साँबा वंशावलीमा केन्द्रित 'फयङ साँबा वंशावली' प्रकाशित गर्ने भेलाले निर्णय गर्‍यो। बैठकमा फयङ साँबा वंशावलीलाई किरात लिम्बूका सगोत्रीय वंशावलीसित तुलनीय बनाउने माग उठ्यो। लेखकले वंशावलीसम्बन्धी ब्याख्या गरेपछि बैठक एक निष्कर्षमा पुग्यो। साँबा परिवारको वंशावलीसित तुलनीय बनाउन फयङ साँबा परिवारको सेन वंशदेखि हालसम्म करिव ३२-३३ पुस्ता खुल्ने गरी वंशावली तयार गर्ने बैठकमा सर्वसम्मत निर्णय भयो। साथै, बैठकले वंशावली लेखनकार्य र पुस्तक छपाइ कार्यको जिम्मेवारी लेखक डा. नवराज सुब्बालाई दियो।

वि.सं. १८०० तिर मेवाखोला साँबाबाट आठराई हाङपाङ झरेका फयङ साँबा त्यसबेला चुँवा र सोबुवखोला दोभानदेखि उभो दक्षिणदिशामा खुर्पेठ्याक गरेर जग्गा आवाद गरी बसे। १८०६ सालमा यिनीहरूको यक्सोसित जग्गा किचलो भएर मिलापत्र गरेको कागज रहेको लेखकका पिता ऐतराज फयङले लेखकलाई बताएका छन्। लेखकका आमा नरमायाले दिएको जानकारी अनुसार मेवाखोलाबाट

भूमिको तिरो बुझाउन मानिस आठराई हाङपाङ आउँने गर्दथे। उनीहरू केही दिन बसेर फर्कन्थे।

त्यसबाट मेवाखोला साँबा गाउँका मानिस र हाङपाङका फयङ साँबा तथा अन्यबीच सम्पर्क बढेको देखिन्छ। जसले वंशावली सुदृढ पार्न मद्दत पुग्यो। विक्रम सम्वत् पचासको दशकमा मेवाखोला साँबा क्षेत्रमा नापी भएपछि भने तिरो बुझाउने क्रम टुट्यो। आफ्नो भागको तिरो उठाउने जिम्मा टेकबहादुर फयङ साँबा परिवारले चाहिँ मेवाखोला साँबा बस्ने दाजुभाइलाई नै अधिकार सुम्पेको बताए।

यसरी लामो पृष्ठभूमि सहितको वंशावली प्रकाशन कार्य जारी छ। २०१६ सालमा मेवाखोलामा संकलित वंशावलीका आधारमा हाङपाङ छुट्टिएकाहरूको फयङ साँबा वंशावली २०५६ प्रकाशित भयो। त्यसैलाई आधार मानेर पुनः २०७५ सालमा वंशावली अद्यावधिक कार्य आरम्भ भयो। २०७७ सालमा प्रकाशित 'किरात लिम्बू संस्कृति मानवशास्त्रीय विवेचना' र ईबुकमा वंशावली प्रकाशित भयो। २०८१ सालमा धरान बैठकले वंशावली २०७७ लाई परिमार्जित गरी वंशावली प्रकाशन गर्ने निधो गर्‍यो। फलस्वरूप, प्रस्तुत 'फयङ साँबा वंशावली २०८१' प्रकाशित गरिएको छ। यसमा फयङ साँबाका सबै हाँगाका दाजुभाइका वंशावलीलाई यथासम्भव अद्यावधिक गरिएका छन्। www.nrsubba.com.np वेभसाइटमा पनि वंशावली हेर्ने ब्यवस्था मिलाइएको छ। वंशावली अध्ययन तथा लेखन कार्य निरन्तर जारी छ।

# अध्याय ५ -अध्ययनको नतिजा

## ५.१ प्राचीन तथा ऐतिहासिक खाका

आनुवंशिकी अध्ययन (Genetical studies) अनुसार आधुनिक मानवको वंशवृक्षको लहरो करिव दुई लाख वर्ष लामो छ। अर्को शब्दमा आजभन्दा करिब २००,००० वर्षअघि अफ्रिकामा एक आमाको कोखबाट आधुनिक मानव जातिको उदविकास भएको थियो। (Gibbons, 1992)

यति लामो मानव जातिको नालीबेलीलाई वंशावलीमा खिच्नु असम्भव प्रायः छ। वेदले बताएको स्वयम्भुव मनु र मुन्धुमले बताएको मुनातेम्बे वा मुना/मना काल इस्वीपूर्व ३३९१ अर्थात् आजभन्दा करिब ५३०० वर्षअघि मात्र हो। (Thulung, 1985) ऋग्वेद तथा अन्य संस्कृत साहित्यका वर्णित स्वयम्भुव मनु (ईशापूर्व ३३९१) तथा वंवत्सव मनु (ईशापूर्व २८११) का हुन्। (Sheoran, 2017) मानव मस्तिष्कले करिव ५००० वर्ष उत्तरका पुस्ताक्रम मात्र सम्झना गर्न सकेको छ।

बाँकी १९५,००० वर्षको पुस्ताक्रम टिप्नु मानव संस्मरण भन्दा बाहिर छन्। आजभन्दा ६०,००० वर्षअघि निग्रो जातिबाट मङ्गोल नश्लको विकास भएको चिनियाँ अध्ययनले प्रमाणित गरेको छ। (Li, 2004) चिनियाँ आख्यानले पनि उनीहरूका पुर्खा काला थिए भनेको छ। ती काला पुर्खा वातावरणीय प्रभावले पहेँला भएका उनीहरूको भनाइ छ। हिन्दु देवी काली, महाकालीको रूप पनि कालो छ। जसलाई हामी चिनियाँ अध्ययन वा आख्यानसित तुलना गर्न सक्दछौं।

माथि उल्लिखित करिब ५००० वर्षको अनुमानित पुस्ताक्रमलाई समेत प्रमाणित गर्न असम्भव छ। यद्यपि, श्रुति, स्मृति, प्रमाण र तुलनात्मक अध्ययनका आधारमा वंशवृक्षको सैद्धान्तिक तथा

अवधारणात्मक खाकासम्म कोर्न सक्दछौँ। प्राचीन धर्मग्रन्थ वा मुन्धुम वा जनश्रुति नै आरम्भिक वंशावली मान्नुपर्ने बाध्यता छ। प्राचीन लिखित वा मौखिक ज्ञानलाई वंशावलीको सांकेतिक, लाक्षाणिक, ब्यंङ्ग्यात्मक खाका मान्नुको विकल्प छैन। भाषा परिवारको भिन्नताले मानव पुर्खाका नाममा पर्नसक्ने प्रभाव महसुस गरेमा मात्र अन्यौलको भुमरीबाट निस्कन सकिन्छ।

मुन्धुमले स्वयम्भुव मनुको चर्चा गरेको तथा संस्कृत ग्रन्थमा पनि यसको उल्लेख भएको हुँदा स्वयम्भुव मनुको कालमा किरातका पुर्खा र आर्यका पुर्खा एकैठाउँमा बसोबास गर्दथे। अर्थात् किरात वा मङ्गोल, आर्य तथा खस, ककेशियन आदि सबैका पुर्खा मेसोपोटेमिया, पर्सियामा एकै ठाउँका वासिन्दा थिए। (Thulung, 1985) किरात मुन्धुमले पनि चीनमा आउनु पूर्व लिम्बूका पुर्खा मुनातेम्बेमा थिए भनेको छ। (Chemjong, 2003a)

करिब ५००० वर्षयताका पुस्ताक्रम निकाल्न हामीले वेदको सहारा लिनै पर्ने हुन्छ। वेदमा किरातका पुर्खाको आँकलन गर्न सक्दछौँ। कतिपय वैदिक ज्ञानलाई वैज्ञानिक उत्खनन् र अनुसन्धानले प्रमाणित गरेका पनि छन्। ती तथ्यहरूसित तुलना गरी तयार पारिएको मानव जातिको आरम्भिक वंशावलीलाई एक आधार मान्न सकिन्छ। भोट बर्मेली भाषामा आधारित किरात लिम्बूको मुन्धुमी वंशावली भन्दा भारोपेली भाषाको संस्कृतमा मानव वंशावली बृहद् र सन्दर्भसामग्री अधिक भएकाले किरातको आरम्भिक वंशावली तयार पार्दा वैदिक ज्ञानलाई स्रोत मानिएको हो।

अर्को कारण आदिवासीका ज्ञानलाई आर्यले संस्कृतमा अनुवाद गरेर आफ्नो बनाएको तथ्यलाई मध्यनजर गर्दा वेद तथा संस्कृतका ज्ञानमा किरात पूर्वजको पदचिन्ह भेटिन्छन्। (Pandian, 2019) त्यसैले संस्कृत भाषामा कुनै नाम छ भन्दैमा त्यो संकेतलाई पराय ठान्नु हुँदैन।

किनभने संस्कृत भाषा आदिवासी लगायतका भाषा मिसाएर बनाइएको एक परिष्कृत भाषा भएको हामीले बुभ्नुपर्दछ।

जेहोस्, आधुनिक मानिस उत्पत्तिकाललाई मानव ज्ञानले सांगपांगमा मात्र छिचोलेको छ। अफ्रिकाबाट पश्चिम एशिया, मध्य एशिया, युरेसिया हुँदै आधुनिक मानिसको एक हाँगो किरातको रुपमा अफगानिस्तान सप्तसिन्धु, गङ्गामैदान हुँदै सिमाङगढ (सिम्रौनगढ) सम्म पुग्यो। अन्य हाँगो वा छाल रूस, मंगोलिया, चीन, ब्रम्हपुत्र नदी हुँदै भारत नेपाल पसेका थिए।

आधुनिक मानिस पृथ्वीमा रूपान्तरित भएपछि मोटामोटी ६–७ हजार पुस्ता बितेको छ। हामीमा कति सीमित ज्ञान छ भने आजको तीस पुस्ता अघिका पुर्खा एकीन गर्न हामीलाई मुस्किल छ। मुन्धुम, वेदमा बोलाइएका पुर्खा पनि २०० पुस्ताभन्दा माथि जाँदैनन्।

मानव वंशवृक्षलाई धर्मग्रन्थले आदिभौतिक ज्ञानका आधारमा ब्याख्या गर्दछ। ती बढी सांकेतिक छन्। त्यहाँ कुनै समुदाय वा पात्रलाई विभिन्न नामले पुकारिएका छन्। नामलाई कतै उचालेर कतै खसालेर उल्लिखित गरिएका छन्। त्यसैले पुराना ग्रन्थमा दिइएका पात्रहरूलाई विभिन्न नामले, कतै इसाराले त कतै संकेतले बुझाइएको हुन्छ। अतः तथ्यहरूको विश्लेषण गर्न वा बुझ्नलाई वेद, मुन्धुम तथा साहित्यिक ज्ञान, ऐतिहासिक प्रमाण, मानवशास्त्रीय एवं समग्र दृष्टिकोण चाहिन्छ।

वैदिक साहित्यानुसार अभिनव मनु मनुहरू मध्येका प्रथम मनु हुन्। यिनैबाट आर्य र अनार्य (किरात) उद्विकास भएका हुन्। यिनीबाट प्रियव्रत र उत्तान शाखा उद्‌भव भयो। प्रियव्रत शाखामा विष्णुपुराण, स्वयम्भूव मनुप्रसँग, श्रीमद्भागवत्, हरिवंश सहित ३५ प्रजापति र स्वयम्भूवसहित ५ मनु उदविकास भए र आर्य विकसित भए। उता उत्तान शाखाबाट चाक्षुस मनु र प्रजापति राजाहरू भएको हरिवंश पुराणले बताउँछ। यिनै उत्तानबाट उत्तानपाद हुँदै उर, अङ्ग, दक्षपुत्री हुँदै यम, घर (वसु), रुद्र

(त्र्याम्बक) हुँदै तीन मुख्य जनजाति द्रविड, हुण र रभण जातिको उदविकास भयो। (Thulung, 1985)

सिन्धमा यिनै हुण जाति नै किरात कहलिन्थे। हुन त कालान्तरमा हुण जातिबाट हिमालयमा किरात र मङ्गोल (मुगल) जाति विकसित भएको वंशावलीले बताउँछ। किरातबाट मुनाइङ्गबा, किरातइङ्गबा हुँदै याक्तुम्बा जाति विकसित भएको किरात वंशावलीले बताउँछ। (Thulung, 1985)

वंशावलीले आर्य र किरातको पुर्खा मात्र नभएर अन्य धेरै जाति प्रजातिका पुर्खा अभिनव मनुबाट आरम्भ भएको थाहा हुन्छ। यिनको समयकाल करिब ५००० वर्ष पुरानो छ। यसकारण हाल आर्य र अनार्यमा विभाजित मानिसहरूका पूर्वज ५००० वर्ष अघि एकै जाति, संस्कृतिमा आबद्ध थिए। (Sheoran, 2017) कालान्तरमा भूगोलमा छरिदैँ जाँदा तिनीहरू विभिन्न संस्कृति, आस्था, धर्म आदिमा रुपान्तरित भए।

वंशवृक्ष सम्बन्धी उक्त सिद्धान्तलाई भाषा विज्ञानले पनि समर्थन गर्दछ। तुलनात्मक भाषाविज्ञानका अध्येता प्रा. बालकृष्ण पोखरेल अनुसार उहिले पर्सियन सागरको उत्तर सुमेरमा एक ठूलो मानव समूहले छाग (बाख्रा) पाल्ने गर्दथे। उनीहरू छाग आस्थाका थिए। तिनीहरूलाई काशी जाति भनिन्थ्यो। सुमेरमा बस्नेलाई मङ्गोल भनिन्थ्यो, अन्यलाई काशी भनिन्थ्यो। काशी र गुथ (गाई पाल्ने) समूहबीच रक्तमिश्रण भएर एक काशी जाति भएका थिए। यिनै काशी जाति पुनः सुमेरमा गए र सुमेर (मङ्गोल/ कुर्म) जातिसँग रक्तमिश्रण भयो। पछि सुमेर प्रभाव हुने किर/ किरात भए र काशी प्रभाव हुने कश्यप, कस, खस भए।

भाषाशास्त्री बालकृष्ण पोखरेलका अनुसार संसारमा कुनै पनि जाति रक्तमिश्रणबाट मुक्त छैनन्। उनका अनुसार किरात र खसको रक्त–अनन्य रहेको छ। खस र किरातबाटै ब्राम्हण, क्षेत्री, वैश्य, शुद्र उद्विकास भएको तथ्य 'खस जातिको इतिहास' शोधग्रन्थमा छन्।

(Pokhrel, 1998) प्रा. पोखरेल अनुसार उनका पुर्खा मगर जाति भएको खुलस्त्याएका छन्। पृथ्वीनारायण शाहका पुरोहित पनि मगर जातिबाटै विकसित भएको पोखरेलको दावी छ।

त्यसै गरी उक्त ग्रन्थमा लेखक पोखरेलले नेपालका एक प्रसिद्ध प्रशासक सूर्यबहादुर सेन ओलीसित गरेको कुराकानीका आधारमा सेन ओलीका पुर्खा पनि मगर भएको बताएका छन्। कुलु निवासी सुनु जातिबाट एक हाँगो किरात सुनुवार अर्को हाँगो गेलाल बाहुन र अर्को भाइ भारतमा पुहुनी काम गर्ने दास दलित जातिमा उदविकसित भएको भाषाशास्त्री पोखरेलले ठहर छ।

आजभन्दा ५–६ हजार वर्षदेखिका मानव पुस्ताक्रम अपूर्ण र विवादास्पद छन्। तर हामीले के बुझ्नुपर्दछ भने प्राचीन वंशवृक्ष केवल सांकेतिक रुपमा सम्प्रेषित खाका हुन्।

यस अध्ययनमा प्राचीन पुस्ताक्रममा अभिनव मनुदेखि किरातबाट याक्तुम्बा हुँदै सेन, राई, लिम्बूसम्मको पुस्ताक्रमको सार प्रस्तुत छ। फयङ उदभवपछि मात्र वंशावली बढी प्रामाणिक देखिन्छन्। यद्यपि फेदबिना टुप्पाको कल्पना असंभव भएकाले मानव ज्ञानले बटुलेका तथ्यलाई जोडेर फयङ साँबा वंशावली यहाँ प्रस्तुत गरिएको छ।

भाषाशास्त्रीय दृष्टिमा काशी र सुमेरबाट किरात लगायत अन्य जाति विकसित भएका हुन्। संसारमा कुनै पनि जाति रक्तमिश्रणबाट अछूता छैनन्। (Pokhrel, 1998) काशी जातिलाई लिम्बू भाषामा खाम्बोङ्बा भनिन्छ। (Chemjong, 2003) काशी जातिको पृष्ठभूमिमा रक्तअनन्याको स्वरूप यसप्रकारको छ।




भाषाविज्ञानमा आधारित **"काशी वंशावली"** चित्रले काशी वंशको उत्पत्ति र शाखाहरू देखाउँछ। उनीहरूका प्रथम पुर्खाहरू काशी (सक/भग) र गुथ (कुतिका) थिए। यिनीहरू शक/काशी र कुर्मा (सुमेरियन) कुलहरू प्रारम्भिक सभ्यताहरूसँग सम्बन्धित छन्। यस वंशबाट फागुन/वैनाटेया, काशी/सक, कश्यप/कच्छप र किरात/किर/कुर्द शक, गोथ, वर्क, खस, किरात, सुकर/किर, कार्तिक, कुर्द आदिमा विभाजित भए।

यस आकृतिले काशी वंशावलीको फैलावट र स्थान र भाषाहरूमा यसको विविधीकरण देखाउँछ साथै भाषिक र सांस्कृतिक सम्बन्ध जनाउँछ। यसले किरात/किर/कुर्द र कश्यप/कच्छप वंशावलीलाई उनीहरूको ऐतिहासिक र पौराणिक सम्बन्ध रहेको जानकारी गराउँछ।




भाषाशास्त्री बालकृष्ण पोखरेल (१९९८) कृत खस जातिको इतिहासमा देखाइएको रेखाचित्रले हालसम्मका प्राज्ञिक प्रयासलाई समर्थन गर्दछ। तसर्थ, देखाइएको पारिवारिक वंशवृक्षले मध्य एसियाली र इन्डो-युरोपियन भाषा हरू र संस्कृतिहरू पत्ता लगाउन अनुसन्धानकर्ताहरूलाई मद्दत गर्नेछ।

**मानव विकासक्रममा वंशक्रम झल्काउने पौराणिक तथा ऐतिहासिक रूपरेखा**




(Sources: Thulung, 2042; Mabohang & Dhungel, 2047; Chemjong, 2059; Yonghang, 2068; SenChobegu, 2064)

माथि प्रस्तुत "**पौराणिक तथा ऐतिहासिक रूपरेखा"** ले मानव विकासको वंशावलीको विकास देखाउँदै चित्र मानव पुर्खामा फर्काउँछ; जसानुसार मानवताको पौराणिक प्रवर्तक स्ययम्भुव मनु थियो, त्यसपछि प्रियव्रत र उत्तान भएका थिए।

अग्निद्र, ऋषवदेव र मनुरभारत जस्ता प्रमुख व्यक्तित्वहरू प्रभावशाली व्यक्तित्व प्रियव्रतका वंशज हुन्। नाभी, कुरु र केलुमान नामहरू भारतीय पौराणिक कथाहरूमा गहिरो रूपमा स्थापित छन्। उत्तानबाट आएका ध्रुव, रिवु र अज्ञात मानिसहरूको एक शृङ्खला हो जसले काक्सुस्थानुको आकृतिलाई प्रतिविम्वित गर्दछ। उत्तम जय पठान पनि यस श्रेणीको वंशावलीसँग सम्बन्धित छन्। यस शाखाबाट उत्पत्ति भएका प्रारम्भिक राजवंश र सभ्यताहरूमा एलाम र पुरहरू पनि सामेल थिए, जो सम्भवतः फारसमा पोर्सका संस्थापक थिए।

रूपरेखा आकर्षक छ किनभने यसले पौराणिक र ऐतिहासिक राजवंशहरूलाई गाँसेको छ। अभिमन्यु ग्रीक कथाहरूको साथमा खडा छन्, जबकि तपोरत फारसी कथाहरूमा विपरितार्थ प्रस्तुत गरिएका छन्। अंगोरा र पेगुन्नामाथिको सत्तामा रहेको अग्रिराले विभिन्न क्षेत्रहरूमा प्राचीन राज्यहरूको व्यापकता देखाउँछ।

थुलुङ (१९८५) द्वारा प्रस्तुत वंशावली संरचनाले मिथकलाई इतिहास र प्राचीन कालका सभ्यतासँग मानवताको जटिल संरचनालाई प्रतिविम्वित गर्दछ। यो एक वंशीय वंशवृक्ष नभएर समष्टिगत संजाल हो, यसले कसरी पौराणिक र ऐतिहासिक सूचना र ज्ञानले फारस र त्यस बाहिरका मानिसहरूको प्राचीन सम्बन्धलाई जोड्न सक्छ भन्ने कुरा प्रकट गर्दछ। यसले मानव इतिहासको विशालतालाई पुस्ता-पुरानो कथाहरू मार्फत पुस्तान्तरण गरेको छ।

**"दक्षपुत्री"** वंशावलीले प्राचीन र पौराणिक वंशहरूको चित्रण गर्दछ, जसले धेरै मानव परिवार र समुदायहरूको अन्तरसम्बन्ध प्रकट गर्दछ। पौराणिक कथाहरूमा, दक्षपुत्रीले मातृसत्ता र यस वंशको कोशेढुँगाको काम गर्दछ किनकि उनी क्यास्पियन सागर क्षेत्रस्थित काशी जातिका दक्षकी छोरी हुन्।

हिन्दू पौराणिक कथाहरूमा मृत्युका देवतासँग सम्बन्धित यमलाई दक्षपुत्रीको वंशजको रूपमा देखाइएको छ। यमका दुई पत्नी छन्: (१) साध्य र (२) बसु। साध्याबाट, वंशपुत्र-साध्या (सिथियन) मा फैलिन्छ, जसले त्यसपछि नेपिन्स र पालहरूलाई डोऱ्याउँदछ। यो शाखा हुन/जर्मनहरूसित पनि जोडिन्छ र यी समूहहरूसित सम्बन्ध रहेको जनाउ दिन्छ।

बसुबाट, वंशावली घर (८ बासु) नामक समूहमा फैलिएको छ, जुन तीन प्रमुख समूहहरूमा विभाजित छ: (१) द्रविड, (२) हूण, र (३) रविदास। ती तीन समूहहरू थप (१) हैताल, किरात र दाश वंशसँग जोडिएका द्रविडहरूमा शाखासित आबद्ध छन्। (२) हूणहरू हेताल, किरात, दास, मंगोल र मुगलसँग सम्बन्धित छन्। रविदास यो ठूलो पैतृक प्रवाहमा विलीन भएको थाहा पाइन्छ।

थुलुङ (१९८५), माबोहाङ र ढुंगेल (१९९०), चेम्जोङ (२००३), योङकाङ (२०११) र सेनचोबेगु (२००७) द्वारा लिखित ऐतिहासिक विवरणहरू माथि वंशावलीको खाका कोर्नुका स्रोतहरू हुन्। वंशावली रेखाचित्र विभिन्न ऐतिहासिक, पौराणिक र प्राज्ञिक सन्दर्भहरूबाट लिइएको हो।

मंगोल/मुगल युगका मुनाइङ्बा, किरातआङ्बा र याकतुम्बाजस्ता व्यक्तित्व र नेताहरूको माध्यमबाट वंशावली अघि बढिको पाइन्छ। कालान्तरमा किरातआङ्बाबाट सिमाङगढ/सिम्रौनगढमा सेनवंशमा रूपान्तरित भएको देखिन्छ। सिमाङगढका अभि सेन, पदम सेन, र कोशीबराहाक्षेत्रका लारा सेन, फोरा सेन र चुडामणि सेनका सन्तान कालान्तरमा खम्बुवानमा राई लिम्बुवानमा यात्तुम्बा लिम्बूमा अवतरित भएको वंशावली र इतिहासबाट थाहा पाइन्छ। (Sen Chobegu, 2007; Yonghang, 2011; Chongbang, 2009) सेनेहाङ,

साँबासेरेङ, सुरद सेन र मणि सेन अन्तत राई, लिम्बूमा विलय भए जसमध्ये साँबा फयङ पनि राई र लिम्बूमा रहेका छन्।

सारांशमा, वंश रेखाचित्रले तथ्यात्मक र पौराणिक वंशावलीहरूको मिश्रण प्रस्तुत गरेर साझा पुर्खाहरूको माध्यमबाट धेरै दक्षिण एसियाली र मध्य एशियाली समूहहरू र राजवंशहरूको समानता देखाउँछ।

## ५.२ फयङ साँबा मुन्धुमहरू

### ५.२.१ साँबा फयङ उत्पत्ति मुन्धुम

साँबा फयङको इतिहासमा रूचि राख्ने ताप्लेजुङ जिल्ला आठराई हाङपाङ चुँवा निवासी (हाल वेलायत) टेकबहादुर फयङ साँबा लिम्बूले आफूले सुनेको फयङ साँबासम्बन्धी आख्यान धीरेन्द्रराज फयङलाई टिपाइदिएका थिए। धीरेन्द्रमार्फत् लिखित पाण्डुलिपि यो शोधकर्तालाई प्राप्त भयो। पछि अस्पष्ट भएका कतिपय कुराहरू शोधकर्ताले टेक बहादुर फयङसित भाइबरमा अनलाइन छलफल गऱ्यो। त्यही पाण्डुलिपि र अनलाइन टेलिफोन वार्ताका आधारमा साँबा फयङ उत्पत्ति मुन्धुम यहाँ प्रस्तुत गरिएको हो। आख्यान यसप्रकार छ–

"उहिले तीनजना सिकारी बँदेलको सिकार खेल्न कुकुर लिएर बराहाक्षेत्र गए। त्यहाँ उनीहरूले चाँदीको जगर भएको सुनको बँदेल देखे। उनीहरू त्यो सुनौंलो बँदेललाई लखेट्दै जाँदा हालको तेह्रथुम र पाँचथर जोड्ने लिम्बूनी पुलनेर पुगेछन्। त्यहाँ पुगेपछि बँदेल तेम्बे (मैदान) जंगलभित्र लुकेछ। उक्त बँदलेलाई लखेट्न सिकारी कुकुर छाडेछन्। यसरी बँदेल सिकार गर्न उनीहरूले निकै कसरत गरेछन्।“

“सिकारको क्रममा तीनजना सिकारीमध्ये दुई भाइ कुकुरको पाइला पछ्याउँदै गएछन्। ती दुई भाइ सिकारको पछि लाग्दा पाँचथर

याङरूप पुगेछन्। कथा अनुसार त्यसरी छुट्टिएका ती किरातबाट योङहाङ र थेगिम किरात लिम्बू उद्‌भव भएछन्।"

आख्यान अनुसार एक भाइ बँदेल पछ्याउँदै तम्बरखोलाको तिरैतिर उँभो लागेछ। उ चाहीँ बँदेललाई लखेट्दा लखेट्दै मेवाखोला पुगेछ। त्यहाँ पुगेर उ बँदेल मार्न सफल भएछ। यसरी उसको नाम बँदेल मारा अर्थमा सेराताप्पा/ साराताप्पा/ श्रादाप्पा रहन गयो। सेराताप्पाले हालको नाल्बो गाउँमा पुगेर बँदेललाई मारेका थिए।

"उनले बँदेललाई चिरफार गरे। बँदेलको मासुलाई आगोमा सुकाए। जंगलबाट आगोको धुँवा आएको देखेर त्यहाँका नाल्बोका भोटे राजा (मुदेन)ले त्यहाँ  के भएको हो बुझ्न सैनिक पठाए। सैनिकहरूले सेराताप्पालाई भेटे। सैनिकहरूले राजाको आदेशानुसार आगो निभाएर राजा समक्ष हाजिर हुन एक घण्टाको समय दिए।"

"यता नाल्बोका भोटे राजाले कर्मचारीलाई दरवारको प्रवेशद्वारसम्म भित्रैदेखि सेतो कपडा बिछाउन लगाए। उनले भने– यदि यहाँ प्रवेश गर्ने मानिसले यो कपडा उठाउँदै भित्र पसेमा ऊ हाम्रो शत्रु हो र यदि कपडामाथि सहज ढङ्गले टेक्दै आएमा ऊ हाम्रो मित्रु हो भनेर बुझ्नू। उनले सेराताप्पाको परीक्षा प्रवेशद्वारबाट लिने व्यवस्था मिलाए। उनको आदेश सुरक्षाकर्मीले बुझे।"

"केही समयमा सेराताप्पा दरवार आइपुगे। उनले प्रवेशद्वारमा बिछ्याएको कपडामाथि टेक्दै दरवारमा प्रवेश गरे। उनले सर्वप्रथम आफूले मारेको बँदेलको मासु नाल्बोका भोटे राजालाई चढाए। राजासँगको भेटमा केही कुराकानी भए। कुराकानी गरिसकेपछि सेराताप्पाले राजासंग विदा मागे। तर राजाले सेराताप्पालाई बिदा दिएनन्। राजाले आफ्ना ६ जना छोरीमध्ये एकजनासित विवाह गरेर बस्ने प्रस्ताव  गरे।"

“सेराताप्पा/ साराताप्पाले पनि राजाको प्रस्ताव स्वीकार गरे। राजाले आफ्नी छोरीहरूतर्फ फर्केर सोधे तर जेठी, माइली, साइँली, काइँली, अन्तरी पाँचै बैनीले सेराताप्पासित विवाह गर्न अस्वीकार गरे। मान्छे हेर्दै भ्यागुता जस्तो छ त्यस्तासित हामी विवाह गर्दैनौँ भनेर छोरीहरू पन्छिए। आफूले सेराताप्पालाई छोरी दिने वचन दिएको तर छोरी नमानेपछि मुदेन (भोटे) राजा चिन्तित बने। चिन्ताले गर्दा राजाले एक हप्तासम्म खाना खाएनन्।“

“बुबाको यस्तो हालत देखेर कान्छी छोरीले मन पग्लियो। उनी सेराताप्पासित विवाह गर्न राजी भइन्। कान्छी छोरीको उमेर कलिलै भएकाले राजालाई चिन्ता भयो। यद्यपि, राजाले आफूले गरेको निर्णय बमोजिम सेराताप्पासित आफ्नी कान्छी छोरीको विवाह गरिदिए।“

“एकदिन सेराताप्पाको एकजना छोरा जन्मियो। सेराताप्पा र उनकी पत्नी जंगल घुम्न जाँदा आफ्नो बच्चा पनि साथै लैजान्थे। एकदिन राजाकी छोरीहरूले बहिनी र ज्वाई जंगल गएको बेलामा घरमा बच्चा देखेनन्। उनीहरूले बच्चा साथै लगेर गएको हेक्का राखेनन्। यसैले बहिनीको बच्चा यहाँ कोक्रोमा नहुँदा बहिनीलाई शोक पर्ला भनेर दिदिहरूले एउटा मासुको नानी आकृति बनाएर राखिदिए। उता कान्छी बहिनी र सेराताप्पा जंगलबाट पर्किए। आउँदा अर्को नानी कोक्रोमा देखेर उनीहरू अचम्ममा परे। दिदीहरूलाई सोध्दा यो हामीले बनाइदिएको मासुको नानी हो। यो पनि तिम्रै नानी हो भन्ने जवाफ दिदीहरूले कान्छी बहिनीलाई दिए।“

“अर्को दिन माइतीले बनाइदिएको मासुको नानी  समेत लिएर कान्छी छोरी जंगल जान लागिन्। जंगलमा बच्चाले किराफटेङ्ग्रा खाला भनेर दिदिहरूले मासुको नानीले जंगल लैजान रोके। तर यदि यो पनि उसकै नानी हो भने बच्चालाई केही हुँदैन भनेर मुदेन राजाले भनेपछि दुवै नानी लिएर कान्छीछोरी जंगल गइन्। नभन्दै दुवैजना बच्चा जंगलमा

लिएर जाँदा दिदीहरूले बनाइदिएको मासुको बनावटी नानी चाहीँ मर्यो। कान्छी छोरीले जन्माएको छोरा मात्र जीवित रह्यो।“

“एकदिन मुदेन राजाले ज्वाई सेरातापा र कान्छी छोरी तथा नातिलाई गरी खानको लागि भनेर साजुवा खोला र खेजुवा खोलाको बीचको जंगल क्षेत्र छुट्याइदिए। सेरातापाले त्यहाँ जंगल फाँडेर खेतीपाती गरिखाने जग्गा पाए। उक्त क्षेत्रभित्र एकजनाको घरघडेरी पनि देखियो। यो कसको घरघडेरी भनी खोजी गर्दा त्यसको धनी तङदप्पालाई तम्बरखोलामा भेटियो। सेरातापाले उसलाई मिसल साँबा भाइ बनाए। उनीहरू त्यस क्षेत्रमा मिलेर बसे।" (PhayangTB, 2019)

लिम्बू जातिको मुन्धुम र इतिहास पुस्तकमा एक आपुङ्गी राजा खोक्लिहाङको चर्चा पाइन्छ। खोक्लिहाङले तिब्बतबाट गोला भएर नुन ल्याउँदा हालको साँबा गाउँ भएर ओहोर दोहोर गर्ने गर्दथे। बाटामा उनले फेन्फुहाङको घरमा निस्केर खानेकुरा खाइदिएर दुःख दिने गर्दथे। फेन्फुहाङले बदलास्वरूप खोक्लिहाङलाई एकपटक खानामा विष हालेर हत्या गरिदिए। उक्त कथा अनुसार तिनै फेन्फुहाङका सन्तान हाल तङदप्पा साँबा भएका हुन्। (Mabuhang, 2012)

माथि साँबा फयङका पुर्खा सेरातापाले तङ्दप्पालाई मिसल भाइ बनाएको कथा हामीले जानकारी पायौँ। उक्त पात्र तङदप्पासँग यो कथालाई पनि तुलना गर्न सकिन्छ। यसले सारातापाका दरसन्तानले तङदप्पाका सन्तानलाई मिसल भाइका रूपमा साँबा वंशमा समावेश गराएका रहेछन् भन्ने बुझिन्छ।

यी फेन्फुहाङको बारेमा मुदेन्छङ साँबा वंशावलीमा पनि चर्चा गरिएको छ। उहिले मुदेन्छङका पुर्खा मुनाहाङले तिब्बतबाट माराङहाङ (मावामाराङ) लाई लिएर किरात लिम्बुवान पस्दा यिनै फेन्फुहाङ मुनाहाङ संगै झरेका थिए। (Mudenchhong, 2007) यसरी फेन्फुहाङ र मुदेन्छङ साँबाका सम्बन्ध मुदेन्छङ वंशावलीमा उल्लेखित पाइन्छ।

यसबाट के थाहा हुन्छ भने तङदप्पा साँबाका पुर्खा फेन्फुहाङ तिब्बतबाट झरेका मुनाहाङका समकालीन थिए। तङदप्पा साँबा पनि मुदेन्छङ साँबासितै मेवाखोला थुम आएको देखिन्छ।

साँबा परिवारको सदस्य चङबाङका उत्पत्ति कथासित फयङको पूराकथा तुलना गर्दा कथासार प्रायः समान छन्। कतिपय विवरण फरक परे तापनि सारतत्व भने एकै छन्।

## ५.२.२ लगन खोप्मा मुन्धुम

“आन्छोन् इक्सा पाक्तेले खम्बेक पाक्तेल्ले हयुङ खाम्जङ्थो मुएङ् खम्जङ्थो माक्चीलाङ् माख्मा चङ्धो कङ्जिली गर कुङ्भाङ्चङ्धो साप्चिली मेन्ना कुलुम द्याओ तेमेन दिङ्गर वेलुम् धम्मो तागेरे निङ्वाभुइङ् युङ्गो पोरोक्मी याम्फामी इङ्जुम्मो साप्मा गेन गर माङ्नु तम्मेन्ले सेन्दोगेनगर पेसेनतरङ् मेल्ले सिकुम खोसेआङ् निवा खोसेआङ् इक्सा खेक्सिन नावाच्वइत खेक्मीन हाङ्थो सुरित्तमा सराहा केजोङ्गा साधा लप्सा द्योरी लासा कोत्रा नाक्सा थोरी नाक्सा कोत्रनु अरुण वास्सा तम्मर वास्सनु काँसी हाङ् मेनु काशी कोत्र दुधकोशी सुनकोशी बराहक्षेत्र कोकाहा खोलानु कत्थो सिमराहा घाटनु मुलघाट कत्थो याक्चाना घाटनु साधाम घाटनु “

“कत्थो चेकचेनहा हाङ्नु साम्जक हाङ्नु खेवा हाङ्नु खजुम् हाङ्नु माबु हाङ्नु हाङ्जिली होबेरो हाङ्नु साङ्भेरे हाङ्नु हाङ्सा माङ्ओ फेमुलुङ्गेन्नो हाङ्सेन्दल तेलिया घाटनु हाक्पारा घाटनु कोथो नुभो घाटनु पाँचथर फिदिम कुम्मायासोक कुच्छा यासोकनु ताकलुङ् खङ्दालिङ् कुगक्सी साइन ताम्लिङ्योक चिमलिङ्योक कुवाप्मा साइन हजेली हभेरे हाङ्ओ नालिगेन थाङ्बेन कुफइन सक्वा मुइन सेसेल्ले फल्लाहाङ् फलनयोक्नु सिसल्ला मेन्छिन् युङ्गेन फेक्तेल्ले वआ मुइङ् सेसेल्ले दश याक्थुङ् सत्र आनी रीतिरिवाज खेम्मिमु मुलुक इदाइङ् ओ”

“ताङ्सेङ् येबोदाङ् हिम्जिली हिम्लकलुम्मो सुम्जिली सुम् हात्लुङ्ओ फलाना हाङ्ले तेन्धङ्गेन मिक्खिम लगेला तुत्तुसाची तुम्मीहाङ् साची साप्मा मेन्छोन्ने माङ्लाङ् मेन्दोने तादी मेन्छोन्ने सेप्माङ् मेन्दोन्ने इन दुखी मेन्दोन्ने साप्मा साङ् लाङ् मेन्दोन्ने फल्ना हाङहाले मिक्की कामइल्ले फुङ्वा कामइल्ले नाबी थाङ्बेन फुङ्गेन्न सिस्सा मेन्छिन् फुङ्गेन्नु मिक्की फुङ्वा काम्सिब्बा हगाप्चिगाप बोछिल्ला मुन्दाङ्सेरी मेन्थाए खाम्बुङ् लेप्लाङ् मेन्छाङ्ङेरो दार्ग पङ्गेदिङ् यासा केरी मेन्दोक्केरो!“

“दार्ग फल्ना हाङ्ले कुलागाने फल्ना हाङ्ले कुहेन्छिङ् दार्ग ताबा सिङ्ला ताबा लुङ्ला मेन्दोकेरो दार्ग याक्केक फुङ्केक मेङ्गान्नेरो दार्ग वासुम वालुम मिस्सुम मिलाप मेन्योकेरो यर्ग मायुकेरे सुम्दाङ् हासी मेन्दोकेरो दार्ग हुक्सोलाङ्सो मेन्दोकेरो फलाना हाङ्ले कुलागाने फलाना हाङ्ले कुहेन्छिने दार्ग बुनुनु फुङ्नु नुनुआङ् फुङ्नु वानेने फुङ्नु हाङ्नेने फुङ्नु लाधियो फुङ्इन नाधियो फुङ्इन सिङ्जाङ्गो फुङ्इन येक्जाङ्गा फुङ्नु मिक्लि काम्सुङ्सिङ् फुङ्वा काप्सुङ्सिङ् तुतु बाचानु तुम्मिहाङ् बाचानु फल कुलागाने फलाना कुहेन्छिन्ले दार्ग याङ् लामा तेत्लानु पाङ्लाम तेत्लाभिनु काँशाधाला इङ्सा थाला चङ्धी तेत्तालासो चङ्धो कङ्गा मनुसेरी कारावा भालेनु सिससा चोमेन नाली चोमेन थाङ्बेन चोमेन सोती चोमेन चुङ्जिक्के येच्छा चोमेन पाङ्धाक साधाक आबुसाङ्”

“पोमा चोमेन भाङ् सुमेक तकमेक केङ्गेतले खक्मु थिक्मु केङ्गेत्तले किसामाय भोगा केङ्गेन्तबा सुमेन्तेन्ले तक्मेन तेप्से खक्मु पिन्मुतेप्से बिसासाय चोग केङ्गेत्तेबा सुमेत्तेल्ले तक्मेन तेसि खक्कु पिक्मु तेप्से बिसासय चाङ तेप्से फल्ना हाङ्ले कुलागनेन सिस्सा चोकुलम ओ यमयम तुक्लुङ् ओ नाली चोक्लुङ् ओ थधक चोक्लुङ् ओ तुतु चोक्लाङ् मेन्जोङ्ने मिक्को फुङ्वा मेन्जोन्ने मिक्का मेन्लेम्मे फङ्वा मेलेम्मे मिक्का चाङ्चाङ् फुङ्वा चाङ्चाङ् कारजे वा केथामे ओ हुक्सो सेवा कन्नेले ताजिेङ् केत्ने हुक्भो सेवा।“ (Phayang MB, 2019)

यो मुन्धुम, मुन्धुम विवाह लगन गर्दा वाचन गरिने मुन्धुमको अंश हो। यसमा फयङ साँबा (काशीगोत्र) र ल्हासागोत्रबीच विवाहबन्धन गर्दाको एक झलक देखाइएको छ। फयङ साँबाले आफ्नो काशीगोत्रको परिचय गराउँदा मुन्धुमले उनका पुर्खाहरूको स्थल गंगामैदान, दुधकोशी, सुनकोशी, बराहक्षेत्रको नाम लिइएको छ। उनीहरू लिम्बुवानमा तेलिया घाट, हाक्पारा घाट, नुभो घाट, पाँचथर फिदिम, कुम्मायासोक कुच्छा यासोक हुँदै आएको चर्चा मुन्धुममा गरिएको छ।

मुन्धुममा बीचमा विभिन्न राजाहरूसित भेट भएको चर्चा आउँछ। मुन्धुम अलङ्कारयुक्त छ र अर्थ सांकेतिक छ। यहाँ  प्रशस्त मात्रामा भूमिका बाँधिएको छ।

सङ्क्षेपमा, स्वयम्भू तागेरा निङ्वाभू माङलाई साक्षी राखेर बेहुला बेहुलीको वैवाहिक सम्बन्ध गाँसिएको घोषणा विवाहका पंडित साम्बाले गर्दछन्। यसरी विवाह घोषणा गर्नुपूर्व बेहुला बेहुली दुवैलाई  विवाहको निम्ति उनीहरूको मञ्जुरी जान्न राजी वा बिराजी के हो? भनेर सोधिन्छ। साम्बाले सबैसामू तीन पटक बेहुला बेहुलीलाई प्रश्न सोध्ने चलन छ। दुवैजना राजी भएमा विवाह भएको घोषणा गर्दै विवाहको बाँकी विधि अगाडि बढाइन्छ।

## **५.२.३ जुठो आधेल्ले मुन्धुम**

(क) घरमा जुठो लाग्दा सुद्धयाउने ‘सुधो साङ्गे मुन्धुम' निम्नानुसार छ–

“आल्लो कन्यो आनिगा ओ फलाना फलनी लाधाक लाम्धक याहाल्ले चोमेन मेयारेन मुलुक इनादाङ्ओ तङ्सङ् याबोदाङ्बो डाक्टर वैद्य सियोक मुदेनओ लामा साम्चिली कुलुम्धाओ धामी जैशी याबा माङ्वा तेमेन बेलङ् लेप्फाङ् ओझा केरेक्ले यामेन चोमेन मेजोगुसाङ् यामेन मेनात्तेन चोमेन मेनात्तेन साकफारा फाआङ् मेगा तेत्ला लाभिआङ्

लुगेल्ले आनी तुत्तु मयारेन तुम्मीहाङ् मेयारेन लारे कुसा लारे तरु नामले कुस्सा नाम्ले तेरू।"

"हेक्केले कना फलाना फलानी राम सर्बा चुगे । पेगेल्ले कोओ आनिगाहा एक दिने दुई दिने तेह्र दिने आइनुनिन् भाइ तेलिया भाइ देश परदेशी ओमु जुठो थेङ्ङाला कुल कुटुम्बा हारे साङ्गेनदिङ् फोयोङ्गु सुद्धो साङ्मेन थिक्मु याप्मी केजोक फाङ्गु युमजामा साजामा सिन्दुर गाजाल वामा टीको लागन युङ्गा पान मेन्दोङ् यो मेन्युङ्नु तेत्के युक्पा साङ् पाप्मा इपमा चामा सोसो लराङ् चोक्मा फुङ् वामा सिन्दुर गाजल वामा थिक नाक्तु किबी केलोबा आनिगा बिन्ति रो।" (Phayang MB, 2019)

यस मुन्धुममा फेदाङ्बा/ साम्बाले मृतक परिवारमा जुठो फुकाउन पितृ आत्मा विशेषतः घामसित अनुमति मागिरहेका छन्। मुन्धुममा परिवारजनको परिचय दिने क्रममा मृतकका पितृ अघि गंगामैदान हुँदै यहाँ आएका थिए भनिएको छ। यसरी मृतकको पैत्रिक नाता गंगा मैदानसित गाँसेर उनलाई विरामी हुँदा धामीझाक्री, जैशी, वैद्य लगाइ अनेक उपाय गरिएको थियो भनेर बताइएको छ।

यसरी उनको हजार उपचार गरे पनि उपचार नलागेर हाम्रो पनि केही लागेन भनी लाचारी प्रकट गरिएको छ। फलस्वरूप अहिले उनलाई माथि घामले लगेका छन्। उनको आत्मा (राम) अब उतै घामसंग सरेर गएको छ।

मुन्धुम बताउँछ– यता उनका परिवारजनले एक दिने, दुई दिने, तेह्र दिने क्रियाकर्म गरी सकेका छन्। उनका परिवारजनले अब उप्रान्त परिवार, नाता, कुटुम्बलाई लागेको जुठो फुकाइदिन आव्हान गरेका छन्। एकदेखि तेह्र दिने कर्म सम्पन्न भएकाले अब उप्रान्त परिवार र नाता, कुटुम्बको जुठो फुकाउने अनुमति घामसित मागिएको छ। फलस्वरूप दुःख बारेका परिवारजन र आफन्तले अब सिन्दुर, गाजल, टीका

लगाउन, फूल सिउरिन, नुनतेल खान तथा सामान्य जीवनमा फर्कन अनुमति पाउँछन्।

यसरी फेदाङ्बा/ साम्बाले भेलासमक्ष आत्मा, पितृ, सूर्य भगवानसमक्ष आव्हान गर्दछन्। आत्मा अर्थात् सुर्य भगवानको आज्ञानुसार परिवार र आफन्तजनको जुठो फुकाइदिन्छन्।

(ख) 'जुठो आधेल्ले सुधो साङ्गे मुन्धुम' वादीउपर प्रतिवादी मुन्धुम—

"उसक्नु पुङ्ङा आल्लो मुलुक इना दाङ्ओ मेमासिन् फलाना फलानी तुगे लाक्ते यामेन चोमेन धामी जैशी ओझा लामा विज्वा सिदा वैद्य केरेक केजोगुम् तर तुत्तु मेयारेन तुम्मिहाङ् मेयारेन कङ्सन् लारे लारेसुरु। नामले कुस्सा नाम्ले तेरु। राम सर्व चुगे। पेगेल्ला जुठो केथाका बङ्सेरी भाइ नुनिया भाइ तेलिया भाइ चार दिने भाइ रेमु आइन सम्मानु नेत्के युक्पाहारे नेत्थक केरेकले आइननाङ् धोमु पेनिहानु चक्खेबा मेजोक्सिङ्ले पडी बिद्धे नुमु मुदेम्बा चक्खेवा मेजोक्सिङ्ले पडी बिद्धे लामानमु किताब ओमेमेत्तुआङ् चक्ख्वाबा मेजोक्सिङ्"

"आनी दश लिम्बुवान सत्रथुम मोमू थुत्तुने बिद्यामु सापुक्नु मुरानु सोस्ती शान्ति चोक्मा पर्ने इलले आनिग पुरेतनु आमा माउली ज्वाइचेला कुलकुटुम्बा हारेमु सुहा दुहा चोक्मा पर्ने इलले आइनाङ्धो केरेक केधोसुम्लो इप्मा पाप्मा लाङ्गा चाङ्गा सोसोललाङ् पिनिहानु पान र पान मेन्दाङ्नु यो मेन्योङ् नुङ्गा युम चामासा चामा वामा सिन्दुर गाजल फुङ्वाप्मा टीकालगन युङ्गा साम्मङ् ज्वाङ् चक्मा धामीजैशी ओझा बिजुवा यम्मा देवीदेउराली भोग पिमा आएननाङ् थो सम्पूर्ण साङ्गेन दिङ् फयोङ् पोङ्लो। केधो सुममिरो। केधो सुक्मी केधोसुमलो। एक तियाली एक बाचा, दुई त्याली दुई बाचा, तीन त्याली तीन बाचा, मेखोसै मेखोसुरो।" (Phayang MB, 2019)

यस मुन्धुममा फेदाङ्बा/ साँम्बाले मृतक परिवारमा जुठो फुकाउन आत्मा, पितृ, सूर्यदेवसमक्ष अनुमति माग्दछन्। उनले भेलामा परिवारको माग बमोजिम परिवारजन र कुलकुटुम्बलाई अब सामान्य जीवनमा फर्कन अनुमति दिइन्छ। अघिल्लो वादी मुन्धुममा परिवारजनको परिचय गर्दा मृतकको नाता पितृ र आत्मा वा घामसित गाँसेर परिचय गरिन्छ। उनलाई धामीझाक्री, जैशी, वैद्य लगाउँदा पनि केही नलागेको जानकारी गराइन्छ। अब उनलाई माथि घामले लगेको अर्थात् आत्मा (राम) सरेको साम्बाले जनाउँ दिन्छन्।

उनले मृतकका परिवार जनले एकदिने, दुईदिने, तेह्रदिने क्रियाकर्म गरिसकेको सबैलाई जानकारी गराए। यसकारण फेदाङ्बा/ साम्बाले अब उप्रान्त परिवार र कुल कुटुम्बलाई लागेको जुठो फुकाइएको घोषण गर्दछन्।

त्यसपछि परिवार र कुलकुटुम्बले सिन्दुर, गाजल, टीका लगाउन, फूल सिउरिन पाउँछन्। नुनतेल खान तथा सामान्य जीवनमा फर्कन पाइन्छ। त्यसपछि नाचगान, पूजाआजा गर्न, विवाह कार्य गर्न सकिन्छ। साथै, अन्य जातजातिसित उठबस गर्ने बाटो पनि तब खुल्दछ।

### ५.२.४ फयङ अग्रजको ज्ञान र उपदेश

किरात याक्थुङ साँबा फयङ समुदायमा मुन्धुमबारे आफ्नो मौलिक दर्शन र धारणा कस्तो रहेछ भनी बुझ्ने प्रयास गरियो। मुन्धुमसम्बन्धी जानकार मानबहादुर फयङ साँबाको व्यक्तिगत जीवन दर्शन र उपदेश यहाँ सान्दर्भिक ठहर्छ। उनकै हस्तलिखित पाण्डुलिपिको आधारमा विवरण राख्दैछु। उनको विचारमा जीवन जगत र सृष्टि के हो? मुन्धुम भनेको के हो? प्रार्थना कसलाई कसरी गरिन्छ? भन्ने प्रश्नको संक्षिप्त जवाफ लिखित रूपमा उनले दिएका छन्। जो यसप्रकार छ–

"ॐ माङ्गे सेवारो केरेकओ केवारो निङ्गवा सेगो नाकारो थियान थक सेवारो। आत्ति केबेक साङ् आत्ति केवासाङ् खेनेमेन्ने मइगेन्लो। हारानुमा तामा। केत्तेओ योबा सिङ्बुङ् सेत्तेओ। यामसेमा सामसुमा आल्लो थासेओ। तुत्तु दिङ्ग हेना हुक्सो ताङे चुप्सिङाले सिक्कुम दिङ्ग् निङ्वा केबिबा खेनेरो, ओम माङ्गे सेवारो।" (Phayang MB, 2019)

"उन्छोमा उन्छोन ताक्थेबा हारे खामासिङ्गबुङ्ग् मेयुक्तु चोकमानु पापमा थिथोक्मा थुङ्गा खुन्चिङ् मेसुक्तु तक्सङाङ् तेम्भो लाजेयाङ्ग नेस्से लुङ्ग सिङ्गबुङ्ग कुसङ्ग आ थिथोक्मा थुङ्गमा मेयोसु खुन्चि चिनुमा सासा आ...।" (Phayang MB, 2019)

मुन्धुममा उनले ओम् स्वयम्भू माङलाई सेवा गरेका छन्। उनले ईश्वरलाई आव्हान गरेका छन्। जहाँ भए पनि चाँडै आउन आव्हान गरिएको छ। उनी ओम् माङ स्वयम्भू देवलाई सदा सेवा (नमस्कार) गर्दछन्। उहिले वनजंगल थियो, जाँडरक्सी बनाउने खाने चलन थियो भनी सम्झन्छन्। उनी आफ्ना पुर्खाको संस्मरण मुन्धुममा गर्दछन्।

मानबहादुर फयङ साँबाले बताएको मुन्धुमको परिभाषा अनुसार 'मुन्धुम' शब्द 'मुन' र 'धुम' बाट मुन्धुम बनेको छ। मुन भनेको हल्लिनु र धुम भनेको बलियो हो। यो मुन्धुम बलियो र चलायमान रहेको विश्वास गरिन्छ। यो विज्ञानभन्दा जेठो भएको उनको दाबी छ। सृष्टिमा सर्वप्रथम शून्य मात्र थियो, त्यसपछि माङ प्रकट भए, अनि पृथ्वी लगायत सारा सृष्टि रचना भयो। मानिसको उत्पत्ति पछिबाट भएको हो।

यसरी सृष्टिको बारेमा संक्षिप्त जानकारी दिए पछि उनले यो पृथ्वीलोक लगायत विभिन्न आठ लोकको नामकरण र परिचय दिएका छन्। जुन यसप्रकार छन्:– १. नरक लोक (तातो र चिसो), २. प्रेत लोक (भोक र तिर्खा), ३. पशुलोक (मुर्ख र अज्ञानता), ४. मनुष्य लोक (जन्म, मृत्यु, रोग), ५. असुर लोक (दुःख), ६. देवलोक, ७. स्वर्गलोक र ८. वैकुण्ठलोक। (Phayang MB, 2019)

उनले दिएको ज्ञान किरात मुन्धुम वरिपरि घुमेको छ। यस बारेमा विस्तृत जानकारी इमानसिंङ चेमजोङले दिएका छन्। (Chemjong, 2003a; 2003b) जेहोस्, आजसम्म पनि फयङ साँबाले आफ्ना पूर्वजले पुकारेका ओम् मन्त्र सम्झन्छन्। उनीहरू मुन्धुमका आधारमा आफूलाई सूर्यवंश, काशीवंश (कश्यप) भएको विश्वास गर्दछन्।

आफूलाई किरात याक्थुङ राई लिम्बू नामले चिनाउने साँबा फयङ जाति आज विभिन्न धर्म सम्प्रदायमा लागेका छन्। यद्यपि, समुदायका एक अग्रजका भनाइले पनि के जनाउँछ भने साँबा फयङ अघिदेखि शैव तथा बोन मतावलम्बी हुन्।

## ५.३ फयङ साँबा वंशावलीमा प्रवेश

वंशावलीलाई वंशवृक्षको रूपमा हेरिन्छ। यसले पारिवारिक कम्पासको काम गर्दछ। यो वंशावली खाका इतिहास, वंशावली र मुन्धुमको आधारमा कोरिएको हो। सेन थेगिम लिम्बू वंशावली, योङहाङ वंशावली, चङबाङ साँबा वंशावली तथा अन्य वंशावली एवं जानकारहरूबाट प्राप्त प्रमाणका आधारमा वंशावली तयार पारिएको छ।

किरात लिम्बू चबेगु सेन वंशावली अनुसार सिम्रौनगढमा सेनवंशी अभि सेनका छोरा  पद्म सेन थिए। उनका सन्तान लारा सेन तथा दरसंतान फोरा सेन तथा  चुडामणि सेन भए। कोशीबराहा चौदण्डी क्षेत्रमा चुडामणि सेनका माइला सन्तान साँबासेरेङ/ साँबाश्रेङ चौदण्डी चतराबाट साँगुरी, धनकुटा सङ्गमटार हुँदै उँभो तम्बरखोला लागे। यही क्रममा उनी हालको पाँचथर पुगे। तम्बरखोला गडतिर हुँदै पाँचथरबाट अन्ततः उनी ताप्लेजुङको मेवाखोला थुम पुगे। त्यहाँ फयङ उपथरसहित अन्य साँबाहरू उत्पत्ति भए। (SenChobegu,2007; Yonghang, 2011, PhayangTB, 2019)

फयङ साँबा उत्पत्ति मुन्धुम, चङबाङ साँबा मुन्धुम तथा योङहाङ र चबेगु वंशावलीमा पाइने कथाका आधारमा कोशीबराहबाट एक सिकारी दल तम्बरतिर समातेर हिँडे। धनकुटाबाट एक भाइ छुट्टिएर गयो र पोक्लाबाङ तेह्रथुममा सत्ता हात पार्‍यो। मेवाखोला जानेक्रममा याङरुप पुगेपछि समूहबाट एक भाइ छुट्टियो। पछि उक्त भाइबाट योङहाङ र थेगिम थरान उद्विकसित भए। दुई भाइ तम्बरखोला र मेवाखोला लागे। एक भाइ तम्बरखोलामा ससुराली बनाएर बस्यो।

अर्को भाइ साराताप्पा/ श्राताप्पा मेवाखोला नाल्बोमा बँदेलको सिकार गर्दै पुगे। उनी पनि त्यहाँका राजाका कान्छी छोरीसित विवाह गरेर बसे। चङबाङ साँबा वंशावलीले उनलाई सेनेहाङ राई भनेको छ। उनीबाट चङबाङ, फयङलगायतका साँबा विकसित भए। वंशावली अनुसार योङहाङ, थेगिम र साँबाका पुर्खा अघि एकै थिए।

चङबाङ, फयङलगायतका साँबाका पुर्खा पहिले नाल्बो र पछि मेवाखोला साँबामा पुगे। त्यहाँ पुग्नअघि उक्त स्थानमा साँबाहाङले राज्य गरिबसेका थिए। त्यसबेला उक्त स्थानको नाम साँबा रहिसकेको थियो। उक्त स्थानमा बसोबास गर्ने साराताप्पा–फेम्बुनहाङका सन्तान चङबाङ, फयङलगायत आठ साँबा भू–अभिधा (Toponym) को आधारमा साँबा कहलिए भनी चङबाङ वंशावलीले बताएको छ। चङबाङ बंशावलीमा उनीहरूका पुर्खा सेन र राई पद्वीधारी थिए। वंशावलीमा उनलाई सेनेहाङ राई भनिएको छ। (Chongbang, 2009)

उल्लेखित विवरणमा भेटिने विश्लेषणका आधारमा साँबा कहलिनुको प्रमुख कारण उनीहरू साँबासेरेङका दरसन्तान हुनु हो। उनीहरूका पितृ साँबासेरेङ भएकाले त्यो कुरा जनाउन उनीहरूले साँबा थर ग्रहण गरेको हुनुपर्दछ। किनभने सबै सेन दरसन्तानले साँबा थर ग्रहण गरेनन्।

हो, मेवाखोला थुम साँबा क्षेत्रमा शासन गरेर वसेकाले भूअमिधाका आधारमा उनीहरू साँबा कहलिए होलान्। तर खासमा उनीहरू सेनवंशी अभिसेनका दरसन्तान चुडामणि सेन तथा साँबा सेरेङबाट विकसित भएकैले सहज रूपमा साँबा भूअमिधा ग्रहण गरेको हुनुपर्दछ। किनभने उक्त क्षेत्रमा बस्ने सबै साँबा भएनन्।

योङहाङ वंशावली अनुसार सिमाङगढमा (१) अभि (उदिय) सेन, (२) पद्म सेन, (३) लारा सेन, (४) फोरा सेन र (५) चुडामणि सेन थिए। तीमध्ये वि.सं. १३२४ मा चुडामणि सेनले नेपालको भूभागमा शासन गर्दथे। त्यसकालमा राज्यविस्तार गर्दै गयासुद्धिन तुगलकले सिमाङगढबाट उनलाई विस्थापित गरिदिए। त्यहाँबाट चुडामणि सेन आफ्ना सन्तान तथा दलबलसहित पूर्वतर्फ लागे र हालको चतरा चौदण्डीमा आएर राज्य स्थापना गरे। उनको त्यही परलोक भयो। यिनै चुडामणि सेनका सन्तान सेनेहाङका दरसन्तान पछि योङहाङ भए। (Yonghang, 2011)

योङहाङ वंशावलीअनुसार चुडामणि सेनका चारभाइ छोराहरू वि.सं. १३८८ मा साँगुरी भञ्ज्याङ नाघेर भित्री पहाड सङ्गमटार पुगेर बसोबास गर्न थाले। त्यहाँ सातवर्ष बसेपछि साइला भाइ सेनेहाङले तम्बरखोला पारि जाने इच्छा देखाए। उनी छुट्टिनअघि चारै दाजुभाइले स्मृतिस्वरुप एकएकओटा ढुङ्गा चिनो गाडे। जो हाङसेम्मालुङ नामले चिनिन्छ। (Yonghang, 2011)

त्यसपछि तीनभाइ सेनेहाङ तम्बरपारि गए। सिम्राघाटमा पुगेर त्यहाँ उनीहरू सातवर्ष बसे। पोक्लाबाङ तेह्रथुम छुट्टिएका सेनेहाङले पोक्लाबाङका राजालाई पराजित गरी शासनसत्ता हात पारे। अन्य तीनभाइ उँभो तम्बरतिर लागे। वंशावलीअनुसार याङरुपमा पुगेर एकभाइ पुनः छुट्टिए। उनका साङदिनहाङ र सुयपहाङ नामका दुई छोराहरू थिए। उनका सन्तान कालान्तरमा योङहाङ भए। याङरुपमा वि.सं. १३९६ मा नाहाङले राज्य गरे। (Yonghang, 2011)

जेठो भाइ आफ्नो ससुराली तम्बरखोला भएकाले ऊ त्यतै लाग्यो र कान्छाभाइ चचनुसेन्छेने सेनेहाङ मेवाखोलाको शिरतर्फ लाग्यो। यसरी मेवाखोला र तम्बरखोला पुगेर सेनवंशी सेनेहाङबाट कालान्तरमा साँबा राई लिम्बूमा उदविकसित भए। (Yonghang, 2011)

योङहाङ वंशावलीले उल्लेख गरेको चचनुसेन्छेनु सेनेहाङलाई चङबाङ साँबा वंशावलीले आफ्ना पुर्खा सेनेहाङ राई भनी उल्लेख गरेको छ। चङबाङ, फयङलगायत आठ साँबाका पुर्खा साराताप्पा साँबासेरेङ भएको विश्लेषण गरिन्छ। साँबासेरेङलाई पुर्खा मानेर साराताप्पाका सन्तानले साँबा थर ग्रहण गरेको हुनसक्ने बलियो संभावना छ। यसरी साँबासेरेङ, साराताप्पाका दरसन्तान मेवाखोलामा स्थापित भए। उनीहरूबाटै साँबा थर तथा उपथरको उदविकास भयो। (SenChobegu, 2007; Chongbang, 2009; Yonghang, 2011)

यही साँबा सेरेङका दरसन्तान चङबाङ साँबा, फयङ साँबालगायत आठ साँबाका पुर्खा भए, चङबाङ साँबा पुङ मुन्धुम भन्छ। उक्त मुन्धुमले सेरेङ/ श्रेङ साम्माङ भनेर साँबासेरेङलाई नै संकेत गर्दछ। यसबाट थाहा हुन्छ कि चङबाङ, फयङ साँबा मुन्धुममा वर्णित साराताप्पा साँबासेरेङका दरसन्तान हुन्। उनै साँबासेरेङको साँबा पदवी उनका दरसन्तामा थरका रूपमा रहन गएको ऐतिहासिक आधार छ।

सोह्रौँ शताब्दीको विजयपुरको किरातकालीन इतिहास अनुसार तत्कालीन किरात राज्यका तराई भूभागमा चङबाङ र सेरेङहाङ/ श्रेङहाङले सुब्बा पद्वी लिएर आ-आफ्नो क्षेत्र शासन गरे। (Chemjong, 1974) उक्त तथ्यलाई चङबाङ साँबा र फयङ साँबाका पोङ मुन्धुममा बताइएको मेची, सप्तकोशी क्षेत्रमा डुल्ने सेरेङ/ श्रेङ साम्माङसित जोड्न सकिन्छ। यही आधारमा फयङ साँबा, चङबाङ साँबा र सेरेङ/ श्रेङ अघि सगोत्री भएको संकेत मिल्दछ। मुन्धुम र इतिहास दुवैले सेरेङ, चङबाङ फयङबीच रक्तगत अनन्या रहेको बताउँछन्।

फयङ साँबाको पुर्खा खोज्दै जाँदा इतिहासमा सेन, राय, याक्थुङ, किरात, महाकिरात, सुमेर, काशी जाति भेटिन्छन्। मुन्धुममा सुसुवा, लालाबेन, मुजिङ्ना खेयोङना पात्रहरू भेटिन्छन्। यी पात्रहरू भाषागत भिन्नताका कारण अलग देखिएता पनि एकै दूर अतीतलाई संकेत गर्दछन्।

साँबा जातिको उद्भव केलाउँदा प्राप्त प्रमाण र आँकडाका आधारमा ६८८ वर्ष वा मोटामोटी ७०० वर्ष अघि साँबा थर विकास भएको देखिन्छ। फयङ वंशावलीलाई विश्लेषण गर्दा मोटामोटी ३०० वर्ष अघि फयङ उपथर उदविकास भएको देखिन्छ। मानव इतिहासमा यो कालखण्ड छोटै मानिए तापनि विकासक्रम मापन गर्ने प्रत्यक्ष प्रमाण छैनन्। तानि अप्रत्यक्ष र तुलनात्मक विधिबाट उक्त कालखण्ड अनुमान गर्न सकिन्छ। भविष्यमा नयाँ तथ्य फेला परेमा परिमार्जन गर्ने वा पुनर्लेखन गर्दैजानु बाहेक विकल्प छैन।

तसर्थ, सेन थेगिम लिम्बू वंशावली, योङहाङ वंशावली, चङबाङ साँबा वंशावली, लिङदेन वंशावली तथा अन्य वंशावली एवं जानकारबाट प्राप्त तथ्य तथा प्रमाणका आधारमा सेन वंशदेखि साँबा हुँदै फयङसम्मको वंशावली खाका तयार पारिएको छ।

## ५.४ किरात–सेन–राई–साँबा–फयङ लिम्बू

किरात इतिहास तथा वंशावलीअनुसार फयङ साँबाको जरा स्वयंभुव मनु हुँदै किरातसम्म गढेको पाइन्छ। त्यसका एक एक पत्र वा पुस्ता केलाउन असंभवप्रायः छ। यद्यपि मुन्धुम, वंशावली र इतिहासअनुसार त्यसको सारलाई महसुस गर्न वा अनुमान गर्न भने सकिन्छ।

मुन्धुम याक्थुङ अर्थात् भोट–बर्मेली भाषामा विकसित लिम्बू भाषामा छ। आदिवासी किरातका मौलिक कथावस्तुलाई भारोपेली

भाषामा अनुवाद गरिएका छन्। संस्कृत वा नेपाली भाषामा आदिवासीका मौलिक नामलाई भारोपेली जनजिब्रो अनुकूल बनाइएका छन्। उदाहरणका लागि लिम्बू भाषामा सूर्यलाई नाम भनिन्छ भने नेपालीमा घाम भनिन्छ। कुनै समुदायले परम्परागत ज्ञानलाई संरक्षित राख्न आफ्नै भाषा र संकेत गर्ने परम्परा छ। अतः शब्दको रूपमा मात्र नभएर कथातत्वलाई अर्थ खुलाएर वा सारमा डिकोड गर्नु पर्ने चुनौति छ।

विषयवस्तुको सार खोज्नलाई मुन्धुम र वेद वा पुराणका कथा, भाषा वा शब्दावलीमा पाइने पृथकता नअल्मलिइ सारभूत समानतातिर पनि आँखा नियाल्नु पर्दछ। वेद वा पुराणले आदिपुरूष आफसेआफ प्रकट हुने स्वयंभुव मनु मानेको छ। किरात मुन्धुमले पनि किरातका आदिमानव मना वा मुनालाई आफसेआफ प्रकट स्वयंभुव मान्दछ। मना, मुना वा मनुबीच पाइने ध्वनि वा मात्रागत वा वर्णगत अन्तर भन्दा तात्वीक मानवशास्त्रीय सारतत्वको दर्शन गर्नसक्नु पर्दछ।

समाजमा राजनीतिक, सामाजिक, आर्थिक कारणले पहिचानलाई विविध रूपमा प्रकट गर्ने गरिन्छन्। जसलाई नकार्न पनि सकिदैन। राजनीतिक तथा सामाजिक विभेदले गर्दा आज यो विषय सान्दर्भिक भएको छ। तर त्यसो भन्दैमा हामीले मानव विकासक्रमसितै फैलिएको जरा, फेद र हाँगाको अस्तित्व झल्काउने मानवशास्त्रीय ज्ञानलाई पनि उत्तिकै सम्मान गर्नुपर्दछ।

राजनीतिक वा सामाजिक सांस्कृतिक आधारमा कुनै मानिस वा समुदायलाई हेर्दा जे देखिन्छ त्यसलाई मानवशास्त्रीय दृष्टिमा केही फरक देखिन सक्छ। यी दुवै सत्यवीच देखिने फरक दृश्यलाई मिसाएमा विवाद आउनसक्छ। त्यसैले कुनै ज्ञानको सन्दर्भ र सीमालाई हामीले बुझ्नु पर्दछ।

प्राप्त तथ्य र प्रमाणहरूका आधारमा सेन वंशबाट विकसित साँबा र साँबाबाट विकसित फयङ जातिको इतिहास करिव ८०० वर्षको छ।

मोटामोटी रूपमा सेनबाट साँबामा रूपान्तरण भएको ७०० वर्ष र साँबाबाट फयङमा उदविकास भएको करिव ३०० वर्ष भएको विश्लेषण छ। जेहोस्, फयङ साँबा थरको उत्पत्तिस्थल वा माङ्गेना यक ताप्लेजुङ जिल्लाको मेवाखोला साँबा गाउँमा छ। यिनीहरूका पुर्खाका आराध्य स्थल भने कोशी बराहा कोकाहा क्षेत्र हुन्। तुङदुङ्गे मुन्धुममा यही कुराको संकेत पाइन्छ।

# ५.५ फयङ साँबा वंशावली

**मुन्धुमी तथा ऐतिहासिक आधारमा कोरिएको किरात-सेन-राई-साँबा लिम्बू वंशक्रम**

**फयङ साँबा वंशावली**




Sources:
Chemjong, 1974; Sen Chobegu, 2007; Chongbang Samba, 2009; Yonghang, 2011; Mikkendang, 2019, Phyang MC, 2019.

**फयङ साँबा वंशावली**




Sources: Phyang AR, 1999; Phyang RB, 2019; Phyang P, 2019; Phyang MH, 2019; Phyang MC, 2019..

द्रष्टव्यः नाम अघिको संख्याले पुस्ताक्रम जनाउँछ जुन अनुसूचीमा पनि विस्तारित रूपमा पाइन्छ।

माथि देखाइएको रेखाचित्रले फयङ साँबाको बसाइँ सराइको रूपरेखा देखाउँछ। चित्रमा देखाइएको तुम्याङ त्यातर्फका सबै भाइ र तुम्याङ हिरीतर्फका एक भाइ पच्चिसौँ पुस्ताका हाङपाङ बसाइँ सरेर गए। आधा भन्दा धेरै हाँगाका जनसंख्या हाङपाङ बसाइँ गएकाले हाङपाङको वंशावली वंशवृक्ष अरूतिरको भन्दा ठूलो छ। त्यहाँबाट संखुवासभा र भुटानमा दाजुभाइ विस्तारित भए। त्यसैगरी तुम्याङ हिरीका सन्तान मेवाखोलामा नै बसे। त्यसमध्ये एक भाइ सन्तान हाङपाङ र एक भाइ सन्तान सिक्किम र पाँचथर गए। उनका दुई श्रीमतिबाट ती स्थानहरूमा जन्मिएका सन्तान हाल फैलिएका छन्।




## तुम्याङ त्याबाट विस्तारित हाँगाहरू

१. हाङपाङ
२. संखुवासभा
३. भुटान
४. असम

## ५.६ आठराई हाङपाङमा फयङ साँबा आगमन

वि.स. १८०० को सुरू संगै फयङ साँबाको एउटा मूल हाँगो नै मेवाखोलाबाट हाङपाङमा बसाइँ सरेका थिए। मेवाखोलालाई जनसंख्याका हिसाबले अल्पमतमा पारेर त्यसबेला फयङ साबा हाङपाङ किन सर्नुपरेको थियो। त्यसका प्रमुख कारण के थियो? त्यसरी बसाइँ सर्दा कसरी सरे, के कस्ता असहज स्थितिको सामना गरे, स्थानीय समुदायसित केकस्ता ब्यवहार देखाए भन्नेबारेमा तथ्य र प्रमाणका आधारमा चर्चा र विश्लेषण गरिनेछ।

ऐतराज फयङ (पुस्ताक्रम २९) द्वारा संकलित तथा नवराज सुब्बा फयङ (पुस्ताक्रम ३०) द्वारा प्रकाशित फयङ साँबाको वंशावली २०५६ मा उल्लेख भएअनुसार मेवाखोला साँबा गाउँबाट फयङ साँबा वि.सं. १८०६ तिर हाङपाङ आएका थिए। (Phayang AR, 2056) तर फयङ साँबाका एक जानकार टेकबहादुर फयङले पन्चनन्द वही थेबा (पुस्ताक्रम २६) को भनाइलाई आधार मानेर फयङ साँबाहरू वि.सं. १८०० सालतिरै आफ्नो थुम मेवाखोला साँबा छाडेर हाङपाङ आएका हुन्।

उक्त भनाइलाई हालसालै साँबा मिङ्स्रा सङचुम्भोको मुखपत्रले पनि समर्थन गरेको पाइन्छ। मुखपत्रानुसार साँबाहरू वि.सं. १८०० सालदेखि मेवाखोलाबाट चैनपुरमा लिम्बू सेनामा सहभागी हुन गएका थिए। (Samba Ningshra, 2018) उनीहरूले लिम्बुवान कमाण्डर काङ्सोरे (काङ्सु राय) लाई सहयोग गरे। गोरखाली लिम्बुवान युद्धमा छलकपटद्वारा आफ्ना सरदार काङसोरेलाई गोरखालोले षड्यन्त्रपूर्वक मारिदिए। साँबा परिवारका शिपा र फाक्ते गोरखा-लिम्बुवान युद्धमा सहिद भए। जुन कुरा सङचुम्भोले मुखपत्रमा उल्लेख गरेको छ।

त्यसपछि दुःखित बनेका लिम्बूमाथि गोरखालीले थप चलाखी गरे। गोरखाली सेनाका नेतृत्वकर्ता रामभद्र थापा मगरले पटक पटक

लिम्बुवान आक्रमण गर्दा पनि हत्याउन नसकेपछि लिम्बूका सरदारलाई उनीहरूको वंशावली झिकाए। उक्त वंशावली अध्ययनपछि गोरखाली पक्षले लिम्बूका पुर्खा र गोरखाली सिँगाली थापा मगरका पुर्खा एकै भएकाले अब युद्ध नलडौँ भने। गोरखाली र लिम्बूबीच सम्झौता भयो। (Chemjong, 1074)

किरात इतिहास अनुसार वंशावलीमा काशी वंशका लिम्बू र मगर सेनवंश–सम्बन्ध देखिएपछि लिम्बू पक्ष युद्ध रोक्न राजी भएका थिए। सोही आधारमा फेदाप, तम्बरखोला र मेवाखोलाका लिम्बूले गोरखालीबीच सहमति भयो र नुनपानी सन्धि भयो। यद्यपि, गोरखाली–लिम्बुवान युद्ध गोरखालीको पक्षमा गयो। वि.सं. १८३१ सालमा गोरखालीले लिम्बुवान हात पारे। (Chemjong, 1074)

फयङ साँबाहरू चैनपुरमा जाँदा आउँदा बीच बाटोमा पर्ने हाङबाङ (हाङपाङ) राम्रो जग्गा देखेर जंगल फडानी गरी बसेको साँबा फयङका बुढापाकाको भनाइ छ। अन्य लिम्बू जातिका जानकारले पनि चुँवाखोला क्षेत्र साँबाको खुर्पेठ्याक हो भनेका छन्। (S. PhyangAngbuhang, personal communication, January 11, 2018) संखुवासभाको चैनपुर ऐतिहासिक घटनाक्रममा ओहोर–दोहोर गर्दागर्दै मेवाखोलाका फयङ साँबा संखुवासभा, आठराई हाङपाङ, पाँचथर क्षेत्रमा फैलिए।

यस क्रममा तुम्याहाङ त्या तर्फका पन्चकन्दा (पुस्ताक्रम २४) का छोरा धनकर्ण (पुस्ताक्रम २५) र चासमुखी (पुस्ताक्रम २५) एवं तुम्याहाङ हिरी तर्फका शाहीवाल (पुस्ताक्रम २४) का कान्छा छोरा इरूहाङ (पुस्ताक्रम २५) मेवाखोला र चैनपुरको बीच पर्ने हाङपाङ चुँवामा खुर्पेठ्याक गरी बसे। (Phayang AR, 2056; TB. Phyang, personal communication, August 15, 2019)

सोही ताका धनकर्ण संखुवासभा चैनपुर ओहोरदोहोर गर्उदा नले उतै कान्छी श्रीमति विवाह गरे जसबाट भएका सन्तान उतै फैलन गए। यसरी धनकर्णका जेठी श्रीमतिका सन्तान हाङपाङमा र कान्छी

श्रीमतिका सन्तान संखुवासभामा रहन गए। स्मरण रहोस्, जेठीपट्टिका सन्तान हाल लिम्बू र कान्छी पट्टिका सन्तान राई थरमा विलय भएका छन्।

तथ्य र प्रमाणले वि.स. १८०० आरम्भदेखि गोरखा–लिम्बुवान युद्धकालसम्म फयङ साँबा आफ्नो मूलथलो मेवाखोलाबाट चलायमान भएको बताउँछन्। संखुवासभा, पाँचथर छुट्टिएर गएका फयङ साँबा वंशावलीको तुलनात्मक अध्ययनले उक्त तथ्य पुष्टि गर्दछन्। (Phayang MH, 2019; Phayang RB, 2019) अतः १८०० सालदेखि १८०७ सालसम्मको अवधिमा उल्लेख्य संख्यामा फयङ साँबा मेवाखोलाबाट हाङपाङ लगायत अन्य क्षेत्रमा छुट्टिएर गएका देखिन्छन्।

पन्चकन्दा (पुस्ताक्रम २४) का छोरा धनकर्ण (पुस्ताक्रम २५) र चासमुखी (पुस्ताक्रम २५) एवं शाहीवालका कान्छा छोरा इरूहाङ (पुस्ताक्रम २५) सोवुवा खोला र चुँङ्वा खोलाको दोभानदेखि उँभो दक्षिण हाङपाङको मध्य भूभागको जंगल फँडानी गरेर चारकिल्ला बाँधेर बसे। त्यसैले त्यसबेला साँबाले फँडानी गरेको जग्गालाई 'साँबाको खुर्पेठ्याक' भनियो। उसबेला हाङपाङ गाउँमा हाङबाङ थरका लिम्बू र गाउँको माथिल्लो भाग सिङ्सोबामा सुनेबा थरका आदिवासी लिम्बू बसोबास गर्दथे। आफ्नो थातथलो मेवाखोलाबाट हाङपाङमा आएर फयङहाङ साँबा खुर्पेठ्याकमा बस्ने लिम्बू भए तापनि उक्त स्थान हाङबाङ र सुनेबाले पहिल्यै ओगटेको गाउँ हो। त्यसैले हाङपाङमा फयङ साँबा बिजिल्ले लिम्बू कहलिए।

आठराई हाङपाङमा साधन स्रोतलाई लिएर पहिलेदेखि बसोबास गर्ने हाङबाङ र सुनेबा लिम्बूबीच झगडा भइरहन्थ्यो। त्यसमाथि फयङ साँबा लिम्बूको उपस्थितिले लिम्बूबीच तनाव उत्पन्न भयो। हाङपाङका फयङ साँबाको सुभाङ्गी मेवाखोलामा रहेकाले हाङपाङमा जग्गा व्यवस्थापन मिलाउन उनीहरूले तम्बरखोलाबाट यक्सोलाई जिम्मावाल

जिल्ला बन्न डाके र सुभाङ्गी दिलाए। (TB. Phyang, personal communication, August 15, 2019)

जग्गाकै विषयमा फयङ साँबा र यक्सोसित वि.सं. १८०७ सालमा किचलो पनि भयो। साथै, फयङ साँबा र यक्सोबीच मिलापत्र भयो। (A.B. Phyang, personal communication, April 22, 2018; D.R. Phyang, personal communication, January 16, 2018)

तुलनात्मक विश्लेषण गर्दा हाल चलिरहेको पुस्ताक्रम ३३ र हाङपाङ छुट्टिएर आएका पुस्ताक्रम २५ बीचको अन्तर ९ पुस्ता हुन्छ। वि.सं. १८०० लाई आधार मान्ने हो भने २०७६ सालसम्म गणना गर्दा २७६ वर्ष हुन्छ। काल र पुस्ता हिसाब गर्दा करिव ३० वर्षको पुस्ता देखिएकाले हाङपाङमा १८०० सालताका मेवाखोलाबाट छुट्टिएको तथ्य तर्कसम्मत देखिन्छ। अतः वही थेबा पन्चनन्द (पुस्ताक्रम २६) ले फयङ साँबा १८०० सालमा हाङपाङ आएको दावीलाई सही मान्न सकिन्छ। किनभने उनी शाहीवाल (पुस्ताक्रम २४) का नाति हुन्। (TB. Phyang, personal communication, August 15, 2019)

फयङ साँबा परिवारको चिहानडाँडा चुँवाखोला नजिक डाँडामा रहेको छ। उनीहरूको स्थानीय माङ्गेना गर्ने देवथान हाङपाङमा चुँवा वारी र पारी बनाएका छन्। हाङपाङमा बसोबास गर्ने यक्सो र आङबुहाङ थरका लिम्बूका पारिवारिक चिहानडाँडा र पूजास्थल छैनन्। तथ्य र प्रमाणका आधारमा फयङ साँबा हाङपाङमा हाम्बाङ, सुनेबा भन्दा पछि आएका र यक्सो, आङबुहाङ भन्दा अघि आएका जाति हुन्। फयङ साँबाहरू १८०० सालतिर हाङपाङमा आएर बसोबास गरेका थिए। (A.R. Phyang, personal communication, August 17, 1999; Phayang TB, 2019; Chemjong, 1974)

धनकर्ण (पुस्ताक्रम २५) का छोरा धर्मध्वज मुदेन (पुस्ताक्रम २६) चाहिँ भोटबाट नेपालमा नुन व्यापार गर्दथे। उनको घरमा पैसा राख्ने भकारी थियो। उनकी एकजना बुहारी आङबुहाङ् थिइन्। घरमा बुहारीसित रीस उठ्दा उनलाई तेरो माइतीमा मेरो पैसा राख्ने भकारी

जत्रो पनि धानको भकारी छैन भनेर होच्याएको कुरा उनले माइतीलाई पोल लगाइन्। उसो भए त्यस्को भकारीमा आगो झोसिदेऊ भनेर माइतीले आवेशमा भनी दिँदा नभन्दै मन्द दिमागकी बुहारीले भकारीमा आगो झोसेर घर खरानी पारिदिइन्। आगोबाट बचेका कतिपय झ्याल ढोका र चौकोस पछि स्थानीय हाङपाङका प्रसाईंहरूले घर बनाउँदा किनेर लगे भनेर यो लेखकलाई आफ्नी बजु सञ्चरानीले बाल्यकालमा सुनाएकी थिइन्। यस घटनाक्रमबाट थाहा हुन्छ फयङ साँबा हाङपाङ आएपछि सामाजिक आर्थिक अवस्थामा उतारचढाव आएको थियो।

फयङ साँबा र यक्सोबीच कुटुम्बेरी साइनो भएकाले सम्बन्ध नजिक रहेको देखिन्छ। किनभने फयङ साँबाले यक्सोलाई आफ्ना छोरीचेली र दाइजो स्वरुप जग्गा दिएको जानकार बताउँछन्। उदाहरणका लागि हाङपाङ चुँवा बस्ने हस्तवीरकी पत्नी, अम्बरबहादुर यक्सोकी आमा असलबहादुर फयङ (पुस्ताक्रम २८) की फुपू चेली हुन्। उनको अल्पायुमै निधन भएकोले खड्गबहादुर, अम्बरबहादुरका पिता हस्तवीरले पुनः मृतककी भदैनी विवाह गरे। त्यसैले अमरबहादुर र खड्गबहादुरकी आमा तथा कान्छी आमा असलबहादुर फयङ (पुस्ताक्रम २८) की चेलीहरू हुन्। यही वैवाहिक नाताले गर्दा खड्गबहादुर, अम्बरबहादुर यक्सो परिवार फयङ साँबा जग्गामा बसेका हुन् भनी स्थानीय जानकारहरूले बताए। (S. PhyangAngbuhang, personal communication, January 11, 2018; N.M. MudenchhongPhyang, personal communication, August 20, 2019)

छोरी चेलीलाई जग्गा दिएर ज्वाइँ राख्ने चलन यक्सो जातिमा पनि पाइन्छ। यक्सोले आफ्नी चेलीलाई जग्गादान दिएर गरी खान दिएका उदाहरण छ। एकजना यक्सो छोरीचेलीलाई सोबुवा बस्ने करणध्वोज मुदेन्छङ् साँबाले विवाह गरे। उनलाई यक्सोले आफ्नै जग्गामा ल्याएर राखे। उनका छोरा आनन्दधोज र नाति जसबहादुर हाङपाङ निवासी हुन्। यसरी करणध्वोजका दरसन्तान हाङपाङमा यक्सो परिवारले

छोरीलाई दाइजो दिएको जग्गामा बसेका हुन्। (N.M. Mudenchhong Phyang; D.P. Mudenchhong personal communication, August 20, 2019)

कालान्तरमा यिनै मुदेन्छङ साँबाका दरसन्तान र फयङ साँबाका दरसन्तानबीच कुटुम्बेरी सम्बन्ध स्थापित भयो। यो पङ्तिकारको पितृवंश फयङ र मातृवंश मुदेन्छङ साँबा हुन्। त्यसैले लेखक मावली साइनोले कतिपय यक्सोलाई मामा भन्छ भने कतिपय यक्सोलाई बुबाको साइनो खेद्दै लुङ्वा दाजुभाइ, काका, बडाबा आदि साइनोले सम्बोधन गर्ने गर्दछ।

साँबाको खुर्पेठ्याकबारे अन्य लिम्बूको भनाइ के छ? अध्ययन गरौँ। फयङ साँबा जंगल फँडानी गरेर पुर्खाले चर्चेका खुर्पेठ्याक जग्गा हाङपाङ चुँङ्वा दोभानदेखि दक्षिण क्षेत्रमा बसेका चुँङ्वा निवासी जाति हुन्। हाङपाङ निवासी सरला सुब्बा (आङबुहाङ) की सासु शंकरमाया तुम्रोक आङबुहाङको बाल्यकाल हाङपाङ चुँङ्वाको सुन्तलाबारीमा वितेको थियो। उनले आफ्नो बाल्यकालमा आफ्ना बाजेबाट थाहा पाएअनुसार चुँङ्वा जग्गा साँबाहरूले खुर्पेठ्याक जग्गा हो। उनले त्यही कुरा आफ्नी बुहारी सरलालाई सन्दर्भवश संस्मरणका रूपमा सुनाएकी थिइन्। (S. Phyang Angbuhang, personal communication, January 11, 2018)

हाङपाङ झरेका फयङ साँबाको पुर्खौली स्थल भने ताप्लेजुङ जिल्लाको मेवाखोला साँबा छँदै थियो। उनीहरूको पैत्रिक जग्गाको किपट अधिकार मेवाखोलामा नै कायम थियो। उनीहरूको माङ्गेना यक ताप्लेजुङ जिल्लाको मेवाखोला साँबामा रहेको लिङथाङ यक हो।

हाङपाङ निवासी ऐतराज फयङ (पुस्ताक्रम २९) अनुसार मेवाखोलामा साँबा जग्गा नापी हुनपूर्व मेवाखोला साँबाबाट मानिसहरू तिरो तिर्न हाङपाङ आउने गर्दथे। धर्मध्वज मुदेन (पुस्ताक्रम २६) ले भोटबाट नुन व्यापार गर्दा ओलाङचुङ गोलादेखि मैवा दोभानसम्म विभिन्न स्थानमा चौरी बाँध्न तथा बास बस्ने पाटीपौवाहरू बनाएका

थिए। कालान्तरमा उक्त ब्यापार मार्गमा पर्ने ओलाङचुङ गोलामा नेपाल सरकारले भन्सार कार्यालय तथा पुलिस चेकपोस्ट स्थापना गर्ने निर्णय गऱ्यो। त्यसको लागि भवनको आवश्यकता पऱ्यो। सरकारले त्यहाँ प्रयोगविहीन रहेका पाटीपौवालाई उपयोग गर्न चाह्यो। ती भौतिक संरचना र जग्गाको स्वामित्वको खोजी गर्दै सरकारी प्रतिनिधि हाङपाङ आएर ऐतराज फयङ साँबालाई भेटे।

श्री ५ को सरकारको मागबमोजिम ऐतराजले ओलाङचुङ गोलादेखि मैवादोभानसम्म पर्ने पाटीपौवा र जग्गाको स्वामित्व सरकारलाई लिखित रुपमा हस्तान्तरण गरिदिए। (A.R. Phyang, personal communication, January 15, 1999) सो सन्दर्भमा टेकबहादुरले मेवाखोला साँबामा आफ्ना भागमा परेका जग्गाको किपट हक मेवाखोलामा रहेका दाजुभाइलाई नै सुम्पिदिएको जानकारी गराए। (T.B. Phyang, personal communication, August 15, 2019)

संक्षेपमा, १८०० सालतिर हाङपाङ आएका फयङ साँबा हाङपाङ बिसमुरेका हाङबाङ र सिंङसोबाका सुनेबा भन्दा नयाँ तथा यक्सो र आङबुहाङ भन्दा पुराना बासिन्दा हुन्। उनीहरूको चुँङ्वा क्षेत्रलाई साँबाहरूको खुर्पेठ्याक क्षेत्र भनिन्छ। स्मरण रहोस्, वनजंगल फँडानी गरेर बसेको क्षेत्रलाई खुर्पेठ्याक  भनिन्छ।

# ५.६.१ तुम्याङ त्या: आठराई हाङपाङ वंशवृक्ष




Sources: Phyang AR, 1999; Phyang DR, 2019. नामअधिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ
The researcher revised the Phyang Samba Genealogy 2056, incorporating the gathered data.



तुम्याङ त्या

**२६ तिलोकसिङ र २६ रहमान वंशवृक्ष**




Sources: Phyang AR, 1999; Phyang DR, 2019. नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ ।
The researcher revised the Phyang Samba Genealogy 2056, incorporating the gathered data.




तुम्याङ त्या
२६ धर्मधोज (मुदेन) वंशवृक्ष
२२ तुम्याङ त्या
२३ चनुवा
२४ पञ्चकन्दा
२५ धनकर्ण
२६ धर्मधोज (मुदेन)
२७ लक्ष्मण
२७ कालुसिंह
२७ हाङफेक
२७ लाखा
२७ नाबिकर्ण
२८ ब्रम्हा
२८ सेरबहादुर
२८ दलबहादुर
२८ गुमानध्वज
२८ असलबहादुर
२९ श्यामबहादुर
२९ धरमध्वोज
२९ तुलाराम (डिल्लीबहादुर)
२९ सेरबहादुर
२९ ऐतराज
२९ चन्द्रबहादुर
२९ निरबहादुर
(छोरी)वुद्धिकुमारी
३० कालिबहादुर छोरी- शुष्मा
२९ सेरबहादुर (असम भारत)
२९ ऐतराज
३० कृष्ण
३० मेचे
३० छोरी २
३० नवराज सुब्बा
३० बिमल
३० कमल
३० दीपक
३० दीपेन्द्र
३० धीरेन्द्र
३० छोरीहरू सरला, कविता, सुशिला
३१ कौशल राज सुब्बा
३१ निश्छल राज सुब्बा
३१ ओमजङ्ग छोरीहरू सुनिता, अनिता
३१ प्रबल छोरी करूणा
३१ दीपेस
३१ डिसन छोरी दीक्षा
३१ अनमोल
३२ अनुभव सुब्बा
२९ चन्द्रबहादुर
२९ निरबहादुर
२९ श्यामबहादुर
छोरा- १ छोरी- १
३० कालिबहादुर
३० यामबहादुर, ज्ञानबहादुर, कुलबहादुर, छोरी- दमैनी
३० राजकुमार
३० गजवीर
३० (छोरीहरू) तिलमति, तारा, राधिका,कविता
३१ नितेश छोरी-निस्ता
३१ जोन
३१ सरोज
३१ विश्वराज
३१ (छोरी) गंगा, सविता
३१ संदिप, (छोरी) सन्ध्या, जानुकी
३२ इङसोहाङ छोरी-इङसाङ
३२ सेसेहाङ, सेसाङमा(D)
Sources: Phyang AR, 1999; Phyang DR, 2019. नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूचीमा छ।
The researcher revised the Phyang Samba Genealogy 2056, incorporating the gathered data.
३/५




Sources: Phyang AR, 1999; Phyang DR, 2019. नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूचीमा छ।
The researcher revised the Phyang Samba Genealogy 2056, incorporating the gathered data.



तुम्याङ त्या

**२६ कौसिङ वंशवृक्षको बाँकी भाग**

**तुम्याङ त्या- चनुवा- पञ्चकन्दा- चासमुखी- कौसिंह- २७ रामदत्त- २८ याखा चन्द्रवीर- २९ ईङ्सराज शाखा .**




**२६ कौसिंङ- २७ रामदत्त- २८ याखा चन्द्रवीर - २९ मलबहादुर - ३० पूर्णसिङ शाखा .**




Sources: Phyang AR, 1999; Phyang DR, 2019. नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूचीमा छ ।
The researcher revised the Phyang Samba Genealogy 2056, incorporating the gathered data.



## ५.७ सखुवासभा मुन्धुम

संखुवासभामा फयङ साँबा उत्पत्तिबारेको थुङसाप मुन्धुम।

“साबासो तुम्याङरे पाङ्भे मेवाखोला साबादो सामरीति युङे रैछ। खेन्ले कुस्सा लथिक् धनकर्ण वये रैछ। खेन्ले कुमेन्छिमा नेच्छी तारुसी रैछ। हेक्केआङ् थो तारुमेन्ले कुमिङ् क्वाहाङ्गा रछ। कथोबेन्ले कुमिङ सुगिक्मा रछ। हेक्केआङ् क्वाहाङमेन थो युङ्सी। कान्छी सुगिक्मेन कथो युङसिङ। खेन्ले कुसा धर्मवीर मुथिक खेन्ले कुसा नुसे मेवये। कुमिङ सेबेङहाङ, माइलाले कुमिङ भागीदत्त, साईलाले कुमिङ चित्ताबाङ, काईलाले सामदुङेहाङ, अन्तरेले कुमिङ युराहाङ, जन्तरेले कुमिङ बलसिंहहाङ, फोतबाले कुमिङ अहेवाबा। भगीदत्तको छोरा धोजु राई एकजना मात्र। उसको छोरा जिते राई, भर्ते राई, र त्रिमान राई। जिते राईको छोरा लाखमान राई र त्यसपछि अपुताली। भर्ते राईको छोरा हर्के राई, उसको छोरा कमल र त्यसपछि रामकुमार। त्रिमान राई अपुताली।"

नेपालको उत्तर–पूर्वी हिमाली जिल्ला संखुवासभाका फयङ साँबाको बसोबास छ। २०७५ सालमा प्राप्त प्रस्तुत टिपोटका आधारमा साँबा–फयङ–तुम्याङको धनकर्ण (पुस्ताक्रम २५) को कान्छी श्रीमतीका सन्तान संखुवासभामा बसेका हुन् भन्ने थाहा भयो। संखुवासभाका पुस्ताक्रमलाई अन्य क्षेत्रका वंशावलीसंग तुलनात्मक अध्ययन गर्दा वि.स. १८०० सालतिर धनकर्ण (पुस्ताक्रम २५) का कान्छीपट्टिका सन्तान संखुवासभामा फैलिएको मिल्न आउँछ।

फयङ साँबाको विस्तार संखुवासभामा कसरी भयो होला भनेर खोज्दा विक्रम सम्वत १८०० सालपछि चैनपुरमा लिम्बुवान सेनालाई सहयोग गर्न तथा काङसोरे (काङ्सु राय) नेतृत्वका लिम्बुवान सैनिक फौजमा सामेल हुन मेवाखोलाबाट फयङ साँबा जाने गर्दथे। (Samba Mingsra, 2018) गोरखाली सेनाले खम्बुवानपछि लिम्बुवान क्षेत्र मिसाउन ताकेको थियो।

लिम्बुवानमा गोरखा आक्रमणविरुद्ध लिम्बुवान सैनिकलाई सहयोग गर्न मेवाखोलाका साँबाहरू चैनपुर गए। त्यहाँ जाने क्रममा फयङ साँबा पनि गएका थिए। त्यसबेला साँबा परिवारका शिपा र फाक्तेले लडाइँमा ज्यान गुमाए र सहिद बन्न पुगे। (Samba Mingsra, 2018)

जेहोस्, त्यसबेला मेवाखोलादेखि संखुवासभा चैनपुर क्षेत्रमा साँबाको आवतजावत बढेको थियो। यही क्रममा पन्चकन्दा (पुस्ताक्रम २४) का छोरा धनकर्ण (पुस्ताक्रम २५) को जेठी श्रीमतिका सन्तान हाङपाङमा र कान्छी श्रीमतिका सन्तान संखुवासभामा छुट्टिएर बसेको देखिन्छ।

अरुण–वरुण क्षेत्र साँबा पुर्खाहरू डुल्ने, घुम्ने, सिकार खेल्ने स्थान भएको मुन्धुममा पनि उल्लेख छ। लिम्बुवान सेनामा सहभागी हुन तथा गोरखाली–लिम्बुवान युद्धको शृङ्खला आरम्भ भएपछि त्यहाँ जानु स्वभाविक छ।

वि.सं. १८०० सालदेखि हाल (वि.सं.  २०७६ साल) सम्म लगभग २७६ वर्ष हुन्छ । पन्चकन्दा (पुस्ताक्रम २४) का छोरा धनकर्ण (पुस्ताक्रम २५) र चासमुखी (पुस्ताक्रम २५) तथा शाहीवालका कान्छा छोरा इरूहाङ (पुस्ताक्रम २५) देखि हालको अद्यावधिक पुस्ताक्रम ३३ सम्म हिसाब गर्दा ९ पुस्ता हुन आउँछ। एक पुस्ता बराबर २५ देखि ३० वर्ष मानिने भएकाले फयङ साँबा वि.सं. १८०० तिर संखुवासभामा छुट्टिएर गइ फैलिएको साल मान्न सकिन्छ।

माथि "पइला–पइलावा..." वंशावली मुन्धुममा धनकर्णका कान्छी श्रीमतितर्फका सन्तानले राई थर लेखेको देखिन्छ। यसलाई विश्लेषण गर्दा अतीतको एक घटनाको याद आयो। लेखक वि.सं. २०५९ सालमा संखुवासभामा जिल्ला जनस्वास्थ्य अधिकृत भएर जाँदा के कुरा थाहा पायो भने संखुवासभाका सिक्दिम लगायतका केही गाउँमा अघि लिम्बू लेख्दै गरेका मानिसहरूले हाल राई लेख्न थालेका छन्। उक्त कुरो

स्वास्थ्यकर्मीले स्थानीयवासीको नामावली संकलन गर्ने क्रममा थाहा पाएका थिए। त्यसको कारण सोधी खोजी गर्दा उक्त समुदायमा राईकै बाहुल्यता भएकोले समाजका मिल्नको लागि त्यसो गरिएको हो भन्ने कुरा थाहा भयो। त्यसबेला यो कुरा मलाई अनौठो लागेकाले मनमा गढेको थियो। अहिले वंशावली विश्लेषण गर्ने क्रममा त्यो सम्झना काम लाग्यो।

यो विक्रम सम्वतको साठी दशक अथवा एक्काक्षसौँ शताब्दी आरम्भताकाको कुरो हो। उनीहरूले त्यसबेला राईकै प्रभावले मात्र उक्त थर ग्रहण गरेको नभइ साँबा वंशावलीमा पुर्खा राई उल्लिखित भएकाले पनि उनीहरूले सहजरुपमा राई थर ग्रहण गरेको विश्लेषण गरिन्छ। एक समय मेवाखोला, आठराई, संखुवासभा क्षेत्रमा लिम्बूवानको प्रभाव बढी थियो। फलस्वरुप लिम्बू लेखिएको हुनसक्छ। सामाजिक कारणका अतिरिक्त वंशावली अध्ययनको प्रभावले गर्दा उनीहरू राईमा फर्केको हुनसक्ने बलियो आधार देखिन्छ। स्मरण रहोस्, फयङ, चङबाङ साँबा समेतका एक पुर्खा सेनेहाङ राई हुन्।

# ५.७.१ तुम्याङ त्या: संखुवासभा वंशवृक्ष



तुम्याङ त्या

**संखुवासभा हाँगाः धनकर्ण (कान्छी श्रीमति) तर्फका छोरा २६ धर्मवीरको बाँकी वंशवृक्ष**




इ२ तुम्याङ त्या-चनुवा-पञ्चकन्दा-धनकर्ण-२६ धर्मवीर शाखा बाँकी




Note: NA= Name Not Available, (D)= Daughter

नोटः नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूचीमा छ ।

Phyang MH, 2019




तुम्याङ त्या
संखुवासभा हाँगाः धनकर्ण (कान्छी श्रीमति) तर्फका छोरा २६ धर्मवीरको बाँकी वंशवृक्ष
२७ उज्वलधोज
२८ असलमान
२९-आइत ब.
२९-छत्र ब.
२९ NA
३०-धन ब.
३० अर्थमान
३०-लाल ब.
३१ प्यारी (D)
३१ नन्द ब.
३१ सुकपाल, फेन्दी (D)
३१ NA (6)
३२ सुनिल, सन्देश, राजा, सेसेहाङ, (D) सुमना, सुष्मा
३० देवीबहादुर
३१ खड्क
३१ कुलवीर
३१ मन ब.
३१ सुमन
३१ चन्द्र
३१ प्यारी_D)
३२ जितेन, प्रविण, सविन, (D) कुमारी, माइली,कान्छी
३२ कुसन, (D) सुष्मा, फुङजिना
३२ आयुश, अविरल
३२ सुजल, तुम्याङ, थेबाङ, (D) नरमाया, काली
३२ नयन, आयन
३० बृख बहादुर
३१ लोक ब.
३१ लालसिंह
३१ आईतसिंह
३१ पूर्ण
३१ दिनेश
३१ बलहाङ
३१ (D) अनामिका, टीकारानी
३२ मट्टू, NA
३२ लालु, सोनु, झानु
३२ (D) लिलिमा
३२ (D) विनिता, अज्ञात
३१-सुकपाल
३२ विजय
३२ राजीव
३२ विशाल
३२ विक्रम
३२ (D) सुस्मिता, बिमला, सर्मिला
३३ बेलायत
३३ (D) NA
Phyang MH, 2019
३/३
Note: NA= Name Not Available, (D)= Daughter
नोटः नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ।

# ५.८ तुम्याङ त्याः भुटान वंशवृक्ष

५०–६० वर्षअघिसम्म हाङपाङबाट रोजगारीका लागि भुटान र सिक्किम जाने चलन थियो । त्यहाँ अलैंचीको ठूलो खेती हुन्थ्यो। जहाँ छिमेकी क्षेत्रहरूबाट कामदारहरू जाने गर्दथे। उनीहरूमध्ये अधिकांशले नेपालमा भन्दा त्यहाँ राम्रो अवसर देखे र त्यहीँ बसोबास गरे। सोही क्रममा फयङ साँबाको एउटा शाखा भुटानमा गयो र पछि त्यहाँ बसाइँ सऱ्यो। अहिले भुटानमा फयङ साँबाको जनसंख्या उल्लेख्य रहेको छ ।

कौसिंग (२६) पुत्र रामदत्त (२७) का दुई छोराहरू थिए, बालसिङ (२८) र याखा चन्द्रवीर (२८)। वंशावली पुनरावलोकनले देखाउँछ कि बलसिङ हाङपाङबाट अलग भए र उनी तथा उनका परिवार भुटानमा बसोबास गरे। जनसंख्याको आकारको ठूलो संख्या अहिले भुटानमा बसोबास गर्दछ। अर्कोतर्फ याखा चन्द्रवीर हाङपाङबाट अलग भएर आसाम गए। तर केही समयको अन्तरालपछि उनी हाङपाङ फर्के र पहिलेको जग्गामा बसे। अहिले उनीहरूका बच्चाहरू ठूलो संख्यामा हाङपाङबाट अन्यत्र बसाइँ सरेका छन्।

भुटानमा रहेको फयङ साँबा परिवार हाङपाङ परिवारबाट छुट्टिएको एक शाखा हो। चासमुखी (२५) का पनाति, कौसिङ (२६) का नाति र रामदत्त (२७) का छोरा बलसिंह (२८) सन् १९०६ मा भुटानमा बसाइँ सर्ने फयङ साँबाका २८ औं पुस्ताका थिए। (P.B. Samba, Personal communication, September 2, 2019) श्रीमती र चार छोराका साथ उनी भुटान आइपुगे र अहिले उनीहरूका सन्तान भुटानको सान्ताप्सा, सिराङटो, सिराङमा बस्छन्। फयङ साँबाको वंशावलीअनुसार अहिले भुटानमा फयङ साँबा वंशको ३२ पुस्ता चलिरहेको छ। प्रेमबहादुर फयङ साँबाका अनुसार उनीहरूका धेरै भाइहरू भारतको नागाल्याण्डमा बसाइँ सरेका छन्, नागा

महिलाहरूसँग विवाह गरेका छन् र त्यहाँ बसेका छन्। भुटानबाट कोही भने नेपाल फर्केर झापामा बसोबास गर्दै आएका छन् ।

अनुसन्धानकर्ताले प्रेमबहादुर फयङसँग फेसबुक संवाद गर्ने गरेका छन्। उनीसँग भुटानको फयङ साँबाको वंशावलीको मस्यौदा थियो तर नेपालको मुख्य भूमिमा अवस्थित हाङपाङ र मेवाखोलासँग जोड्न सहयोग नसकिरहेका अवस्थामा थिए। कुराकानीको क्रममा उनले चास्मुखी, कौसिङ र बाल्सिङ (पल्सिङ) जस्ता पुर्ख्यौली नामहरू तलमाथि पारेर उल्लेख गरे। अनुसन्धाताले संकलित सामग्रीलाई लेखकसंग रहेको मूल वंशावलीसित जुधाएर सहजीकरण र प्रमाणित गरे यसरी भुटानको पुर्खाको कालानुक्रमिक अनुक्रमलाई परिमार्जन भयो।

भुटानमा बस्ने प्रेमबहादुर साँबाले आफू इलामको माङसेबुङमा प्रसिद्ध सत्तेहाङ धर्मगुरु दर्शन गर्न समय समयमा आउने गरेको बताए। मैले उनीबाट भुटानमा बस्ने फयङ साँबाको सामाजिक सांस्कृतिक जानकारी र समूह तस्वीर प्रकाशनार्थ माग गरेको छु। प्राप्त भएमा साझा गर्नेछु।

संक्षेपमा भन्नुपर्दा फयङ साँबाका जेठा भाइ तुम्याङ त्या (२२) को वंश हाल हाङपाङ, संखुवासभा, आसाम र भुटानमा विस्तार भएको देखिन्छ। त्यस्तै कान्छो भाइ तुम्याङ हिरी (२२) ले मेवाखोला, पाँचथर र सिक्किममा वंश विस्तार गरेका छन् ।

तुम्याङ त्या

**भुटान हाँगाः २८ बलसिंह वंशवृक्ष**




Note: NA= (D)= Daughter; Date of Borth

नोटः नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ ।

Source: Phyang PB, 2019

१/४

तुम्याङ त्या

**भुटान हाँगाः २८ बलसिंह वंशवृक्ष**




**तुम्याङ त्या-चानुवा-पञ्चकन्दा-चासमुखी-कौसिंह-रामदत्त-बलसिंह- २९ ऐतबहादुर शाखा बाँकी**




Note: (D)= Daughter, Date of Birth

नोटः नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ ।

Source: Phyang PB, 2019

२/४


तुम्याङ त्या
भुटान हाँगाः २८ बलसिंह वंशवृक्ष
३० मनबहादुर
३१ रञ्जितकुमार
३१ लालधोज
३१ (D) गङ्गामाया, नरमाया
३२ गङ्गाहाङ
३२ खर्कहाङ, सरिता (D)
३० जङ्गबहादुर
३१ देशमान
३१ धनबहादुर
३१ वीरबहादुर
३१ (D) पुरीमाया वीरमोती
३२ सञ्चरानी, सुन्तोली (D)
३२ दलबहादुर, इन्द्रबहादुर, बर्कबहादुर, (D) देशमाया, लालमाया, धनमाया, पुर्णिमाया
३३ सुनिल, (D) ओमदेवी, रिमादेवी, सुनिता, मनिषा
३३ Khusi (D)
३० भगीरथ
३१ वुद्धवीर
३१ धनवीर
३१ हर्कवीर
३१ डम्बरकुमार
३१ (D) मैतहाङ्मा, बेपाङ्मा, ऐतरानी, पवीमाया, लक्षीमाया
३२ तन्दिन, सविना (D)
३२ हरूण, सारा (D)
३२ सुमन, बसन
३२ खेमबहादुर, ऐतबहादुर (D ) दुर्गामाया, भीमामाया, दिलमाया
३३ रोसन, कल्पना (D)
३३ शीतल
३० हर्कबहादुर
३१ चन्द्रकुमार
३१ (D) मनमाया, विष्णुमाया, कृष्णमाया
३३ सागर, विष्णु, माया (D)
३२ रोहित
३२ (D) डम्बरी, अरूणा
Note: (D)= Daughter
(Phyang PB, 2019)
३/४

तुम्याङ त्या



**भुटान हाँगाः २८ बलसिंह वंशवृक्ष**




Note: (D)= Daughter
नोटः नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ ।

Source: Phyang PB, 2019

४/४



**तुम्याङ हिरीबाट विस्तारित हाँगाहरू**

१. मेवाखोला
२. पाँचथर
३. सिक्किम
४. पश्चिम बंगाल

## ५.९ तुम्याङ हिरी: मेवाखोला वंशवृक्ष

मेवाखोलामा फयङ साँबाका तुम्याङ त्या (पुस्ताक्रम २२) र तुम्याङ हिरी (पुस्ताक्रम २२) सन्तान भए। त्यसमध्ये तुम्याङ हिरीतर्फ सरन्दा (पुस्ताक्रम २३), यरन्दा (पुस्ताक्रम २३) र युबन्दा (पुस्ताक्रम २३) सन्तान भए। सरन्दा र यरन्दाका दरसन्तान हालसम्म मेवाखोलामा रहेका छन्। (Phyang AR, 2056) युबन्दाका छोरा शाहीलाल (पुस्ताक्रम २४) तुम्याङ त्या तर्फका पंचकन्दा (पुस्ताक्रम २४) संगै हाङपाङ छुट्टिएर गए।

तुम्याङ त्या (पुस्ताक्रम २२), चनुवा (पुस्ताक्रम २३), पंचकन्दा (पुस्ताक्रम २४) का सन्तान धनकर्ण (पुस्ताक्रम २५) का जेठी श्रीमति तर्फका सन्तान हाङपाङमा छुट्टिएर बसेका छन्। कान्छी श्रीमति तर्फका सन्तान संखुवासभामा छुट्टिएर बसेका छन्। उनीहरू वि.स. १८०० सालतिर त्यहाँ गएका हुन्। (Phayang AR, 2056; Phyang MH, 2019)

तुम्याङ त्या, चनुवा, पंचकन्दा, चासमुखी (पुस्ताक्रम २५), कौसिङ (पुस्ताक्रम २६), रामदत्त (पुस्ताक्रम २७) का सन्तान बलसिङ (पुस्ताक्रम २८) हाङपाङबाट छुट्टिएर भुटानमा गइबसेका छन्। (Phyang P., 2019) हाङपाङबाट छुट्टिएर नेपालको सुनसरी, मोरङ, ललितपुर तथा भारतको असम, बेलायत जानेको संख्या पनि उल्लेख्य मात्रामा छ।

त्यसैगरी तुम्याङ हिरी (पुस्ताक्रम २२) तर्फका युबन्दा (पुस्ताक्रम २३), शाहीवाल (पुस्ताक्रम २४) का सन्तान जसपाल (पुस्ताक्रम २५) का जेठी श्रीमति पट्टिका सन्तान मेवाखोलाबाट सिक्किममा छुट्टिएर गए। त्यसैगरी जसपालकी कान्छी पट्टिका सन्तान १८०७ सालमा पाँचथरमा छुटेर गएका हुन्। (Phayang RB, 2019)

फयङ साँबाको उत्पत्तिस्थल मेवाखोला भए तापनि बहुसंख्यक फयङ साँबा आठराई हाङपाङ र त्यहाँबाट स्वदेश र विदेशमा फैलिएका छन्। हाङपाङबाट भुटान, असम र वेलायतमा छुट्टिएर गएका छन्। मेवाखोलाबाट सिधै संखुवा सभा, पाँचथर, सिक्किममा छुट्टिएर गएका हुन्।

यसरी हाल मेवाखोलामा रहने भन्दा बाहिर छुटेर जाने फयङ साँबाको जनसंख्या उल्लेख्य रूपमा बढी भएको छ। मेवाखोलामा हाल तुम्याङ हिरी (पुस्ताक्रम २२) तर्फका सरन्दा (पुस्ताक्रम २३) र यरन्दा (पुस्ताक्रम २३) का दरसन्तान मात्र बसोबास गर्दछन्। (Phayang AR, 2056; Phyang MC, 2019)

पुस्ताक्रम २३ का सरन्दा  र युबन्दालाई तुम्याङ हिरीका सन्तानका रूमा राख्नुपर्ने पर्याप्त आधारहरू निम्नानुसार छन्।

पहिलो प्रमाण वा आधार हेरौँ। लेखक वा अनुसन्धानकर्तालाई विभिन्न हाँगा वा क्लस्टरबाट तथ्यांक प्राप्त गर्ने क्रममा फयङ पुस्ताक्रम २१ र तुम्याङ त्या तुम्याङ हिरी पुस्ताक्रम २२ देखाइएको हाङपाङ हाँगा जत्तिको विस्तारित वंशावली अन्य कुनै पनि क्लस्टर वा हाँगाबाट प्राप्त भएन। अन्य क्लस्टर वा हाँगाबाट पुस्ताक्रम २३ वा सोभन्दा मुनिका पुस्ताक्रमबाट सुरू भएका वंशावली मात्र प्राप्त भएका छन्। अतः २०१६ सालमा संकलित तथा २०५६ सालमा प्रकाशित पहिलो फयङ साँबा वंशावली २०५६ नै मेवाखोला, पाँचथर र सिक्किम हाँगा बाहेकका मूलतः

हाङपाङ छुट्टिएका फयङ साँबा परिवारको आधिकारिक वंशावली हो जुन अनुसूचीमा हेर्न सकिन्छ।

फयङ साँबा वंशावली २०५६ अनुसार युबन्दा (पुस्ताक्रम २३) का नाति शाहीवाल (पुस्ताक्रम २४) का एक छोरा इरूहाङ(पुस्ताक्रम २५) मेवाखोलाबाट हाङपाङ छुट्टिएर गएका थिए। उक्त वंशावलीमा हाङपाङ छुटेका युबन्दाका नाति इरूहाङको वंशावली संग्रहित छ। तर मेवाखोलामै बसेका युबन्दाका दाजुभाइ पुस्ताक्रम २३ का सरन्दा र युबन्दाका सन्तानका किपट अलग भएकाले वंशावलीमा उनीहरूका नाम टिपिएको छैनन्। (Phyang AR, 2056) (हेर्नुहोस्- अध्याय ५.६ र अनुसूची २) अतः वंशावली २०५६ विश्लेषणका आधारमा सरन्दा, यरन्दा र युबन्दा एकै पिता तुम्याङ हिरी (पुस्ताक्रम २२) का सन्तान हुन्। सरन्दा (पुस्ताक्रम २३) तुम्याङ हिरीका जेठा सन्तान हुन्। (Phyang MC, 2019)

दोस्रो प्रमाण वा आधार यसप्रकार छ। तुम्याङ त्या, चनुवाका दरसन्तान ऐतराज (पुस्ताक्रम २९) र सेरबहादुर (पुस्ताक्रम २८) ले वि.स. २०१६ मा मेवाखोला गएर तुम्याङ हिरीका दरसन्तानबाट वंशावलीको आधारमा आफ्नो पैत्रिक जग्गाको किपट अधिकार प्राप्त गरे। उनीहरूले त्यसपछि हाङपाङमा नै मेवाखोलाको तिरो बुझ्ने काम प्रारम्भ गरे। यदि मेवाखोलाबाट हाङपाङ छुट्टिएका दाजुभाइ र मेवाखोला बस्ने दाजुभाइ १-२ पुस्ता मात्र नजिकका दाजुभाइहरू भएका भए जग्गा वा किपटको अंशवण्डा गर्न त्यति सहज हुने थिएन। मेवाखोलाबाट हाङपाङ छुट्टिने तुम्याङ त्या तर्फका पन्चकन्दा (पुस्ताक्रम २४) का छोरा धनकर्ण (पुस्ताक्रम २५) र चासमुखी (पुस्ताक्रम २५) र तुम्याङ हिरी तर्फका इरूहाङ (पुस्ताक्रम २५) तत्कालीन हाङपाङबाट गएका प्रतिनिधिहरूका ३-४ पुस्ता अघिका अग्रज हुन्। पुस्ताक्रम २५ का दाजुभाई हाँगा एकमुष्ट छुट्टिएर हाङपाङमा अलग भएकाले किपट अंश विभाजन गर्न त्यसबेला दुवै पक्षलाई सहज भएको हुनुपर्दछ।

त्यसैगरी, तेस्रो प्रमाण तथा आधार यसप्रकार छ। मेवाखोला हाँगाको वंशावलीमा पुस्ताक्रम २३ अर्थात् सरन्दा र यरन्दाबाट मात्र मेवाखोला हाँगाको फयङ साँबा वंशावली संकलित छ। उनीहरूलाई सरन्दा जेठो भाइ भएको संस्मरण छ। (Phyang MC, 2019) फयङ साँबा वंशावली २०५६ को रचनागर्भ वा पृष्ठभूमिसित गरिएको तुलनात्मक अध्ययनको आधारमा सरन्दा (पुस्ताक्रम २३) तुम्याङ हिरी (पुस्ताक्रम २२) का जेठो सन्तान हुन्। (Phyang AR, 2056) (हेर्नुहोस्- अध्याय ५.६ र अनुसूची २)

किनभने मेवाखोलामा सरन्दा र यरन्दा (पुस्ताक्रम २३) त्यहाँ बसेका वा रहेका थिए, जसका दरसन्तान हालसम्म त्यहाँ छन्। तुम्याङ हिरी तर्फकै एक भाइ युबन्दा  (पुस्ताक्रम २३) का सन्तान शाहीवाल (पुस्ताक्रम २४) का एक छोरा इरूहाङ (पुस्ताक्रम २५) तुम्याङ त्या (पुस्ताक्रम २२) तर्फका दरसन्तान पन्चकन्दा (पुस्ताक्रम २४) का छोरा धनकर्ण (पुस्ताक्रम २५) र चासमुखी (पुस्ताक्रम २५) संगै हाङपाङ छुट्टिएर गएका थिए। (Phyang AR, 2056) (हेर्नुहोस्- अध्याय ५.६ र अनुसूची २)

२०१६ सालमा प्रतिनिधिका रूपमा गएका ऐतराज र सेरबहादुरले संकलित गरेको अभिलेखमा हाङपाङ आउने सन्तानका पूर्वज चनुवा (पुस्ताक्रम २३) र युबन्दा (पुस्ताक्रम २३) पट्टिका शाहीवालका सन्तान इरूहाङ (पुस्ताक्रम २५) को मात्र वंशावलीमा अभिलेख छ। २०१६ सालको उक्त अभिलेखमा मेवाखोलामा रहेका दाजुभाइ सरन्दा र यरन्दा तर्फका वंशावली नटिपिनुको कारण हाङपाङ छुट्टिएकाहरूको मात्र किपट अधिकार सुनिश्चित गर्नु थियो।

एकै पिता तुम्याङ हिरीका दुई सन्तान सरन्दा र यरन्दाका दरसन्तान मात्र मेवाखोलामा रहेकाले त्यसपूर्वको वंशावली मेवाखोला हाँगाका फयङलाई आवश्यक नपरेको वा जानकारी नभएको हुनु स्वभाविक छ।

किनभने मेवाखोलामा तुम्याङ त्यातर्फका दरसन्तान नै छैनन्, तुम्याङ हिरीतर्फका मात्र छन्। अर्कोतर्फ हाङपाङमा सिँगो तुम्याङ त्या हाँगो र तुम्याङ हिरीको एक हाँगो पनि संगै छुट्टिएर गएका थिए। त्यसैले हाङपाङबाट २०१६ सालमा मेवाखोलामा गएर संकलित वंशावलीका आधारमा तयार पारिएको हाङपाङ हाँगाको वंशावलीमा तुम्याङ त्याको पूर्ण र हिरीको आंशिक जानकारी छ। अन्य हाँगो वा क्षेत्र वा क्लस्टरको वंशावलीभन्दा हाङपाङको वंशावली तुलनात्मक रूपमा विस्तारित छ जुन आधिकारिक पनि देखिन्छ।

मेवाखोला हाँगाको पुस्ताक्रम अध्यावधिक गर्नुपर्ने चौथो कारण वा आधार यसप्रकार छ। सहजताका लागि जसरी एकै बाबुका सन्तानका नाम प्रायः सुरेश, महेश, उमेश राखिन्छन् त्यसरी नै तुम्याङ हिरीले पनि आफ्ना सन्तानका नाम सरन्दा, यरन्दा र युबन्दा राखिदिएको तथ्यलाई परम्परागत अभ्यास मान्न सकिन्छ। ती नामहरू ध्वनिसाम्य (Homonym) हुन्। अतः सरन्दा, यरन्दा र युबन्दालाई तुम्याङ हिरीका सन्तानका रूपमा वंशावलीमा अध्यावधिक गरिएको हो। अतः सरन्दा, यरन्दा र युबन्दालाई तुम्याङ हिरीका सन्तानका रूपमा वंशावलीमा अध्यावधिक गरिएको हो।




नोट: नामअघिको संख्याले फयङ साँबा पुस्ताक्रम जनाउँछ । बाँकी विवरण अनुसूची १ मा उल्लिखित छ ।




Sources- Phyang MC, 2019; Phyang SS, 2024; Phyang A, 2024

नोटः नामअधिको संख्याले फयङ साँबा पुस्ताक्रम जनाउँछ । बाँकी विवरण अनुसूची १ मा उल्लिखित छ ।




तुम्याङ हिरी
मेवाखोला हाँगाः २३ यरन्दा वंशवृक्ष
२२ तुम्याङ हिरी
२३ यरन्दा
२४ युक्सई
२४ युकनन्द
२५ ध्यानसिङ
२५ जीतसिंह
२६ कुनहाङ
२६ हाङस्या
२६ आम्बले
२७ बलहाङ
२८ मकरध्वज
२८ भगीवन्त
२८ बाजनन्द
२८ जीतमान
२८ मान ब.
२९ नाब्रुङ
२९ जीतमान
३० मनहाङ
३० लुक्तराज
३० श्रीलाल
३० बृख ब.
३१ छोरी कौशिला सर्मीला
३१ भोटे छोरी नैना
३१ अनिश
३१ वीरहाङ
२८ मान ब.
२९ फिङ
२९ सतहाङ
२९ नामहाङ
२९ जीतमान
२९ अअरे
३० अमृत
३० मुत्थुप्पा
३० सञ्जमान
३० मंगलसिंङ
३० सञ्जराम
३० शुक्रराज
३१ अजय
३१ विजय
३१ छोरी अरूणी
३१ मनु
३१ सुवास
३१ छोरी शीला, आशा
३२ नाम थाहा नभएको (१)
Sources- Phyang MC, 2019; Phyang SS, 2024; Phyang A, 2024
नोटः नामअघिको संख्याले फयङ साँबा पुस्ताक्रम जनाउँछ । बाँकी विवरण अनुसूची १ मा उल्लिखित छ ।
३/३

## ५.१० तुम्याङ हिरीः पाँचथर वंशवृक्ष

वि.स. १८०० को दशकमा मेवाखोलाबाट फयङ साँबाहरू विभिन्न स्थानमा स्थानान्तरण भए। यसको प्रमुख कारण गोर्खा–लिम्बुवान युद्धको प्रभाव थियो। (Samba Mingsra, 2018) त्यसताका लिम्बुवानमा सुरू भएको गोरखाली आक्रमणको प्रतिकार गर्न धेरै साँबाहरू चैनपुर संखुवासभा जाने गर्दथे। सोही क्रममा फयङ साँबा पनि त्यस युद्धमा सहभागी हुनलाई बारम्बार चैनपुर जानेक्रम चलेको थियो। त्यही बेला फयङ साँबाका हाँगा हाङपाङ र संखुवासभामा स्थान्तरित भए। कोही फयङ साँबा सदस्यहरू सिक्किम र पाँचथरतिर लागे। उनीहरू त्यतै स्थापित भए। यस परिवेशमा साहिवालका छोरा जसपाल (२५) सिक्किममा बसाइँ सरे र आफूलाई स्थापित गरे, जहाँ उनका वंशजहरू हाल सिक्किममा बस्छन्। उनकी कान्छी श्रीमतीका छोराछोरी पाँचथरमा बस्छन् ।

१८०७ सालमा पाँचथरका फयङ साँबाका पुर्खाले हाल पाँचथर जिल्लाको लुङ्रूप्पा गाउँमा जंगल फाँडेर आवाद गरे। (Phyang RB, 2019) यो स्थान हाल फिदिम नगरपालिकाको वडा नं १४ मा पर्दछ । उनीहरूको वंश जसपालकी कान्छी पत्नी (२५) बाट सुरु हुन्छ। सिक्किम वंश जसपालका जेठी श्रीमतिरका संतान र पाँचथरका वंशबीच समानता पाइन्छन्। यस वंशावलीलाई हाङपाङ र संखुवासभा समूहको वंशावलीसित तुलना गरेर हेर्न सकिन्छ। यसरी तुलनात्मक अध्ययनका आधारमा जसपालका सन्तान भएको दाबीलाई जायज मान्न सकिन्छ। फलस्वरूप पाँचथरमा बस्दै आएका फयङ साँबा जसपाल (२५) की कान्छी श्रीमतीका सन्तान हुन्। पाँचथरमा बसोबास गर्ने उक्त वंश हाल फयङ साँबा वंशावलीमा ३२ औं पुस्तामा पुगेको देखा पर्दछ।

अप्रत्यक्ष रूपमा पाँचथरको विकासक्रमलाई विभिन्न ऐतिहासिक घटनाक्रमसित तुलना गरेर हेर्न सकिन्छ। लिम्बुवान–गोर्खाली द्वन्द्वका

बेला मेवाखोलाबाट थुप्रै फयङ साँबाहरू विस्थापित भएका थिए। साम्बा मिङ्श्रा सङचुम्भोका अनुसार १८०० सालदेखि साँबाहरू मेवाखोलाबाट चैनपुर संखुवासभामा लिम्बुवान सेनामा भर्ती हुन यात्रा गर्न थाले। (Samba Mingsra, 2018) सोही क्रममा धनकर्ण (२५) सुरुमा छुट्टिएर हाङपाङमा स्थापित भए, जहाँ उनकी जेठी श्रीमतीका सन्तान फैलिए। धनकर्ण सेनामा भर्ती हुन चैनपुर गइरहन्थे त्यसकारण उनले चैनपुरमै अर्को विवाह गरे। संखुवासभाको चैनपुर क्षेत्रमा धनकर्ण (२५) की कान्छी श्रीमतीका छोराछोरी हुर्केका हुन्।

सोही सेरोफेरोमा एउटा अर्को प्रमाण पनि फेला परेको छ। फयङ साँबा इतिहासका जानकार ऐतराज फयङ (२९) ले १८०७ सालमा हाङपाङमा साँबा र यक्सोबीच जग्गा विषयमा किचलो परेर मिलापत्र भएको काजग फेला परेको बताएका छन्। (AR. Phyang, personal communication, January 15, 1999) यो घटनाबाट वि.स. १८०७ अघि नै फयङ साँबा हाङपाङ पुगेको कुरा थाहा हुन्छ।


तुम्याङ हिरी
पाँचथर हाँगा: २५ जसपाल (कान्छी श्रीमति) वंशवृक्ष
२५ जसपाल
२६ धनपति
२६ साहानन्द
२६ डम्बरबहादुर
२६ नरवीर
२६ भुवनसिंह
२७- मनिराज
२७ मिङसिंङ
२७ दलबहादुर
२८- सुभानसिङ
२८ धनमान
२९ गोरे
२८ छत्रबहादुर
२८ पृथ्वीलाल
२९ लालबहादुर
२९ जीवन
२९ विष्णु
२९ मणि
२९ सन्तकुमार
२९ सुन्दरसिंह
३० निङ्वा (D)
३०कुसल
३०नगेश
३० दर्शन
३० सुनिल
३०मिराक
३०नाम्साङहाङ
३० सुगम
३० हारी (D)
३१ याङसान, सलोमित (D)
३० समर्तन
३० अतुल्या (D)
३१मिसेक
२६ नरवीर
२७ धनरूप
२७ धनपति
२७ बागवीर
२७ जयमान
२७ त्रिलोचन
२८ मानबहादुर
२९ कुलबहादुर
२९ कृष्णबहादुर
२९ सेरबहादुर
३० सनबहादुर
३० आइतबहादुर
३० भीमबहादुर
३० सञ्चराज
३० सुक्ध्वोज
३० पदमलाल
३० (D) रोमिला, पृथ्वीमाया
३१ सम्जिन, उदयहाङ, तेजमाया (D)
३२सोदु
३१ वसन्त, विकास
३१ मिङसो
३१ ईङसो
३१ (D) शीतला, जीना
३१ अन्जित
Note: (D)= Daughter नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूचीमा
Source: Phyang RB, 2019; Phyang BR, 2024


१/२

तुम्याङ हिरी

पाँचथर हाँगा: २५ जसपाल (कान्छी श्रीमति) वंशवृक्ष




Note: (D)= Daughter

नोटः नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ ।

Sources: Phyang RB, 2019; Phyang BR, 2024



## ५.११ तुम्याङ हिरी: सिक्किम वंशवृक्ष

सिक्किम परिवारको रूख ठूलो छ। सिक्किमका मानिसहरू तुमयाङ हिरी (२२) का दरसन्तान र जसपाल (२५) का सन्तान हुन्। सिक्किमका बासिन्दाहरूको भनाइमा उनीहरूका पुर्खाहरू मेवाखोलाबाट सिक्किम गएका थिए। (Phyang YB, 2019) यो शाखाको ऐतिहासिक घटना, वंशावली र पाँचथरको फयङ साँबा शाखाको वंशावली मिल्दोजुल्दो पाइन्छ।

सिक्किमले सुरुमा जसपालको नाम पत्ता लगाउन सकेन। यस क्रममा पाँचथर स्रोतका अनुसार उनीहरु जसपालकी कान्छी श्रीमतीका सन्तान हुन् भने जेठी श्रीमतीका सन्तान सिक्किममा छन् भन्ने कुरा पत्ता लाग्यो। (Phyang RB, 2019) उकत जानकारीको आधारमा, अनुसन्धानकर्ताले दुवै हाँगाका पारिवारिक रूखहरूको तुलना गरे र उनीहरूको एकत्रित पारिवारिक रूखहरू परिमार्जन गरे। स्मरण रहोस्, सिक्किम र पाँचथर दुवैले आफ्ना पुर्खाहरू मेवाखोलाबाट अलग भएको दाबी गर्छन्।

अनुसन्धानकर्ताले पाँचथर परिवारको वंशवृक्षको परीक्षण गरे, जहाँ उनीहरूले आफ्नो पुर्खाको नाम जसपाल भएको दाबी गरे। पारिवारिक रूखहरूको तुलना गर्नु अर्थपूर्ण थियो। निष्कर्षमा, हामी परिवारका रूखहरूलाई अन्य क्लस्टरहरूसँग तुलना गर्न सक्छौं। जसरी धनकर्णकी जेठी श्रीमतीका सन्तान हाङपाङमा बसाइँ सरे भने कान्छी श्रीमतीका सन्तान संखुवासभातिर फैलिए । हामी सिक्किम र पाँचथरमा पनि त्यही दृश्य देख्छौं।

पारिवारिक रूखहरूको तुलना गर्ने हो भने, सिक्किममा २५ देखि ३३ सम्म पाँचथरको जस्तै पुस्तागत दायरा छ। पाँचथर र सिक्किममा जसपालका सन्ततिहरू तुलनीय छन्। एक पुस्ता सिक्किममा बढी देखिन्छ। पाँचथरमा ३२ पुस्ता र सिक्किममा ३३ पुस्ता गणना भएको

वंशावलीमा प्रष्ट छ। यो संभवतः सिक्किमका सन्तान जेठी आमाका छोराछोरी भएकाले कान्छी आमाका छोराछोरीभन्दा जेठा हुन सक्छन् ।

यो निष्कर्षमा पुग्नका लागि दुवै पक्षसँग रहेर तीन वर्षको विस्तृत विश्लेषण र परामर्श गरियो। 'किरात लिम्बू संस्कृति मानवशास्त्रीय विवेचना' २०७७ वंशावलीको ईबुक २०२३ मा सिक्किम बस्ने फयङ साँबाको वंशावली यसरी खुलाउन सकिएको थिएन जसलाई यहाँ सुधार गरिएको छ। अनुसन्धातासँग अहिले सिक्किम वंशावलीको विस्तृत समझ छ। पाँचथरले सूचना नदिएको भए यो कार्य संभव हुने थिएन। यस अर्थमा पाँचथर र सिक्किमका सूचनादाताहरूप्रति कृतज्ञता व्यक्त गर्दछु।

फयङ साँबाको ठूलो जनसंख्या सिक्किममा बसोबास गर्दछन्। यसलाई कालक्रमका दृष्टिले वि.स. १८०० देखि १८०७ को बीचको अवधि अनुमान गर्न सकिन्छ। । किनभने त्यस समयमा गोर्खालीले लिम्बू भूभागलाई आफ्नो अधीनमा राख्ने प्रयास गरेका कारण लिम्बुवान राज्य अशान्तिमा थियो। (Samba Mingsra, 2018) धेरै फयङ साँबाहरू गोर्खालीविरुद्ध लिम्बुवान सेनासँगको युद्धमा सामेल भएका थिए। कोही भाइ भने सिक्किमतिर लागेको घटनाक्रमबाट सिद्ध हुन्छ।

जेहोस् सिक्किमका फयङ साँबा तुम्याङ हिरीका दरसन्तान तथा जसपाल (२५) जेठी श्रीमतीका सन्तान हुन्। यिनीहरूको जनसंख्या हाला सिक्किमा उल्लेख्य रूपमा रहेको प्रष्ट देखिन्छ।




Note: (D)= Daughter

नोटः नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ। Source: Phyang YB, 2019, 2024




तुम्याङ हिरी
सिक्किम हाँगा: २५ जसपाल (जेठी श्रीमति) तर्फका २६ असारसिङ वंशवृक्ष
२७ पाबोङहाङ
२८ सेतोमान
२८ पूर्णधोज
२८ गजराल
२९ गिरमान
२९ वुद्धराज
२९ कलबहादुर
२९ प्रसादसिंह
३० आइतासिंह
३० नरबहादुर
३० मङ्गलु
३० पूर्णबहादुर
३० दिलबहादुर
३१ लक्ष्मण
३१ सेते
३१ माकुरी (D)
३१ अशोक, (D) दिलमाया, मनमाया, लिला, सर्मीली
३१ अरूण, मिलन, फूलमाया (D)
३१ मिलन, सुरेश, विजय
३२ सुहाङ, (D) सुजाता, सुनिहाङमा, सुकिहाङमा
३२ बलिहाङ निसामा (D)
३१ लालबहादुर, सोमर, समीर, आसमति (D)
२९ प्रसादसिंह
२९ वुद्धराज
३० शुकधन
३१ अमर, सुन्दर, विजय, मनोज, (D) सीता
३० जगतबहादुर
३१ शिवकुमार
३१ शरदकुमार
३१ बलराम
३१ योगबहादुर
३१ गणेश
३१ मोहनहाङ
३१ (D) खुसमाया, ईश्वरमाया, सूक्ष्मा, सविना
३२ शिशिर सञ्चु(D)
३२ अमित
३२ मेनिलाल
३२ दवात
३२ (D) लीला, सरूना
३२ सिद्धान्त, स्वारिया(D)
३२ श्रृजन, श्रेया
३२ आकाश, अनु (D)
३२ ईजा (D)
३३ सेन्लप
Note: (D)= Daughter
Source: Phyang YB, 2019, 2024
नोटः नामअघिको अंकले पुस्ताक्रम जनाउँछ, पूरा विवरण अनुसूची १ मा छ ।
२/३




## ५.१२ भारत असममा फयङ साँबा

भारतको असममा पनि फयङ साँबा बस्दछन् । अध्ययनअनुसार साँबा–फयङ–तुम्याहाङ त्यापट्टिका धनकर्ण (पुस्ताक्रम २५) का जेठी पट्टिका धर्मध्वज (पुस्ताक्रम २६) तर्फका लक्ष्मण (पुस्ताक्रम २७) र असलबहादुर (पुस्ताक्रम २८) का जेठा र कान्छा छोरा पुस्ताक्रम २९ का सेरबहादुर र निरबहादुर हाङपाङबाट भारतको असम गएका हुन्। उनीहरू आजभन्दा करिव सत्तरी वर्षअघि नै हाङपाङबाट भारतको असम बसाइँ गएका थिए।

असममा हाल उनीहरूका सन्तान असमको दरङ, डिम्माकोशी क्षेत्रमा बसोबास गर्दछन्। यसै गरी संखुवासभाबाट पनि फयङ साँबा भारतको असम गएको वंशावलीबाट जानकारी प्राप्त भयो। अध्ययन क्रममा उनीहरूसित फोन सम्पर्क गरेर विवरण माग्ने प्रयास गरियो तापनि पर्याप्त सूचना पाउन सकिएन। यद्यपि उपलब्ध भएका सूचना वंशावलीमा समेट्ने काम भएका छन्।

## ५.१३ बेलायतमा फयङ साँबा

पहाडबाट क्रमसः तराइ र उपत्यका बसोबास गर्न झरेका फयङ साँबा हाल बेलायतमा निकै ठूलो संख्यामा रहेका छन्। बेलायती सेनामा सेवानिवृत्त भएपछि उनीहरू परिवारका साथमा त्यहाँ बसेका हुन्। मेवाखोला, हाङपाङ, संखुवासभा र पाँचथरबाट फयङ साँबा त्यहाँ पुगेका छन्। त्यहाँ फयङ साँबाको १३ घर रहेको जानकारी मिलेको छ।

नयाँ पुस्ताका फयङ साँबाले अन्तरजातीय विवाह पनि गरेका छन्। उनीहरूले राई, मगर, तामाङ र नेवार जातिका बुहारी ल्याएर समाज र परिवारलाई अनेकतामा एकता र समावेशी सन्देश दिएका छन्। हाल वेलायत लगायत विदेशमा रहेका फयङ साँबाले फयङ साँबा वंशावलीप्रति रूची राखेका छन् जुन सकारात्मक कुरो हो।

## ५.१४ फयङ साँबा जनसंख्या

अध्ययन अनुसार फयङ साँबाको घरसंख्या ताप्लेजुङ जिल्लामा जम्मा ३६ घरधुरी छन्। जसमध्ये मेवाखोला थुममा जम्मा २६ घर छन्। ती मध्ये साँबा गाउँमा करिब १५ घर, बाल्देनमा ८ घर, नाल्बुमा १ घर, थुकिममा १ घर, लिवाङमा १ घर रहेका छन्। ताप्लेजुङ जिल्लामा पर्ने आठराई थुम हाङपाङ गाउँमा १० घरधुरी फयङ साँबा बसोबास गर्दछन्।

यसै गरी संखुवासभा जिल्लामा जम्मा ३५ घरधुरी छन्। जसमध्ये बाह्रबिसेमा ५ घर, धुपुमा ५ घर, दिदिङमा १ घर, लेब्राहममा ३ घर, चैनपुरमा १ घर, वानामा ३ घर र अन्यत्र १७ घर रहेका छन्। यस आधारमा ताप्लेजुङकै हाराहारीमा फयङ साँबा संखुवासभा जिल्लामा बसोबास गरेको पाइन्छ।

पाँचथर जिल्लाको लुङरुप्पा पाक्याङमा जम्मा २० घरधुरी फयङ साँबा बसोबास गर्दछन्। हाल यो गाउँ फिदिम नगरपालिकाअन्तर्गत

पर्दछ। मोरङ जिल्लामा जम्मा ८ घर छन् जसमध्ये बाहुन्नेमा ४ घर, गछियामा ३ घर र विराटनगरमा १ घर रहेका छन्। सुनसरी जिल्लामा जम्मा १९ घर छन् जसमध्ये धरानमा १८ घर र इटहरीमा १ घर छन्। झापा जिल्लामा जम्मा २४ घर फयङ साँबा परिवार छन्। जसमध्ये भद्रपुरमा २ घर, पृथ्वीनगरमा ३ घर, सत्तासीधाम दुधेमा ४ घर, बर्ने झोडामा ५ घर, बुधबारेमा ६ घर, बुट्टाबारीमा ४ घर रहेका छन्। यसै गरी ललिपुर जिल्लामा २ घरधुरी रहेका छन्।

भारत असममा पनि साँबा फयङ विस्तारित छन्। त्यहाँ फोन सम्पर्क राख्दा त्यहाँ करिब १० घर भएको जानकारी भयो। सिक्किममा पनि कमसेकम २० घरधुरी भएको र भुटानमा ३० घरधुरी भएको एकीन भएको छ। भुटानबाट छुट्टिएर नागाल्याण्ड भारतमा पनि गएकाले त्यहाँ पनि केही घर रहेको देखिन्छ तर त्यहाँ सम्पर्क स्थापित हुन सकेन। स्मरण रहोस् भुटान शाखा आठराई हाङपाङबाट छुट्टिएर गएको थियो। कालान्तरमा त्यहाँबाट केही मात्रामा परिवार झापामा पनि झरेका छन्। पछिल्लो जानकारी अनुसार हाल बेलायतमा पनि १३ घरधुरी फयङ साँबा रहेका छन्।

| **क्र.स.** | **भौगोलिक क्षेत्र** | **घरधुरी** |
|---|---|---|
| १ | नेपाल (ताप्लेजुङ, संखुवासभा, पाँचथर, सुनसरी, मोरङ, झापा, र ललितपुर | १४४ |
| २ | भारत (सिक्किम र असम) | ३० |
| ३ | भुटान (सन्तप्सा, सिराङतो, सिराङ) | ३० |
| ४ | वेलायत | १३ |
| | जम्मा | २१७ |

अध्ययनमा फयङ साँबाको जम्मा घरधुरी संख्या २१७ बढी एकीन भएको छ। रेकर्ड अनुसार फयङ साँबाको कूल जनसंख्या करिव ११५० रहेको छ।

तराईमा अघि औलो रोगको प्रकोप थियो। रोगको प्रकोप कम भएपछि अर्थात् वि.सं. २०२५ पछि फयङ साँबा नेपालको तराईमा झर्ने क्रम सुरू भएको हो। धरानमा गोरखा भर्ती केन्द्र स्थापना भएपछि फयङ साँबा परिवार सुनसरी, मोरङ झर्ने क्रम बढ्यो। हाल काठमाडौ उपत्यका र बेलायतमा गएर बस्ने क्रम चलेको छ।

भारतीय तथा वेलायती सेनामा जागिर खानेको आर्थिक अवस्था सुधार भयो। उनीहरू तराईमा घरजग्गा किनेर बस्न थाले। उनीहरूका सन्तान सुविधा सम्पन्न सहर धरान लगायत तराईका बजारमा बस्न थाले। क्रमसः पहाडबाट मधेस बसाई सर्ने क्रम बढ्यो। फयङ साँबा परिवार हाल धरान, विराटनगर, इटहरीलगायत पूर्वी नेपाल र ललितपुरमा छरिएर बसेका छन्। हाङपाङ र संखुवासभाका केही साँबा फयङ परिवार वेलायतमा पनि बसेका छन्। पछिल्लो जानकारी अनुसार हाल बेलायतमा १३ घर परिवार  फयङ साबा नेपालबाट बसाइँ सरेर बसेका छन्।

युवाहरूले विहेबारी गरेर प्रायः लिम्बू थरका युवती परिवारमा ल्याएका छन्। राई, मगर, तामाङ, नेवार जनजाति र अन्य जात पनि विवाह गरेर ल्याएको पाइन्छ। जेहोस्, नयाँ पुस्तामा आफ्नो जाति, संस्कृति परम्परा र देशप्रति माया छ। हाल नयाँ पुस्ता विभिन्न कारणवश विदेश पलायन भएर गएका छन्। उनीहरूले पनि वंशावलीलाई अध्यावधिक गर्ने काममा चासो ब्यक्त गर्दछन्।

संक्षेपमा, फयङ साँबा नेपालको पूर्वी जिल्लाहरू र  काठमाडौँ उपत्यकामा बसेका छन्। भारतको सिक्किम, असम, नागाल्याण्डमा पनि यिनीहरूको बसोबास छ। भुटान र बेलायतमा समेत यिनीहरूको

उल्लेख्य उपस्थिति रहेको पाइन्छ। अध्ययन अनुसार हालसम्म यिनीहरूको कुल जनसंख्या करिव ११५० देखिन्छ।

## ५.१५ बसाइँ-सराइ

फयङ साँबाको तराईमा बसाइँ सर्ने प्रवृत्तिको हेर्दा समुदायले कठोर मौसम र रोगब्याधीका कारण तराइमा हत्तपत्त कदम राखेनन्। बरू असम, भुटान, सिक्किम गए तर गर्मी र आलो रोगले गर्दा तराइ पहिले रोजाइमा परेन। २०२५ सालपछि जब तराईमा औलोको नियन्त्रण अभियान चल्यो तबपछि मात्र यो समुदाय नेपालको तराई क्षेत्रमा बसाइँ सर्न थाल्यो। धरानमा गोर्खा भर्ती केन्द्र स्थापना भएपछि उनीहरूलाई सुनसरी, झापा र मोरङ जान सजिलो भयो । तीमध्ये धेरै काठमाडौं उपत्यका र बेलायतमा बसोबास गरिरहेका छन्, जसले उनीहरूको अनुकूलन र बसोबास गर्ने क्षमता देखाउँछ।

भारतीय र बेलायती सेनामा काम गर्नेहरूको आर्थिक स्थितिमा पनि सुधार आयो। उनीहरूले तराई क्षेत्रमा सम्पत्तिमा लगानी गर्न थाले। उनीहरूका छोराछोरी सुविधासम्पन्न सहर धरानलगायत तराईका बजारमा बस्न थाले। नेपालका ताप्लेजुङ, पाँचथर, सङ्खुवासभा, झापा, मोरङ र सुनसरी जिल्लामा फ्याङ साम्बा परिवार छरिएर रहेका छन्। मेवाखोलामा फयङ साँबा थर उपाधि प्राप्त गरी आठराई हाङपाङ, संखुवासभा, पाँचथर, सिक्किम, आसाम, भुटान र बेलायतमा बसाइँ सरेका छन्। भुटान गएका केही फयङ साँबा पुनः फर्केर झापामा बसेका छन्।

उनीहरूको बसाइँसराइको समय केलाउँदा यो सामाजिक–राजनीतिक र भौगोलिक अवस्थासँग गाँसिएको पाइन्छ। जबसम्म तराईमा औलोको प्रकोप थियो, तबसम्म त्यहाँ बसाइँ सर्न असम्भव थियो। सन् २०२५ सालपछि औलोको प्रकोप कम भए पछि नेपालको

दक्षिणी मधेश क्षेत्रमा फयङ साँबाका २९ औं पुस्ता बसाइ सरेको आंकलन गरिन्छ। धरानमा गोर्खा क्यान्टोनमेन्ट सेन्टर स्थापना भएपछि फ्याङ साम्बाको अर्को बसाइँ सराइ लहर चलेको देखिन्छ। त्यसपछि हिमाली तथा पहाडी क्षेत्रबाट समथर भूमिमा यिनीहरूको बसोबास भएको थियो । सुनसरी, झापा र मोरङमा फयङ साँबा परिवार बस्न थाले।

भारतीय र बेलायती सेनामा जागिर खाएर आफ्नो आर्थिक स्थितिमा सुधार आएकाले तराई र सहरी क्षेत्रमा जमिन किनेर घर बनाएर बस्न थाले। उनीहरूले शहरमा घर र जग्गा किन्न थाले र उनीहरूका सन्तानहरू धरान र अन्य समृद्ध शहरहरूमा बस्न थाले। फलस्वरूप, विभिन्न व्यक्तिहरू पहाडबाट तराईमा बसाइँ सराइ गर्न आकर्षित भए। हुन पनि सहरी क्षेत्रहरूमा स्वास्थ्य सेवा सुविधा र शैक्षिक र रोजगारीका अवसरहरूको सम्भावना रहन्छ। हाल फयङ साँबाको ठूलो जनसंख्या धरान र बेलायतमा बसोबास गर्दछन् । पूर्वी नेपालका विराटनगर, इटहरीलगायत अन्य नगरपालिका तथा काठमाडौँ उपत्यकाको ललितपुरमा पनि यिनीहरूको उपस्थिति छ ।

हाल निकै ठूलो संख्यामा फयङ साँबा बेलायती सेनामा रोजगारीका कारण बेलायत बसाइँ सरेका छन् । सेनाबाट सेवानिवृत्त भएपछि परिवारसहित वेलायतमा बसाइँ सर्नेको संख्या हाल १३ घर पुगिसकेको छ।

आजभन्दा करिव ५० वर्षअघि मेवाखोला, हाङपाङ, संखुवासभा र पाँचथरबाट मानिसहरू रोजगारीका लागि सिक्किम, भुटान, आसाम र नागाल्याण्डमा जाने गर्दथे। फयङ सँबाका सदस्यहरू त्यही अवसरको खोजी गर्दै त्यहीँ बसोबास गरेका छन्। हाल त्यहाँ पनि फयङ साँबाको जनसंख्या पाइन्छ। यसरी जनसंख्याको बसाइँसराइमा वैवाहिक सम्बन्धले पनि भूमिका खेलेको छ।

# अध्याय ६ -विवेचना

## ६.१ पृष्ठभूमिमा काशी–सुमेर

वंशावली आरम्भ गर्न अघि किरातका पूर्वज काशी, सुमेरका सन्दर्भ बिना इतिहास अधुरो रहन्छ। किनभने भाषा विज्ञानले अध्ययनका क्रममा किरात जातिको विकास कहाँ कहिले भएको भनेर अनुमान गरेको छ।

काशी र सुमेर आस्थाबीचको सम्बन्धबारेमा भाषाविज्ञानले ब्याख्या गरिदिएको छ। काशी भनेको प्राचीन निकटपूर्व (टर्की) निवासी हुन् जसले बेबिलोन १६९५ देखि ईशापूर्व ११५५ सम्म कब्जा गऱ्यो। (Bryce, 2009) त्यहाँ यिनीहरूको सुमेर (सुमेर) सित रक्तमिश्रण भयो। (Pokhrel, 1998) सुमेर प्रभाविक किरात र काशी प्रभावित कश्यप, खस, शक आदि भए। यिनीहरू मध्य–एशिया (ताक्लामकान), भारतमा पुगेपछि त्यहाँ पनि यिनीहरू बस्ने स्थानलाई काशी भनियो।

किरात इतिहास तथा वंशावलीले किरात वंश काशी र सुमेर जाति भएको जनाउँछ। यी जाति एक आपसमा मिश्रित रहे तापनि दुवैको प्रभाव दुवैभित्र परेको देखिन्छ। तापनि मूल रूपमा नेपाल लगायतका हिमालयमा पहिले आउने किरात समूह काशी जाति वा खाम्बोङबा जाति हुन्। कालान्तरमा उत्तरबाट ताङसाङ्बा (मंगोल) र मुनाफेन (चिनियाँ तिब्बतेली) मिश्रण भएको किरात इतिहास र मुन्धुमले बताउँछ। (Chemjong, 19974; 2003a) यसरी किराती जातिको बहुल रहेको किरात देशलाई कालान्तरमा लिम्बूले जितेपछि लिम्बुवान बनेको इतिहास छ। यसरी किरातभित्र मिसिन पुगेका मंगोल र तिब्बतेली सांस्कृतिक रूपमा सुमेर प्रभाव पाइन्छ। (Pokhrel, 1998)

किरात हुँदै सेनबाट प्रारम्भ भएको फयङ साँबा वंशावलीमा पुर्खाहरूले सेन, राई पदवी धारण गरेका छन्। वंशावलीमा सेनेहाङ राईको नाम बारम्बार उल्लेख छ। उनीहरू जब लिम्बुवान र खम्बुवान क्षेत्रमा प्रवेश गरे तब उनीहरूले राई, लिम्बूमैत्री नाम र पदवी ग्रहण गरे।

## ६.२ किरात-सेन-साँबा वंश

नेपालमा सेन वंशको इतिहास जति दबाउन खोजे पनि स्थापित भइसकेको छ। मानवशास्त्रीय दृष्टिले यिनीहरू किरातबाट विकसित वंश हुन्। यिनीहरू पूर्वी नेपालदेखि पश्चिम नेपालसम्म फैलिएका छन्। देशका विभिन्न क्षेत्रमा विभिन्न विशेषता र इतिहास बनाएर सेन वंश प्राय अन्य जातिमा विलय भइसकेका छन्।

ईशापूर्व ८०० मा यलम्बरले काठमाडौँ उपत्यका विजय गर्नअघि किरात वंश हालको पर्सा जिल्लाको सिमाङगढ/ सिम्रौनगढमा थिए। यलम्बरले उपत्यकामा किरात शासन आरम्भ गरे भने बाँकी किरात वंश नेपालको पूर्वदेखि पश्चिमसम्म फैलिएर बसे। यिनीहरू सेन वंश वा राज्यका रूपमा देशका तराई र पहाडी क्षेत्रमा फैलिए।

सेन वंशको इतिहासमा दिल्लीका राजा गयासुद्दिन तुगलक (सन् १३२०-१३२५) को आक्रमणको प्रभाव परेको देखिन्छ। त्यसपछि पृथ्वी नारायण शाहको गोरखाविस्तार वा नेपाल एकीकरणको प्रभावले सेन राज्य र वंशलाई तहसनहस पारिदिएको इतिहास छ। जेहोस्, इतिहासले सेन वंशलाई निर्ममतापूर्वक मेटाउने प्रयास गरेको अनगिन्ति प्रमाणहरू इतिहासकारहरूले देखाएका छन्।

किरात राई लिम्बूमा विलय भएका सेन वंश मूलका किरात लिम्बू मध्ये केही वंशले आफ्नो वंशावलीमा आफू सेनवंशी भएको बताएका छन्। सेन चबेगु लिम्बु वंशावली (SenChobegu, 2007) तथा योङहाङ लिम्बू वंशावली (Yonghang, 2011) ले आफ्ना पुर्खा सेन वंश भएको

बताएका छन्। उक्त वंशावलीहरूले अभि सेनबाट क्रमसः पदम सेन, लारा सेन, फोरा सेन र चुडामणि सेनबाट वंश विकास भएको मानेका छन्। कतिपय वंशावलीले चुडामणि सेनका छोराहरू सेनेहाङ, साँबासेरेङ, सुरद सेन र मणि सेनबाट आफ्नो वंशावली आरम्भ गरेका छन्।

प्रस्तुत फयङ साँबा वंशावली २०८१ ले अभि सेनबाटै वंशावलीको खाका खिचेको छ। किनभने वंशावलीहरूमा आफू सम्बन्धित पुर्खाको नामावली आइसकेपछि त्यसलाई लत्याउँदा वंशावली अधुरै रहन्छ।

अभि सेनलाई यदि पहिलो पुरूष मान्ने हो भने चुडामणि सेन पाँचौँ पुस्ताक्रममा पर्दछन् भने सेनेहाङ, साँबासेरेङ, सुरदसेन तथा मणिसेन छैटौँ पुस्ताक्रममा पर्दछन्। फयङ साँबा वंशावलीमा अभि सेनदेखि पुस्ताक्रम आरम्भ गरी हालसम्म ३२-३३ पुस्ताक्रम पुऱ्याएको जनाएको छ।

चङबाङ साँबाले आफ्नो वंशवालीमा साँबासेरेङदेखि गणना गरेर हाल २८ पुस्ता चलिरहेको जनाएको छ। (Chongbang, 2009) उक्त वंशावलीलाई यदि अभि सेनबाट गणना गरेको खण्डमा पुस्ताक्रम ३३ पुग्दछ।

सेन वंशका अर्का किरात लिम्बू सेन चबेगु वंशावलीले मणि सेन (साँबासेरेङका भाइ) बाट वंशावली आरम्भ गरी हाल २७ पुस्तामा वंश चलेको देखाएको छ। उक्त वंशावलीलाई अभि सेनबाट गणना गर्ने हो भने ३२ पुस्ता चलेको देखिन्छ। (SenChobegu, 2007)

त्यसै गरी योङहाङ वंशावलीले मणिसेन (साँबासेरेङका भाइ) बाट वंशावली आरम्भ गरी हाल २९ पुस्ता चलिरहेको देखाएको छ। (Yonghang, 2011) उक्त वंशावलीलाई अभि सेनबाट गणना गर्ने हो भने ३३-३४ पुस्ता चलेको देखिन्छ।

सेनवंशी मणि सेनकै दरसन्तान लिङदेन परिवारले भने आफ्नो वंशावलीमा २२ पुस्ता मात्र देखाएको छ। (Lingden, 2010) तुलनात्मक हिसाबले लिङदेन वंशावलीमा ४-५ पुस्ताक्रम छुटेका छन्।

यसरी फयङ साँबा वंशावली २०८१ लाई सेन वंशबाट विकसित किरात लिम्बूका अन्य वंशावलीसित तुलनीय बनाउने प्रयास गरिएको छ।

फयङ साँबा लगायत सगोत्री वंशावलीले फयङका पुर्खा साँबा र साँबाका पुर्खा साराताप्पा बताएका छन्। (Chongbang, 2009) सारातप्पाका पुर्खा साँबासेरेङ सेनवंश भएको र उनी कोशी बराहक्षेत्रबाट उँभो मेवाखोला गएको मुन्धुम र वंशावलीले बताउँछन्। (Yonghang, 2011) बराहदेवका छोरा राजकुमार तुङदुङ्गेलाई साँबाहरूले आफ्नो पितृदेव मानेर कुलपूजा गर्दछन्। यिनै तुङदुङ्गे देवलाई सेन चबेगु वंशावलीले सेनवंशी राजकुमार बताएका छन्। SenChobegu, 2007)

यसबाट फयङ साँबाहरूको पुर्‍यौली थातथलो कोशीबराह क्षेत्र रहेको थाहा हुन्छ। सगोत्री योङहाङ, चबेगु सेन वंशावलीले बराहमाङ कोकोहामाङ त्यस क्षेत्रका प्रभावशील शासक भएको बताउँछन्। ती बराहक्षेत्र अर्थात् चौदण्डीका सेनहरू अघि सिम्रौनगढका थिए। अभि सेन, पदम सेन, लारा सेन, फोरा सेन र चुडामणी सेनको नाम ती वंशावलीमा उल्लिखित छन्। एक कालखण्डमा सिमाङऊढबाट आएका सेनहरू कोशी चौदण्डी हुँदै मेवाखोला तम्बरखोला पसेर लिम्बूमा विलय भए। उक्त कुरा वि.स. १८३१ मा गोरखाली र लिम्बुवान युद्धमा नूनपानी संभौतापूर्व वंशावलीको गहन अध्ययन गर्दा साँबा वा काशीगोत्रे लिम्बू र सेन वंश गोरखाली एकै रहेको खुलेको थिषो। (Chemjong,1974)

साँबा र सगोत्री वंशावली प्रकाशित भएका छन्। सगोत्री वंशावलीहरूले चुडामणि सेनका छोराबाट अर्थात् कोशी बराहक्षेत्रदेखि उँभो लिम्बुवान उक्लिएपछि वंशावली आरम्भ गरेका छन भने कसैले

मेवाखोलाका साँबा पुर्खा साराताप्पाबाट आरम्भ गरेका छन्। यसो गर्नाका पछाडि आ-आफ्ना धारणा र तर्क छन्।

माथि अध्ययनबाट के थाहा भयो भने मुन्धुम, वंशावली र इतिहासले साँबाका पुर्खा सेन वंश हुन्। हालसम्म के पनि थाहा भयो भने सिम्रौनगढका अभि सेन साँबा पुर्खा सम्बन्धित छन्। सेन भनेको विशाल मानव समूह हो जसबाट विभिन्न जाति जनजाति विकसित भएका छन्। तर साँबाका पुर्खा भनेका अभि सेन र उनका दरसन्तान हुन्। त्यसैले यो वंशावलीले उनैलाई फयङ साँबाका आरम्भका पात्र वा पुर्खा मानेर पुस्ताक्रम जोड्न अघि सरेको छ। यो अरू केही कारणले नभएर हालसम्म प्राप्त वंशावलीका प्रमाणका आधारमा गरिएको एक प्रयास मात्र हो।

फयङ साँबा मेवाखोलामा उत्पत्ति भएको तर मानव जातिको रूपमा नभएर एक जातिको रूपमा नयाँ नाम वा थरले चिनिएका मात्र हुन्। फयङ साँबाको माङ्गेना यक त्यहाँ रहेको छ त्यो सबैले मानेका पनि छन्। मुन्धुम, वंशावली र इतिहासले साँबाका पुर्खालाई मेवाखोलामा पुऱ्याइदिएको छ। इतिहास र मुन्धुमले नै उनीहरूको वंशको पदचिन्ह कोशीबराह क्षेत्र र सिम्रौनगढमा रहेको बताएका छन्।

## ६.३ ऐतिहासिक सिम्रौनगढ मोड

फयङ साँबाको इतिहास र सम्बन्धको लहरो वा वंशावलीलाई लिम्बुवानबाट सुरू गर्ने कि इतिहासले पहिल्याइदिएको सिम्रौनऊढबाट गर्ने? लिम्बुवानबाट वंशावली आरम्भ गर्ने आधार के हुन् यसले के फायदा र बेफाइदा हुन्छ? सिम्रौनगढबाट वंशावली सुरू गर्ने आधार के हुन् यसले के फायदा वा बेफाइदा हुन्छ? यसबारे विस्तृत चर्चा गर्दा लेख लामो हुन्छ। त्यसैले कुरा संक्षेपमा राख्दैछु।

लिम्बुवानभित्रबाट वंशावली आरम्भ गर्न सजिलो छ। भाषा संस्कृति र स्थानीय मुन्धुमले यसलाई  प्रसस्त आधार दिएर सहयोग गरेका छन्। यसबाट लिम्बू जातिको पहिचान जोडेर राजनीतिक लाभ प्राप्त गरिन्छ। तर यो वंशावली, इतिहास र मुन्धुमले देखाउँदा देखाउँदै नाताको लहरो खुम्च्याइएकाले आफैमा अपूर्ण हुन्छ। यस्तो ठूटे इतिहास मानवशास्त्रीय दृष्टिले पनि अधुरो अध्ययन मानिन्छ। थप अध्ययनको लागि सदा प्रेरित गर्दछ।

अर्कातिर सिम्रौनगढबाट अर्थात् अभि सेनबाट वंशावली आरम्भ गर्ने आधार पनि छन्। पहिलो कुरो त सेन चबेगु वंशावली, योङहाङ वंशावलीले सिम्रौनगढका सेन वंशसित साँबा लगायतका सेनेहाङहरूको सम्बन्ध देखाएको छ। यो दावीलाई पुष्टि गर्ने ऐतिहासिक आधार पनि छ। वि.स.१८३१ मा भएको नुनपानी सन्धिमा गोरखाली पक्षले लिम्बुवान पक्षका साँबा लगायतका काशीगोत्रेको वंशावली अध्ययन गरेको थियो। अध्ययन गर्दा साँबाका पुर्खा र गोरखाली सेनका पुर्खा अघि एकै रहेको पुष्टि भएको थियो। फलस्वरूप गोरखाली र लिम्बुवानबीच सम्झौता भएको थियो। यो महत्वपूर्ण ऐतिहासिक घटनाक्रमले साँबाको सम्बन्ध सिम्रौनगढका सेनसित देखाउँछ। त्यसैका आधारमा फयङ साँबा वंशावलीलाई सिम्रौनगढका सेन वंश अर्थात् अभि सेनसित जोडेर आरम्भ गरिएको हो।

यसो गरेमा फयङ साँबाको इतिहास नेपालको इतिहाससित जोडिन्छ। मानवशास्त्रीय दृष्टिले पनि यो बढी स्वीकार्य हुन्छ। नेपालको इतिहासले हिजो साँबालाई चिन्दथ्यो यसो गरेमा फयङलाई पनि समेट्दछ। फराकिलो कालखण्डका महत्वपूर्ण घटनाक्रमसित गाँसिएका वंशावली नेपालको इतिहास अध्ययन गर्दा भविश्यमा सहयोगी सामग्री बन्न सक्दछ। यसबाट लिम्बुवान राजनीति गर्नेलाई केही असहज हुन्छ किनभने तिनीहरू गैरलिम्बुवान क्षेत्र र विषयवस्तुका विरोध गर्ने गर्दछन्। जुन कुरा सचेत पाठकले बुझ्न जरूरी हुन्छ।

मेवाखोलामै इतिहास बिसाएर वा टुक्र्याएर फयङ साँबा भए यताका वर्तमान मात्र देखाउन खोज्नु अवैज्ञानिक सोँच हो। फेदबिना टुप्पामात्र देखाउने कामले वंशवृक्ष तयार हुँदैन। वंशवृक्षमा जसरी रूखमा फलफूल पात, हाँगा, फेद र जरा हुन्छन् त्यस्तै गरी मानवीय विकासक्रमलाई विस्तारमा देखाउन सक्नुपर्दछ।

खै जरा त देखिँदैन भनेर कुनै बोटलाई काटेर रोपेमा त्यो सर्दैन मर्दछ। कुनै एक स्थानीय मुन्धुम मात्र पक्रेर ज्ञान विवेकको विर्को बन्द गर्न सकिदैन। हामीले मुन्धुम र ज्ञानलाई विश्वास गर्ने हो श्रद्धा गर्ने हो माया गर्ने हो तर त्यसो भन्दैमा त्यसैमा अन्धविश्वासी बन्दै आँखा चिम्लेर लाग्नु हुदैन। ज्ञान र विवेकको क्षितिजलाई फराकिलो र खुला राखेर ज्ञानको भण्डार भर्दै जानुपर्दछ। अध्ययन गर्दा आफ्नो भाँडा जत्रो छ त्यति नै पानीरूपी ज्ञान प्राप्त हुन्छ। यहाँ भाँडा भनेको मन हो जिज्ञाशा हो त्यसलाई सदा खुला, सकारात्मक र सिर्जनशील राख्नुपर्दछ तबमात्र हामी सत्यनिकट पुग्नसक्छौँ।

भोटबर्मेली भाषा परिवारमा पर्ने किरात लिम्बू भाषामा गाइएका मुन्धुमले भारोपेली भाषाका नाम र ज्ञानलाई चिन्दैन र पूर्वाग्रह पनि राख्दछ। त्यसैले मानव इतिहास र विकासक्रम अध्ययन गर्ने क्रममा मुन्धुमलाई पुनब्र्याख्या (डिकोड) र विश्लेषण गर्दा हामीले सावधानी अपनाउनु पर्दछ।

आज किरात लिम्बू समुदायमा आफ्नो थरको उत्पत्तिस्थल वा माङ्गेना यकलाई नै अन्तिम सत्य मानेर वंशावली र इतिहास लेख्ने होडबाजी छ। त्यस्तो काम नराम्रो भनेको होइन तर त्यो अपुरो मानिन्छ। हामीले भरपर्दो ज्ञान दिन वा इतिहास लेख्न सक्यौ भने मात्र भावी सन्ततीले हामीलाई सम्झनेछन्।

मेवाखोलामा रहेको ऐतिहासिक साँबा थातथलोको महत्व आफ्नै ठाउँमा छ। त्यसको संरक्षण र सम्बर्धन हुनुपर्दछ। तर त्यसो भन्दैमा

साँबापूर्वका पुर्खाका इतिहास र थातथलोलाई अनदेखा गर्न मिल्दैन। अरू केही गर्न नसके पनि ऐतिहासिक घटनाक्रमलाई चिन्नुपर्दछ र वंशावलीलाई इतिहाससित जोडेर हामीले इतिहासको गुन तिर्नुपर्दछ।

चङबाङ साँबा वंशावली तथा फयङ साँबा उत्पत्ति मुन्धुमअनुसार उनीहरूका पुर्खा कोशीबराह क्षेत्रबाट बँदेल सिकार गर्दै मेवाखोला पुगेका थिए। नाल्बोमा बँदेल सिकार गर्ने पुर्खा साराताप्पा/ श्राताप्पा हुन्।

चङबाङ साँबा वंशावलीमा सेनेहाङ राई पाइन्छ। योङहाङ वंशावली (२०११) मा सेच्छेने सेनेहाङ तथा सेन चबेगु लिम्बू वंशावली (२००७) मा साँबासेरेङ समेत उल्लिखित छन्। ती सबै सेन वंशी हुन्।

१३८८ सालमा सेनहरू चौदण्डी चतराबाट साँगुरी हुँदै संगमटार धनकुटा पुगे। उनीहरू सिमराघाट हुँदै मेवाखोला पुग्दा तीन पुस्ता बितेको वंशावलीबाट थाहा हुन्छ। साँबासेरेङ (पुस्ताक्रम ६) पछि साराताप्पा (पुस्ताक्रम ९) ले मेवाखोला पुगेर साँबा वंश चलाएको वंशावलीले जनाउँछ।

सेन वंशका साँबासेरेङ साँगुरी उक्लेको १३८८ साललाई आधार मान्दा ७०० वर्ष अघि तिनका दरसन्तानले साँबा थर धारण गरेको हुनुपर्दछ।

यसै गरी फयङ उपथर धारण गरेको अवधि पनि मूल्यांकन गर्न सकिन्छ। फयङ उदभवदेखि हालसम्म १२ पुस्ता गणना गर्ने हो भने मोटामोटी ३०० वर्ष हुन्छ। अर्थात् फयङ उपथर चलेको ३०० वर्ष हुनसक्छ।

संक्षेपमा फयङ साँबा चलेको मोटामोटी ७०० वर्ष मान्न सकिन्छ। अभि सेनबाट गणना गरिएको फयङ साँबा वंशावली २०८१ लाई करिव ८०० वर्षको पुस्ताक्रम मान्न सकिन्छ।

## ६.४ सेनबाट स्रेङ/ सेरेङ/ सेनेहाङ अपभ्रंश

वंशावलीका फयङ साँबाका पुर्खा सेरेङ/ स्रेङ/ श्रेङ/ सेनेहाङ बताइएका छन्। चङबाङ पुङ मुन्धुम तथा फयङ मुन्धुमले आफ्नो एक पुर्खा सेरेङ साम्माङ भनी उल्लेख गरेको छ। (Chongbang, 2009; SenChobegu, 2007; PhyangMB, 2019) चङबाङ साँबा, फयङ साँबा निकटवर्ती भाइ भएकाले उनीहरूका पुर्खा सेरेङ/श्रेङ देव साँबा हुन्।

चङबाङ साँबा वंशावलीबाट चङबाङ साँबालगायत फयङ साँबाको पुर्खा सेनेहाङ अर्थात् सेन हुन् भन्ने जानकारी पाइए तापनि फयङ र सेरेङ गाँसिएका स्पष्ट वंशवृक्ष वंशावलीमा उल्लिखित छैनन्। यद्यपि, चङबाङ साँबाको पुङ मुन्धुमले भने चङबाङ र सेरेङ साम्माङ आपसमा सम्बन्धित भएको बताउँछ।

यसै गरी फयङ मुन्धुमले सेरेङ साम्माङ आफ्ना पुर्खा भएको जनाउँछ। यस आधारमा सेरेङ साम्माङ वा सेरेङ तथा चङबाङ र फयङ सम्बन्धित भ्राता हुन् भन्ने संकेत पाइन्छ।

उल्लिखित सेरेङ–चङबाङ–फयङ सम्बन्धलाई समर्थन गर्ने एक भरपर्दो स्रोत किरात सेनेहाङ लिम्बू वंशावली हो। (Chongbang, 2009) उक्त वंशावली अध्ययन गर्दा सेरेङ/ स्रेङ र फयङ साँबाबीच अन्तःप्रजनन अनुचिन्ह फेला पर्दछन्। उक्त वंशावली अनुसार सेन, सेरेङ, चङबाङ, फयङ रक्तअनन्या भ्राता हुन्।

वंशावलीजन्य वंशवृक्ष तथा ऐतिहासिक वंशवृक्षाका आधारमा सेरेङ/ स्रेङ भनेको सेनकै अपभ्रंश रुप हो। यसबाट सेनबाट सेरेङ/ स्रेङ लगायत साँबा विकसित भएको प्रष्ट हुन्छ। अतः साँबाका पुर्खा सेन वंश हुन्। यसलाई विस्तारमा अध्ययन गर्न सकिन्छ।

किरात सेनेहाङ थेगिम लिम्बू वंशावली तथा इतिहास (वि.सं. २०६४) ले विभिन्न थरीका लिम्बूका उत्पत्ति बारेमा महत्वपूर्ण जानकारी

दिएको छ। सेन थेगिम लिम्बू वंशावलीले आफ्ना पुर्खा पहिल्याउने क्रममा आफू सेनवंशी अभि सेन (उद्भिम सेन) को दरसन्तान भएको जनाएको छ। अभि सेनपछि पदमसेन, लारासेन, फोरासेन र चुडामणि सेन भए। चुडामणि सेनका चार सन्तानमा जेठा सेन्सेनेहाङ्ग/ सेनेहाङ, माइला साँबासेन/साँबासेरेङ, साइँला सुरदसेन र कान्छा मणिसेन थेगिमहाङ भए। (SenChobegu, 2007)

किरात लिम्बू सेनेहाङ लिम्बू वंशावली (वि.सं. २०६४) अनुसार जेठा सेन्सेनेहाङ्ग सिदिइङहाङ पोक्लाबाङ गइबसे र उनीबाट पछि माङधुम्बो, इङ्वारम, सेन थेबे थरका लिम्बू उदविकसित भए। माइला साँबासेन (सावासेरेङ/ साइतहाङ) मेवाखोला गइबसे। उनीबाट पछि स्रेङ, साँबा, मादेन, लाबुङ, चोङबाङ, मुदेनहाङ, तङदप्पा, मिफेङगेन, ताम्मादेन र सुलुङदिन थरका लिम्बू उदविकास भए। (SenChobegu, 2007)

त्यसैगरी साइँला सुदर सेनबाट पछि हेम्ब्या/हेम्भ्या, इथिङ्गु, सिंगु, र थुप्पोको थेबे विकसित भए। कान्छा मणि सेनबाट पछि योङहाङ, नेम्बाङ, चोबेगु, हाङसरुम्बा, केरुङ र थोक्लिहाङ थरका लिम्बू विकसित भए। उक्त वंशावलीअनुसार योङहाङको एक हाँगो पछि सेम्बु र लिङदेन थरका लिम्बूमा परिणत भए। चोबेगुबाट पछि फेजोङ र याङदेम्बा थरका लिम्बू उदविकसित भए। (SenChobegu, 2007)

मणि सेनका चार सन्तान चौदण्डी कोशीबराह क्षेत्रबाट साँगुरी नाघेर धनकुटा जिल्लाको बोधे गाविस वडा नं. ५ मा पर्ने तम्बरखोलाको किनार सधाममा भन्ने स्थानमा गइबसे। पछि छुट्टिने बेलामा सम्झनास्वरुप चारभाइले एकेक ढुङ्गा गाडेर छुट्टिए, जसलाई हाल हाङसेनलुङटार (अपभ्रंश भएर हाङसेनमोरङटार) भनिन्छ। (SenChobegu, 2007)

त्यसबेला गाडिएका ती चार ढुङ्गामध्ये तीनओटा ढुङ्गा वि.सं. २०१२ सालमा विधर्मीहरूले नष्ट गरिदिए भन्ने बुढापाकाले भनाइलाई उक्त वंशावलीमा उल्लेख गरिएको छ। प्रमाणस्वरुप वंशावलीले वि.सं. १९९७

सालतिर लेप्टेन जसपति चोबेगु थेगिमहाङ लिम्बू, सुब्बा दगलसिंह सेन चोबेगु थेगिमहाङ लिम्बू र सुब्बा मानबहादुर चोबेगु थेगिमहाङ लिम्बू मिलेर तयार पारिएको हस्तलिखित प्रथम वंशावली अघि सारिएको छ। वंशावलीमा बराहक्षेत्रमा रहेको सेन वंशको भग्नावशेष महलको खण्डहरको चित्र र हाङसेनलुङटारमा ४ देखि ६ फुट अग्ला चार ढुङ्गाबारे सचित्र जानकारी दिइएको छ। (SenChobegu, 2007)

चुडामणिका सन्तान माइलो भाइ साँबासेन (साँबासेरेङ/साइतहाङ) शब्द वा ध्वनिलाई विश्लेषण गर्दा थाहा हुन्छ कि 'साँबासेन' संज्ञामा 'साँबा' र 'सेन' शब्दको योग छ। सम्भवतः माइला भाइ कार्यदक्षतामा साम्बा (फेदाङ्बा) थिए कि भन्ने आशय पनि लुकेको देखिन्छ। जेहोस्, ऊ सेनवंशी थियो भन्ने कुरा नाममा रहेको सेन संज्ञाले पनि जनाउँछ। साँबासेन र साँबास्रेङ एकै हो भन्ने कुरा वंशावलीले कोष्ठमा जनाएको "साँबासेन (साँबासेरेङ)" ले स्पष्ट गरिदिएको छ। (SenChobegu, 2007)

अतः 'साँबासेरेङ' नाम थरभित्र 'साँबा' र 'सेरेङ' शब्दहरूको योग रहेको स्पष्ट हुन्छ। साँवासेरेङको यही साँबा ध्वनि नै उनका दरसन्तानका साँबा थरमा सरेको विश्लेषण गर्न सकिन्छ। यस आधारमा स्रेङ थर पनि साँबाका रक्तअनन्या भ्राता भएको नामबाटै सिद्ध हुन्छ।

## ६.५ साँबा भूअमिधा

वंशावलीमा उल्लिखित किरात लिम्बुवानमा सेन वंशको आगमन भएको घटनाक्रम चौधौँ शताब्दीको हो। लिम्बुवान गठन छैटौँ शताब्दीतिर भइसकेको थियो। लिम्बूवान गठनताका मेवाखोला, साँबाको नाम इतिहासमा उल्लेखित छ। यसबाट सेन वंशी साँबासेरेङभन्दा अघि नै साँबा स्थान भूअमिधा र जातीय थरको नामकरण भएको थाहा हुन्छ।

साँबा भूअमिधा र जातीय पहिचान जनाउने साँबा थरको विकास छैटौँ शताब्दी भन्दा अघि नै भएको किरात इतिहासले जनाउँछ। साँबा

ठाउँ र थरको विकास हुन निकै लामो समय लाग्दछ। त्यसकारण कुन समयमा कहाँबाट आएका किरात अग्रजबाट उक्त साँबा भूअमिधा र थर रहन गएको भन्ने तथ्य पहिल्याउन ऐतिहासिक स्रोत खोतल्नु पर्दछ।

भारतीय इतिहासकार पाण्डेअनुसार भारतमा कुसान आक्रमणपछि सन् ३४०–४५५ तिर त्यहाँका हुण, सेन, लिच्छवी हिमालयमा पसे र ती किरात लिम्बू भए। (Pandeya, 2013) अर्का एक किरात सेन लिम्बू लेखकअनुसार कुसाण आक्रमणपछि सन् ८९ तिर नागा, सेन र लिच्छवी किरात देश पसे र ती किरात लिम्बू भए। (SenChobegu, 2007)

यिनै ऐतिहासिक तथ्यलाई टेकेर हामी माथिको सवालको जवाफ भेट्न सक्दछौँ। पहिलो शताब्दीदेखि पाँचौँ शताब्दीमा माथि उल्लिखित हुण, सेन, लिच्छवी, नागा वंशबाट मेवाखोला तम्बरखोला प्रवेश गरेको संकेत मिल्दछ। त्यही आधारमा तिनीहरूमध्येबाट साँबाहाङ तथा साँबा थर र भूअमिधा रहन गएको अनुमान गर्न सकिन्छ। साँबाहाङबाट साँबा गाउँ भूअमिधा चलेको अनुमान गर्न सकिन्छ।

## ६.६ साँबा र जनै

किरात लिम्बूका कुलदेवता महादेव शिव भनी इतिहासकारहरूले बताएका छन्। (Mabohang and Dhungel, 1990)

नाङ्गो आँखाले हेर्दा पनि लेखकले देखेका घुमेका मेवाखोला, तम्बरखोला, हाङपाङ, संखुवासभालगायतका क्षेत्रमा प्रसस्त मात्रामा शिवालय थिए। ती शिवालय र गुठीहरू आज हाम्रै आँखाका सामु मासिएका छन्।

यसै सन्दर्भमा मेवाखोला माद्यमिक विद्यालयका स्थानीय शिक्षक तथा संस्कृतिका जानकार मोहनचन्द्र फयङ साँबाले मेवाखोलास्थित सुन्दर प्राकृतिक झरना फङफङे झरना नजिक रहेको ओढारभित्र शिवलिङ्ग, त्रिशूल भएको जानकारी लेखकलाई दिएका थिए। (M.C.

Phyang, personal communication, November 1, 2019) उक्त शिवलिङ्ग साँबाहाङ वंश वा साँबासेरेङ सेन वंशले स्थापना वा संरक्षण गरेको विश्वास गरिन्छ। किनभने फङफङ्गे झरना जसलाई लिम्बू भाषामा फङफङदेन भनिन्छ, उक्त क्षेत्र साँबा जातिको ऐतिहासिक उदगम स्थल हो। उक्त पवित्र स्थानमा शिवलिङ्ग पाइनुले साँबा जातिको कुलदेवता महादेव शिव/ थेबासाम/ थेबाहाङसाम हुन् भन्ने जनाउँछ।

वि.सं. १८६५ मा गिर्वाणयुद्ध विक्रम शाहले लिम्बुवानका काशी वंशका लिम्बूलाई उप्रान्त किपट नदिने परिपत्र जारी गरे। आफ्नो अधिकार खोसिने भयले लिम्बुवानका लिम्बू जाति उद्वेलित भए। फलस्वरुप  वि.सं. १८६८ सालमा चारैतिरका काशीगोत्रे, ल्हासागोत्रे लिम्बू भेला (चुम्लुङ) बसी बरु काशीगोत्रेले लगाएको जनै त्याग्ने तर उनीहरूले किपट नछोड्ने निर्णय गरे। त्यसबेलाको निर्णयानुसार तीन ढाकर जनै तम्बरखोलामा बगाइदिए। (Ingnam, 2012) त्यसबेलाको बसेको भेलाले गरेको सहमति अनुसार उप्रान्त काशीवंश तथा ल्हासावंशबीच बिहेबारी चलाउने निर्णय समेत भएको थियो।

वि.सं. १८६८ मा काशीगोत्रे लिम्बूले तम्बरखोलामा जनै बगाएको घटनाक्रमलाई १८३१ सालमा गोरखाली र लिम्बुवानबीच भएको नुनपानी सन्धिसित जोडेर हेर्नुपर्दछ। हिन्दु प्रभावित गोरखाली मगर, सेन, खसले शरीरमा जनै भिर्दथे। काशीगोत्रे साँबा लिम्बूले पनि हिन्दु प्रभावले जनै भिर्ने गरेको तथ्य नुनपानी सन्धि घटनाक्रममा वंशावली अध्ययन गर्दा मगर र साँबा सगोत्री पाइएको भेद खुल्दछ। काशी वंश लिम्बूले ल्हासागोत्रे लिम्बूसित एकतावद्ध भइ आफ्नो पनि किपट प्रथा कायम राख्नलाई मात्र आफ्नो जनै फुकालेर तम्बरखोलामा फालिदिएको घटनाक्रमले देखाउँछ। (Ingnam, 2012)

जनै भिर्ने संस्कार किरात लिम्बू र राईमा नचलेको होइन। अझै पनि तागाधारी किरात राई लिम्बू छन्। किरातका अर्को एक सदस्य दनुवार

पनि तागाधारी छन् । सप्तरीका दनुवारले आफू तागाधारी भएको दाबी गर्दछन्। उनीहरू गलामा बेरिएको जनै देखाउँदै आफू आर्षत्व (घोडा धर्म) मा गौरव बताउँछन्। अरुले भलै दनु (दानव) माने पनि ती आफ्ना लागि राजर्षि हुन्। (Pokhrel, 1998)

काशीवंश पृष्ठभूमिका आधारमा राई, लिम्बूलाई शैव वा सनातन धर्ममा समेटिएको हो। फयङ साँबा वर्णाश्रम ब्यवस्था वा जातिपाति प्रथामा विश्वास नगर्ने जाति हो। यो जाति शैव र शैव प्रभावित वोन धर्ममा विश्वास गर्दछ। उसले मातृशक्ति वा प्रकृति वा युमा साम, पितृशक्ति वा थेबा साम सबैको सेवा गर्दछ। हिन्दू शब्द अहिले धार्मिक भन्दा बढी राजनीतिक बनेको र जातिपाति वा छुवाछुत यसको विशेषता बनेको सन्दर्भमा फयङ साँबा आफू खुलेर हिन्दू भन्न रूचाउँदैनन्। यद्यपि उनीहरूको मुन्धुममा ओम् तथा राम जस्ता शब्द छन्। आफू ऋषिमुनिका सन्तान भएको गौरवशाली मुन्धुम पढ्दछन्।

## ६.७ हिन्दु र लिम्बू

२०४७ सालपछि नेपालका किरात लिम्बू समुदाय आफूलाई गैरहिन्दु जनाउँदै दशैँ बहिस्कार गर्ने लहर चलेको छ। पहिचानमा अहिन्दु तथा दशैँ बहिस्कारको क्रम चलेको आज तीन दशक बढी भैसकेको छ। यस अवधिमा यसबारे गहन छलफल भएका छन्। विवादका क्रममा यसलाई रणनीतिक हतियार बनाउने जातीय राजनीतिक समुह पनि देखिए। त्यसैले विषयवस्तुको वास्तविकता ओझेलमा पर्न गयो भने जातीय सवाल अतिरञ्जित तरिकाले प्रस्तुत हुनथाले।

कुरोको चुरो थाहा पाउन पहिले हिन्दु र त्यसपछि दशैँ शब्दको अर्थ बुझ्न जरूरी छ। यहाँ यी शब्दको आ-आफ्नो बुझाइले गर्दा पनि छलफल बहकिएको छ। हिन्दु शब्दको व्युत्पत्ति पर्सियन भाषाको सिन्धु शब्द जनाउने गरी भएको थियो। सिन्धवासीलाई पर्सियाली हिन्दु भन्दथे। यो

हिन्दु शब्दले आरम्भमा धर्म नभएर भौगोलिक वा जाति विशेष जनाउँथ्यो। त्यसबेला सिन्ध निवासी हिन्दु जाति मूलतः तीन प्रकारका आस्थामा विश्वास गर्ने गर्दथे। पहिलो थरीका जनुसमूह शिव अर्थात् सनातनमा आस्था गर्दथे, जसको अर्थ हो, सत्य अर्थात शिव दर्शन। दोस्रो आस्था थियो शाक्त अर्थात शक्ति वा प्रकृति। तेस्रो आस्था वैष्णव थियो जसले अवतारवाद र मोक्षमा विश्वास गर्ने गर्दथ्यो। भारतमा लामो कालसम्म ती तीन प्रकारका आस्था वौद्धपूर्व प्रचलित थिए। (Khatri, 1987)

भारतमा बौद्ध धर्मको आगमन र मुसलमान धर्मको आक्रमण भएपछि यी पुराना धर्महरू चिल्लबिल्ल अवस्थामा पुगे। (Sastri, 1940) सत्रौ शताब्दीको आरम्भमा भारतमा जब पश्चिमेली खास गरी बेलायती व्यापारीको प्रवेश भयो। समय बित्दै जाँदा उनीहरूले भारतलाई कब्जा गरे। भारतमा बेलायती राज चलेपछि उनीहरूको प्रशासन चल्न गयो। त्यसबेला लगत लिन वा सरकारी कामकाज चलाउन बेलायतीहरूले सन् १७५७ देखि १९४७ को शासनकालमा भारतलाई ईण्डिया नामाकरण गरे। (Pandey, 2023) उनीहरूले धार्मिक सवालमा मुसलमान, इसाई धर्म बाहेकका धर्मलाई हिन्दु धर्म भनिदिए। (Gauri, 1998) जसानुसार आदिवासी तथा परम्परागत शैव, शाक्त र वैष्णव धर्म तथा बौद्ध धर्मलाई एकमुष्ठ हिन्दु धर्म भनियो। जसको दूरगामी प्रभाव भारत, नेपालमा जनस्तरमा परेको छ। वास्तवमा हिन्दु धर्म नामाकरण धर्मशास्त्रको पृष्ठभूमिमा नभएर बेलायती प्रशासनिक वा राजनीतिक प्रयोजनका लागि प्रयोगमा ल्याइएको थियो। अतः राजनीतिक हिसाबले हिन्दु एक भारतीय औपनिवेशजन्य संज्ञा हो।

बेलायती सत्ताले आदिवासी तथा परम्परागत भारतीय धर्महरूलाई एकमूष्ठ हिन्दु धर्मले बोलाउँदा शैव, शाक्त र वैष्णव दर्शनलाई एकिकृत रूपमा हिन्दु धर्मका रूपमा ब्याख्या गर्ने परम्पराको थालनी भयो। यसले

किरात समुदायको शिव आस्था पहिचानलाई प्रभावित तुल्यायो। (Danielou & Gabin, 2003)

जसरी शिव दर्शनमा लिङ्गको परिकल्पना गरिन्छ तब योनीको अपरिहार्यता हुन्छ। त्यसैले शिव दर्शनले योनी वा प्रकृतिलाई शक्ति वा मातृत्व तत्वका रूपमा अवलम्बन गरेको छ। त्यसैले शिवको परिकल्पना गर्दा लिङ्गा साथै योनी वा शिवका साथै पार्वति वा शंकरका साथमा उमाको परिकल्पना गरिन्छ। (Danielou & Gabin, 2003) यसै सिलसिलामा किरात लिम्बूले मान्ने थेबा र युमालाई अरूले शंकर र उमा वा शिव र पार्वतीका रूपमा चिन्दछन्। भित्री बुझाइ (इमिक दृष्टिकोण) र बाहिरी बुझाइ (इटिक दृष्टिकोण) मा रूप फरक भए तापनि सारमा ती नाम समान र तुलनीय छन्।

यहाँ बुझ्नु पर्ने अर्को कुरो लिम्बू शब्द धनुधारी जनीत जातिय शब्दले सुरूमा कुनै जातिविशेशलाई जनाए पनि कालान्तरमा दश लिम्बुवान गठन भएसंगै यो संज्ञाले राज्यका सबै जातजातिलाई लिम्बुवानवासी वा लिम्बू राष्ट्र जनायो। त्यसैले लिम्बू शब्दले आजकल जातीयता जनाए पनि यो शब्दले एउटा राष्ट्र बुझाउने अर्थ पनि बोकेको छ। त्यसैले लिम्बू एक राजनीतिक शब्द वा राष्ट्र हो। लिम्बूका अग्रज किरात सम्बन्धमा मुन्धुमले किरात राष्ट्रको बनावट खाम्बोङ्बा, ताङसाङ्बा र मुनाफेन तीन थरीका जातिबाट बनेको जनाएको छ। (Chemjong, 2003c) पं. भागव दत्ता अनुसार किरात जातिको ऐतिहासिक पतन देवासुर सङ्ग्रामपछि भएको थियो। उनी अनुसार किरात अर्थात् असुरभित्र हैहय, शक, यभन, खम्बोज वा खाम्बोजा, किरात, पल्लव र परद जाति पर्दछन्। (Datta, n.d., p106)

यसैले लिम्बू समुदायभित्र विविधता छ। खाम्बोङ्बा वा काशीवंश शिव दर्शनमा आस्था गर्दछन् भलै कसैले हिन्दु भनोस्। ताङसाङ्बा वंश वा जाति जीववाद र आत्मवादमा आधारित बोन धर्ममा आस्था गर्दछन् फलस्वरूप उनीहरू प्रकृतिपूजा, आत्मा वा पितृपूजा र धामी वा

फेदाङमा विश्वास गर्दछन् भलै कसैले उनीहरूलाई बोन वा प्रकृतिपूजक भनोस्। यसै गरी मुनाफेन वंश तिब्बतमा विकसित बुद्ध बोन अर्थात यूमा धर्ममा विश्वास गर्दछन भलै उनीहरूलाई कसैले बौद्ध बोन वा इसाई भनोस्। यहाँ वंश भनिए पनि अब यो आस्था वा प्रभावमा परिणत भइसकेको छ। वंशावलीबाट हेर्दा कतिपय खाम्बोङ्बा वंश मुनाफेनजनित युमा धर्ममा आस्था गर्ने गर्दछन्।

हिन्दु शब्दलाई सन्दर्भ अनुसार नबुझ्दा समस्या उत्पन्न भएको छ। भारतीय औपनिवेशजन्य धार्मिक हिन्दु शब्दभित्र शैव मतावलम्बी आदिवासी किरात पहिचान पनि परेको छ। किरातलाई शाक्त र वैष्णवसहितको ब्राम्हणवादी, वर्णव्यवस्थावादी हिन्दुका रूपमा बुझ्यौ भने हामो वास्तविकता भन्दा टाढा पुग्दछौँ। ढाँचागत आधारमा उनीहरू हिन्दु भन्नाले शैव मतावलम्बी हुन्। अर्कातिर लिम्बू भन्नाले जातीय लिम्बू मात्र नभएर उनीहरू लिम्बुवानजन्य राष्ट्रिय पहिचान वा राष्ट्रबोधक पदावली पनि हुन्। यी शब्दहरूको प्रयोग र ब्याख्यामा समय र सन्दर्भ अनुसार फरक अर्थ वा बुझाइ भेटिन्छन्। फलस्वरूप आँखा चिम्लेर कुनै वस्तु छामेर आकार बताए जस्तो विवाद चलिरहेको छ।

ऐतिहासिक तथ्यका आधारमा किरातभित्र कुनै एक जात मात्र हुँदैन, बहुजाति हुन्छन्। लिम्बू भनेको पनि कुनै एक जात नभएर मिश्रित जाति भनेर बुझ्नुपर्दछ। हामीले किरात र लिम्बू संज्ञालाई जाती विशेषका रूपमा मात्र होइन सभ्यता पार गरिसकेका राष्ट्र भनी बुझ्नुपर्दछ। राष्ट्र भनेको जातीयता मात्र नभइ विविध सांस्कृतिक, धार्मिक र भाषागत संमिश्रण हुन्। त्यसैले लिम्बूबीच भाषिक, धार्मिक, र संस्कृति विविधता पाइन्छन्। त्यसमाथि वर्तमान खुला समाजमा कुनै पनि जातिका सदस्यले माथिका आयाममा आफूलाई मन पर्ने कुनै धर्म वा संस्कृति वा भाषामा आवद्धता जनाउने छुट पनि छ।

यसकारण जातीय संकीर्णताले अन्तरजातीय मात्र नभइ स्वजातीय सहमतिबाट समेत टाढा राख्दछ। जातीयतिभित्र लुकेको राष्ट्रभाव भुल्न हुँदैन।

## ६.८ लिम्बू र दशै

लिम्बू जातीय शब्द मात्र नभएर एक राष्ट्र भएको चर्चा माथि गरियो। अब दशैँको पनि संक्षेपमा विवेचना गरौँ। दशै शब्दको शाब्दिक अर्थ हो दश दिनसम्म धुमधाम रूपमा कुनै पर्व मनाउनु। इतिहासअनुसार नेपालमा पहिले विभिन्न आदिवासी जनजाति, बौद्ध तथा आर्य संस्कृतिलाई समेटेर वर्षमा चारवटा दशैँ मनाइन्थ्यो। माघ, चैत, साउन र असोज महिनामा विभिन्न जात जातिले दशैँ मनाउँथे। जस्तै किरात लिम्बूले माघमा उँधौली, मंसिरमा न्वाँगी, साउनमा उँभौली भव्य रूपमा मनाउँछन् त्यो उनीहरूको दशैँ पर्व हो। (Manandhar, 20202)

कालान्तरमा शरद याममा बडादशैँ र वसन्तमा चैते दशैँ मनाउन थालियो। पहिले प्रकृति पूजा, कूल पूजा वा पितृ पूजाका रूपमा मनाइने दशैँ पर्वलाई अब दुर्गा पूजा अर्थात् शक्ति पूजाका रूपमा मनाउन थालियो। विभिन्न राज्यका सैनिक बल वा दुर्गमा स्थापित शक्ति वा देवीलाई दुर्गा सम्झेर शक्तिको आराधना गर्दै दशैँ मान्न थालियो। (Manandhar, 20202)

दशैँलाई साहित्यकारहरूले रामायण, महाभारतसित जोडेर ब्याख्या गर्न थाले। तब सुर र असुरको चर्चा हुन थाल्यो। आर्य प्रभावित शासकवर्ग आफूलाई सुर र विरोधीलाई असुर नामले पुकार्न थाले। रेडियो नाटक वा टेलिभिजन श्रृङ्खलामा अनार्यलाई राक्षस वा खलनायकका रूपमा प्रक्षेपण गरियो। यसरी निरन्तर विजय र पराजयको रागबीच देवत्वकरण र दानवीकरण झल्काउने हुँकारलाई सत्ताले दमनकारी रणनीतिका रूपमा अघि सारेपछि २०४७ सालमा आदिवासीको धैर्यको बाँध टुट्यो र उनीहरूले दशैँको विरोध गर्न थाले। यसै त रैथाने जातिका किपट खोस्ने

शासकले नेपाल एकीकरणमा पराजित पक्षलाई शासन प्रणालीमा समावेश गराउनु त कता हो कता साहित्यकार तथा इतिहासकारमार्फत् एकीकरणमा पराजित पक्षको उछितो काड्ने साहित्य सिर्जना गरेपछि आदिवासीमा विद्रोहको बीजारोपण भयो।

दश दिनसम्म विभिन्न जातिले आ-आफ्नो कुल परम्परा अनुरूप मान्दै आएको दशैँ पर्वहरूलाई हटाएर शरदको दशैँलाई राष्ट्रिय एकताको राष्ट्रिय पर्वको रूपमा सत्ताले राजनीतिक र धार्मिक आग्रहसहित अधि सा¬र्‍यो। पृथ्वी नारायण शाहले नेपाल एकीकरण गरेको इतिहासकारहरूले दावी गरे तापनि त्यो गोरखाविस्तार थियो भन्ने ठहर आदिवासीले गरे। हुन पनि गणतन्त्र आइसक्दा पनि गोरखाबाट काठमाडौँमा फूलपाती भित्र्याउने परम्परा कायम छ। गोरखाबाट फूलपाती भित्र्याएर टुडिखेलमा हातहतियारसहित बढाइँ गर्नुलाई गोरखा विस्तारको पदचिन्ह वा हुँकार पनि मान्न सकिन्छ।

नेपाल एकीकरणपछि गोरखालीहरूले अन्य तीन दशैँलाई हटाएर शरदकालीन दशैँलाई नेपाल एकीकरणको दिवसका रूपमा बडादशैँ मनाउने उर्दी जारी गरे। उक्त दशैँ पर्व लिम्बुवानमा मनाउन गोरखालीले स्थानीय सुब्बा सुभाङ्गीलाई आदेश दिए। गाउँमा दशैँ मनाएको सुनिश्चित गर्न दशैँमा मार काटेर रगतको पञ्जा छाप घरको मूलढोकामा हानेर राख्न भनियो। स्थानीय सुभाङ्गी सुब्बाले पनि दशैँ आफूले दशैँ मनाए र अरूलाई पनि दशैँ मान्ने उर्दि गरे। कसैकसैले मारको दिन कुखुराको टाउको काटेर ढोकामा टाँसेर दशैँ मनाएको जनाउ दिनेगर्दथे। (Tamang, 2023)

आदिवासी मगर आवाज अनुसार गोरखाली सैनिकले रातो टीकालाई विजयको प्रतीकका रूपमा विशेष महत्व दिएका थिए। १६०० सालतिर गोरखामा राजा मानसिँह खड्का मगर राज्य गर्दथे। द्रव्य शाहले उनलाई मारेर राज्य हत्याएपछि पराजित मगर राजाको रगतमा चामल

मुछेर द्रव्य शाहले गोरखालीका निधारमा टीका लगाइदिए। टीका लगाउन नमान्ने मगरहरूको त्यसबेला  हत्या गरियो। (Magar, 2021)

त्यसै गरी उन्नाइसौँ शताब्दीमा लिम्बुवान-गोरखाली सन्धि भएपछि लिम्बुवानमा दशैँ मनाए नमनाएको चियो गर्न गोरखालीले गाउँगाउँमा जोगीलाई जासुस खटाउने गर्दथे। दशैँमा मार काटेको चिन्हका आधारमा दशैँ नमान्नेलाई सजाय हुन्थ्यो। सोही क्रममा हिन्दु शासकले लादेको दशैँ नमान्दा १९३३ सालमा धनकुटामा रिद्मा अठपरे राई र राम्लिहाङ आठपहरिया राईलाई मृत्युदण्ड दिइयो। (Thapa, 2019)

पृथ्वी नारायण शाहले दिएको दिव्योपदेशमा नेपाललाई असली हिन्दुस्तान बनाउन खोजिएको छ, जुन कुरा आदिवासी भावना प्रतिकूल मानिन्छ। इसाई पादरीलाई उपत्यकाबाट निस्कासित गरेका पृथ्वीनारायणलाई इतिहासमा पश्चिमा विरोधी चित्रण गरिए तापनि आदिवासी लेखकले त्यसलाई पत्याएका छैनन्। किनभने शाहले वेलायती अधीनस्त भारतबाट हातहतियार बन्दुक किनेर ल्याएर नेपालमा छरिएका साना साना राज्यलाई गोरखा राज्यमा गाभेका थिए। सिन्धुलीमा एकपटक वेलायतीलाई हराए पनि बेलायती आक्रमण जारी थियो। तत्कालीन बेलायती स्वार्थ तिब्बत ब्यापारको बाटो खोलिदिने शर्तमा पृथ्वीनारायण शाहले बेलायतबाट थप आक्रमण नगरिने आश्वासन पाएका थिए भन्ने आदिवासी लेखकहरूको दावी छ। (Tamang, 2023)

यसकारण रातो टीका लगाएर दशैँ मनाउने चलन गोरखा विस्तारको द्योतक भएको र आफ्नो भूअधिकार खोसिएको रूपमा नेपालका आदिवासीले सम्झेका छन्। फलस्वरूप दशैँलाई संस्कृति वा परम्परा भनेर जतिसुकै भनिए पनि यो आदिवासीका लागि उपनिवेशजन्य राजनीतिक र धार्मिक पर्व हो।

यसैले दशैँलाई नेपालीको पर्व वा हिन्दुको पर्व भनेर जतिसुकै फुके पनि यस सम्बन्धी निर्माण गरिएका साहित्यमा घुसाइएका ब्यङ्ग्यार्थ र गोरखा विस्तारको पदचापले आदिवासी किरात लिम्बूका मनमा गढेका घाउले गर्दा आदिवासी समेटिन सकेको छैनन्। वैमनस्यताले उत्पन्न धमिलो पानीमा विदेशी स्वार्थको प्रवेश तथा धर्मान्तरणको प्रभावलाई नकार्न सकिन्न। यद्यपि, आदिवासीका कुण्ठा वा विद्रोहलाई बाहिरी तत्वबाट परिचालित परिघटना भएको आरोप लगाएर विषयलाई दबाउनु वा पन्छाँउनु भनेको एकप्रकारले दमन नै हो।

आदिवासीको शैव परम्परालाई आधार मानेर समग्र किरात लिम्बूलाई औपनिवेशजन्य हिन्दु धार्मिक छाता ओढाउन खोज्नु राजनीतिक वा रणनीतिक चाल मात्र हो। राष्ट्रिय एकताबीच उत्पन्न त्यस्ता तनावले नेपाल एकीकरण सही अर्थमा हुनदिँदैन।

दशैँलाई सकारात्मक कोणबाट हेर्न सकिन्छ। आजको युगमा अन्तरजातीय विवाह परम्परा बढेको अवस्था छ। घरभित्र विभिन्न सांस्कृतिक पृष्ठभूमिबाट मन मिलेर घर बसालेका छौँ। गोरखालीले दशैँलाई विजयत्सवका रूपमा मनाएको मन नपरेमा त्यसको विकल्पमा पितृको आशिर्वादका रूपमा मान्यजनबाट टीका लिन पनि त सकिन्छ। कुनै अन्नबाली पाकेमा न्वाँगी पूजा गरी तागेरानिङ्वाभूमाङको प्रसादका रूपमा टीका ग्रहण गर्न पनि सकिन्छ। यदि रातो टीकामा पुर्खाको रगतको छायाँ देखिए बिना रङ चामल टीका लगाउन सकिन्छ। किनभने कुनै समुदायले कुनै संस्कृतिलाई आफू अनुकूल ग्रहण गरेका अनगिन्ति उदाहरणहरू छन्। जस्तै तिहार पर्व किरात लिम्बूले बलिहाङ ताङनाम नामले लारिङ्गे नामलिङ्गे भन्दै मनाउँछन् भने गैर किरात लिम्बूले देउसी भैली भन्दै मनाउँछन्।

किरात लिम्बू संस्कृतिमा धाननाच छ। मुन्धुम, पालाम र वर्तमान अनुसन्धानले पनि किरात पुर्खाले धेरै अघिदेखि धान खेती गरेर धाननाच

चलाएका थिए। मानव सभ्यतारम्भमा चीनमा सुरू भएको धान खेतीलाई नेपालमा स्थापित गराउने किरात जाति भए तापनि धान नाचेर धानसितको नाता विश्वलाई देखाउने जाति लिम्बू नै हो। यसैले धान बाली पाकेपछि हामीले यो साल पनि धान फलायौँ भनेर न्वाँगी चढाएर निधारमा चामल टाँसेर दुनियाँलाई देखाउनु गौरवकै कुरा हो। यसले जीवन दर्शन पढाउँछ। यसरी दश दिन भव्य मनाइने दशैँ पर्वमा चामल टीकाको महत्व छ। दशैँलाई दश दिन मनाउन नभ्याए दिन घटाएर मनाउन सकिन्छ।

रैथाने पर्व हराउँदै गएको बेलामा देश परदेशमा छरिएका परिवारका सदस्यले परिवार भेट्ने मौका र आशिर्वाद थाप्ने अवसरलाई सकारात्मक दृष्टिले हेर्न सकिन्छ। ब्राम्हणवादी हिन्दूले संस्कृतिलाई धर्म र राजनीतिमा मिसाए तापनि आदिवासीका परम्परालाई जगेर्ना गर्ने ठाउँ छन्। दशैँलाई आफ्नै किसीमले ब्याख्या गर्दै मनाएमा धार्मिक सहिष्णुता पनि देखिन्छ।

आदिवासीका अस्तित्व र पहिचानका सवालमा राज्यपक्ष जिम्मेवार बन्नुपर्दछ। आदिवासीले पनि धार्मिक सहिष्णुता, राष्ट्रिय भावना र एकतालाई विर्सन हुँदैन।

## ६.९ आदिवासीको पहिचानमा चुनौती

किरात लिम्बू आफ्नो पहिचान स्थापित गर्न लालायित देखिन्छन्। पहिचानवादी अभियानले गोरखाली विस्तारवादको विरोध गर्दछ। अरूणपूर्वका लिम्बुवानसित गोरखालीले गरेको सम्झौताको कुरा उनीहरू उठाउँछन्। रैथाने भाषा र संस्कृतिमाथि दमन भएकोमा खबरदारी गर्दछन्। संघीयतामा जातीय राज्य हासिल हुन नसके पनि प्रदेन न १ लाई किरात वा किरात लिम्बुवान नामाकरण गराउन पहिचानवादी उद्यत देखिन्छन्। तर उनीहरू किन सफल हुनसकेनन् केही छलफल गरौँ।

प्रदेश न १ लाई किरात वा किरात लिम्बुवान बनाउने भन्ने सवाल यिनीहरूले उठाए पनि यसमा उनीहरू नै एकमत छैनन् वा उनीहरूले उठाउने आवाज विरोधाभाषपूर्ण छन्। त्यसैले माओवादी आन्दोलनले जातीय राज्य बनाउने कुरो उठाए पनि कार्यान्वयन गर्न सकेन। एमाले र नेपाली कांग्रेस जातीय राज्यको विपक्षमा उभिए। नेपाली राजनीति जातीय राज्यको पक्षमा गएन।

यस्तो अन्यौल वा तनाव भइरहनुमा धेरै कारण छन्। पहिलो कारण हो जनसंख्या। जनगणना २०२१ अनुसार लिम्बूको जनसंख्या ४१४७०४ अर्थात् १.४२ प्रतिशत छ। आदिवासी भए तापनि घट्दो क्रममा रहेको यति नगन्य लिम्बू जनसंख्याको आवाज करिव ९९ प्रतिशतलाई उपयुक्त वा सान्दर्भिक नलागेकोले आदिवासी पहिचानको आवाज निस्तेज बनेको हो। तुलनात्मक रूपमा किरात शब्दभित्र आदिवासी जनजाति समेटिने भएकाले यो जनसंख्याको ठूलो अनुपात हुन्छ। ऐतिहासिक आधारमा खस र किरात रक्तअनन्या जाति हुन्। आर्य पनि धार्मिक र सांस्कृतिक रूपमा किरात समुदायसित सम्बन्धित र परिचित रहेकाले सभ्यता र संस्कृतिका आधारमा उनीहरूलाई किरात शब्द बढी ग्राह्य लाग्नसक्छ। नामाकरण प्रारम्भिक चरणमा किरात प्रदेश नामाकरण हुने संभावना बढेको पनि थियो तर लिम्बुवान शब्द अघि सरेपछि सबै पक्ष बिच्किए। हाल ठुला दल नै जातीय पहिचानको विरूद्धमा उभिन पुगेका छन्।

प्रदेश सरकार दोस्रो पटक जननिर्वाचित हुँदा पनि यसले जनचाहनाअनुरूप काम गर्न सकेन। संघीय सरकार र स्थानीय सरकारबीच पुलको काम गर्न प्रदेश सरकार यसमा असफल छ। राजनीतिक कार्यकर्तालाई व्यवस्थापन गरेर राज्यको साधन श्रोत दोहन मात्र भएको जनगुनासो छ। फलस्वरूप जनताले प्रदेश सरकारको व्यवस्था हटाउन आवाज उठाउन थालेका छन्। त्यसैले पहिचानलाई राजनीतिमा मात्र सीमित राख्नु हुँदैन। यसलाई भाषिक, सांस्कृतिक र

कार्यक्षमताका रूपमा पनि देखाएर मन जितेर पहिचान स्थापित गर्नेतर्फ ध्यान जानुपर्दछ।

दोस्रो कारण आदिवासीका गतिविधि र भनाइले पनि यसमा शङ्का उपशङ्का उत्पन्न गरायो। २००७ साल र २०१५ सालमा आदिवासी किरात लिम्बूले आठराई क्षेत्रमा जातीय आतङ्क, लुटपाट मच्चाएर गाउँका ठूलाठालू गैरलिम्बूलाई गाउँनिकाला गरे। उनीहरू त्यसपछि झापा र मोरङ झरे। आठराईका कतिपय कुमाइँ हाल तराईमा जमेर बसेका छन्। उनीहरूले त्यो इतिहास भुलेका छैनन्।

२०६३ सालपछि संविधान नबनुन्जेलसम्मको कालखण्डमा पनि लिम्बुवान क्षेत्रमा केही उश्रृङ्खल मानिसहरूले ७ साल, १५ सालको पुनरावृत्तिको त्रास फैलाए। हिँसात्मक जातीय अभिव्यक्ति दिए र पुनरावृत्तीका केही गैरजिम्मेवार झिल्का उठाएका कुरा सामाजिक सञ्जालमा आएका थिए। फलस्वरूप लिम्बुवानमा बसोबास गर्ने गैरलिम्बू त्यसबेला चिन्तित र आतङ्कित बनेका थिए।

यो लेखक बाल्यकालमा कुमाइँ साथीसंग खेल्दाखेल्दै झगडा पर्दा लिम्बू भएकाले मलाई सातसाले डाका भनेर गाली गर्दथे। मलाई मात्र होइन खास गरी कुमाई जातिले लिम्बू जातिलाई गाली गर्नु परेमा 'चितुवा' त भै हाल्यो थप 'सातसाले, पन्द्रसाले डाका' भनी टाढैबाट सराप्दथे। यसबाट लिम्बूप्रति गैरलिम्बूमा कस्तो छाप रहेछ भन्ने थाहा हुन्छ।

२००७ साल, २०१५ सालमा पीडित समुदायका एक सदस्य आठराई जन्मेका केपी ओली हाल नेपालको ठूलो दल एमालेका नेता छन्। सायद विगतको पृष्ठभूमि सम्झेर एमालेका नेता खड्ग प्रसाद ओलीले सुरूदेखि नै जातीय राज्यको विरोध गरेका होलान्। त्यसै गरी नेपाली कांग्रेसका शेखर कोइराला पनि जातीय प्रदेशको विपक्षमा मुखर भएका छन्।

इतिहास खोतल्दा बीपी कोइराला पनि आदिवासी विद्रोहप्रति सशंकित रहेको थाहा पाइन्छ।

यस्ता घटनाक्रमलाई पहिचानको सन्दर्भमा मूल्याङ्कन गर्न सकिन्छ। यो बीपी, केपी, शेखरको व्यक्तिगत कुरो मात्र होइन। उनीहरूले त समसामयिक जनचेतना अनुरूप कुरा गरेका हुन्। घटनाक्रमभित्र लिम्बूप्रति समस्त गैरलिम्बूको दृष्टिकोण र रणनीति प्रतिविम्वित भएका छन्। विगतको इतिहास र वर्तमानका कतिपय गतिविधिले गर्दा लडाकु लिम्बू जातिको पहिचानवादी नारादेखि गैरलिम्बूहरू सशंकित बन्न पुगेका छन्। फलस्वरूप किरात लिम्बूलाई अनुकूल साइजमा राखिराख्न उनीहरू चाहन्छन्। यसलाई केवल नकारात्मक रूपमा मात्र लिन हुँदैन। आफ्ना कमी कमजोरीतर्फ पनि लिम्बू समुदायले मनन गर्नुपर्दछ।

पहिचानवादी किरात लिम्बू समुदायले हिन्दु धर्मको विरोध गर्दछन् यसमा केही तुक पनि होला। तर उनीहरूले इसाई, मुसलमान अतिक्रमणबारे केही बोल्दैनन्। आज धेरै मात्रामा लिम्बू समूहगत रूपमा इसाई बनेका छन्। गाउँगाउँमा चर्च बनेर आदिवासी लिम्बू संस्कृतिमा अतिक्रमण हुँदा पहिचानवादी किन चासो र चिन्ता व्यक्त गर्दैनन र केवल एकोहोरो हिन्दु वा किरात धर्मको विरूद्ध विषवमन गर्दछन्। कसैले मौलिक धर्मको वकालत गर्नु ठिक छ तर अरूको विरोध गर्नु सन्देहास्पद हुन्छ। हो, मानिस स्वैच्छाले जुनसुकै धर्ममा लाग्न पाउँछ। तर कसैलाई प्रलोभन वा करकापमा पारेर धर्मान्तरण गर्दा लिम्बू समुदाय किन चुइँक्क बोल्दैनन् अचम्म लाग्दछ। पहिचानविरोधीले लगाएको आरोप झैँ पहिचानको नारा र गतिविधि कतै प्रायोजित वा सुनियोजित पो हो कि भन्ने आशंका उठ्छ।

विदेशी गैरसरकारी संस्थाहरूले पहिचानवादीलाई उक्साएका छन् भन्ने आरोप लाग्ने गरेको छ। यसलाई पूर्णतः अस्वीकार गर्न सकिँदैन। किनभने पश्चिमेली मुलुकद्वारा प्रायोजित गैरसरकारी संस्थाहरूले

संसारभर आदिवासीलाई इसाई धर्मान्तरण गरेका छन्। संभवतः त्यसैले पहिचानविरोधी हिन्दुहरू आदिवासीका माग जायज हुँदाहुँदै पनि सशङ्कित बनेका हुन्। तथ्यांकमा पनि आदिवासी सजिलै इसाई जालोमा फसेका देखिन्छन्। मौलिक धर्म र संस्कृतिमा विचलन हुँदा पनि पहिचानवादीले विरोध नगर्नु कतै पश्चिमा गैरसरकारी संस्थाको नूनको प्रभाव त हैन भनेर मनमा जिज्ञासा उत्पन्न हुन्छ।

स्वदेशमा बसेर आफ्नो पहिचानबारे सिर्जनात्मक ढङ्गले बोल्नु, लेख्नु असल कुरा हो। विदेशमा गएर मलाई अब केहीले छुँदैन झैँ गरी नेपालका बारेमा भडकाउ भाषा बोल्नु राम्रो होइन। किनभने विदेशी भूमि र पराय सहयोगबाट आएको गणतान्त्रिक संघीय नेपालका सोझा नेपालीलाई आफूले परिवर्तन ल्याएको धाक दिनेहरू त वास्तवमा विदेशी दलाल र तिनका दास पो रहेछन् भनेर अहिले सबैले चाल पाएका छन्। नेपालका राजनीतिक दलहरूका विदेशी धोती खुस्के पनि लाजसरम पचाएर भ्रष्टचारलिप्त शासन गरिरहेका छन्। यस्ता कटु अनुभव प्राध्यापक शास्त्रदत्त पन्त, विद्वान भरत दाहालका युट्यूव अन्तरवार्तमा सुनिन्छन्।

पार्टीगत, गुटगत स्वार्थ हेर्ने राजनीतिले आदिवासीका पहिचानका सवाललाई स्वस्थ छलफल गर्नुको साटो भोटको राजनीति बनाइदिएको छ। जनतालाई विभाजित गरेर शासन गर भन्ने पश्चिमा सिद्धान्तको सिकार आज संघीय गणतन्त्र नेपाल र नेपाली जनता बनेका छन्।

पहिचान राम्रो कुरा हो यो सबैलाई चाहिन्छ। यसलाई हामीले एकीकृत रूपमा सकारात्मक र जिम्मेवार ढङ्गले बुझ्नुपर्दछ।

# ६.१० साँबा पहिचानमूलक संज्ञा

**पृष्ठभूमिः** नेपालमा विभिन्न जातजातिका थर छन्। किरात लिम्बूका थरहरूको अध्ययन गर्ने क्रममा थर लेखाइ र बोलाइमा भने एकरूपता छैनन्। साँबा थरधारीबाट एकरूपताका लागि गम्भीर चिन्ता र अभ्यास भएका छैनन्। लिम्बू जातिको एक थर साँबा, सांबा र साँवा जस्ता शब्दहरूको लेखाइ वा बोलाइका अर्थ के लाग्दछन् यो जान्न महत्त्वपूर्ण हुन्छ। लिम्बू जातिमा कुनै पनि थरहरूको प्रयोग तिनका सांस्कृतिक र ऐतिहासिक सन्दर्भहरू गाँसिएका हुन्छन् जुन बुझ्नु आवश्यक हुन्छ। साँबा-पहिचानमूलक-संज्ञाको अर्थ र महत्त्व गहिरो सांस्कृतिक, धार्मिक र सामाजिक संरचनासँग गाँसिएको छ। थरले लिम्बू समुदायको पहिचान मात्र हैन यसले सामाजिक हैसियत र राजनीतिक-सांस्कृतिक परम्परालाई प्रतिविम्वित गर्दछ। कुनै पनि थरको प्रयोगले परिवारको पृष्ठभूमि तथा ऐतिहासिक र सांस्कृतिक पहिचानलाई बताउँछ र त्यसलाई अक्षुर्ण राखेमा आफ्नो पहिचान पनि सुरक्षित राख्न मद्दत गर्दछ। (Subba, 1999)

साँबा थरले परिवारको उत्पत्ति, भौगोलिक आबदद्धता, धार्मिक विश्वास, र सांस्कृतिक पृष्ठभूमि प्रकट गर्दछ। "साँबा" विशेषगरी लिम्बू समुदायको थर मात्र नभएर यो उसको परिचय र पहिचान हो। किनभने लिम्बू जातिमा, "साँबा" नामले एक विशिष्ट सामाजिक भूमिका बहन गरेको जाति, सांस्कृतिक परम्परा, र पहिचान भएको वंश जनाउँछ। त्यसकारण साँबा थरको प्रयोगले उक्त परिवारको इतिहास, सामाजिक स्तर, प्रतिष्ठा, योग्यता र सांस्कृतिक योगदान दर्शाउँछ। यो थर विशेष रूपले किरात लिम्बू समाजको पुरानो परम्परागत संरचना र इतिहाससँग सम्बन्धित छ जसले लिम्बू संस्कार, परम्परा, ज्ञान र सामाजिक जिम्मेवारीको सम्झना दिलाउँछ। (Chemjong, 1966) साँबा थरका

व्यक्तिहरूले विशेष भूमिका रहेको, गोरखाली-लिम्बुवान युद्धमा सहिद भएको र कालान्तरमा निर्णायक भूमिका खेलेको गौरवमय इतिहास छ।

**संज्ञाभित्रको गहिराइः** साँबा र सांबा बीचको अन्तरलाई बुझ्दा लिम्बू समाजको गहिरो सांस्कृतिक र सामाजिक संरचनाको महत्त्वलाई बुझ्नुपर्दछ। साँबा लेखाइ वा बोलाइको प्रयोगले लिम्बू समुदायमा यिनीहरूको विशेष पहिचान र सामाजिक प्रतिष्ठा जनाउँछ। अर्कोतिर सांबा शब्द सामान्य शब्द र अर्थको रूपमा मात्र प्रयोग हुन्छ। लेखाइले दिने उच्चारण र ध्वनि प्रणालीको भिन्नताले नै लिम्बू समाजको सांस्कृतिक र सामाजिक इतिहास र संरचना प्रस्ट हुन्छ। लिम्बू जातिमा थरको प्रयोगले उनीहरूको मौलिक सांस्कृतिक परम्परा, सामाजिक संरचना, र पहिचानलाई सुरक्षित गर्दछ, फलस्वरूप थरसम्बन्धी मौलिक परम्पराले लिम्बू समुदायलाई विशिष्ट र समृद्ध बनाएको छ।

**समस्याकथनः** आज यो साँबा शब्दको हुर्मत लिने काम अरूहरूबाट कम तर स्वयम् साँबा थरधारीहरूबाट धेरै मात्रामा भएका छन्। धेरैजनाले यसलाई साँबा लेख्छन् तर कोही कोही यसलाई साँवा, सांबा, सांवा, सावा, साबा, सावाँ आदि लेख्दछन्। अंग्रेजीमा यो थरलाई धेरैले Samba लेख्दछन् भने कोही कोहीले यसलाई Sanba, Sanwa, Sawa, Saba आदि लेख्नेगरेका छन्। आफूले जानेर वा नजानेर जे लेखियो त्यसैलाई सही मान्ने र तथ्यहरूप्रति ध्यान नदिने बानी छलफलमा देखियो।

नेपाली ब्याकरण देखाउँदा साँबा त लिम्बू भाषा भएकाले त्यो लागु नहुने तर्क तेर्स्याउने पनि छन्। त्यसैले जसले जे लेख्यो कसैले नबोल्ने बोलेमा विवाद हुने भएकाले तैँ चुप मैँ चुप रहेका देखिन्छन्। के उसो भए यसरी नै चुप लागेर बस्ने हो त? हैन। चुप लागेर मिलेर बसेमा के हुन्छ? वर्तमान पिढी अलमलमा पर्दछन् र भावी सन्तती र इतिहासप्रति हाम्रो गम्भीरता नरहेको ठहरिन्छ जसले अपूरणीय क्षति पुग्दछ। पहिले कुरो

बुझेर आफूले सही लेखेपछि न अरूले पनि सोहीअनुसार बोलाउने वा लेखिदिने हो, त्यसो भएकाले यसमा साँबा जाति आफै नै सचेत र जिम्मेवार हुनुपर्दछ।

**अवसरः** साँबा लेखन वा उच्चारणमा शुद्धता र मौलिकताका विषयमा गम्भीर बहस हुनुपर्दथ्यो। नहुनु चिन्ताका विषय हो। धेरैलाई यसको अन्तर्यबारे थाहा छैन, यसबारे सोच्ने फुर्सद छैन। अनि धेरैलाई के पनि लागेको छ भने आफूले आफ्नो कागजपत्रमा एककिसिमको लेखियो अब किन टाउको दुखाउने भन्ने पनि छ। कोही पढेलेखेका मानिस पनि आफूले एकथरी लेखिहालियो त्यसैले जे लेखे पनि ठिक छ भनेर गैरजिम्मेवार बन्दछन्। फलस्वरूप यो थर त जे जसरी लेखे वा बोले पनि हुन्छ भन्ने मनस्थितिले प्रश्रय आज पश्रय पाएको छ। के हामीले यसरी नै मूकदर्शक बनेर बस्न मिल्छ त? साँबा इतिहाससित उक्त जातिको के सम्बन्ध छ भनेर मनन् गरेर मौलिक ध्वनि र लेखाइमा को अघि सर्ने? पक्कै पनि यसमा साँबा जाति नै अघि सर्नु पर्दछ।

**चुनौतिः** बहानाबाजी गर्नेका अनेक भनाइ सुनिन्छन्, एकथरी साँबा के भन्छन् भने आ! यो त हाम्रो लिम्बू भाषाको शब्द हो, यसको नेपाली भाषामा सही उच्चारण नै हुँदै हुँदैन रे। के त्यसो भए अब जे लेखे वा भने पनि हुन्छ त! दिनरात नेपाली भाषा बोल्ने देवनागरीमा लेख्ने दुनियाँ कामकाज त्यसैमा गर्ने धेरै छन्। लिम्बू भाषा र शब्दको निम्ति प्रतिकूल रहे तापनि नेपाली भाषामा प्रचलित ब्याकरणनुसार कसरी साँबा थर लेखाइ र बोलाइमा मौलिकता जोगाउने भनेर सोच्न हामीलाई कसले रोकेको छ? अन्य राजनीतिक अधिकारमा हामी जति सचेत छौँ यदि यसको सहि अभ्यासमा पनि ध्यान दिनुपर्दछ। थर लेखाइ र बोलाइमा देखाइने त्यस्ता हल्कापन र सोँचले साँबा थरको मौलिकतामा चोट पुगेको छ। हेर्दाहेर्दै साँबा लेखन र उच्चारण आज विकृत हुन पुगेको छ।

धेरै साँबा थरधारी महानुभवहरू अहिले आफ्नै गैरजिम्मेवारीपन र संचार माध्यमको प्रभावले सावा बनेका वा बनाइएका छन्। के आज प्रचलित अपभ्रंशले अरूलाई र भावी पुस्तालाई दिग्भ्रमित पार्दैन त! भोलि कुनै यस्तो साँबा पुस्ता वा समाज पनि हुनेछन् जसले हामी त सावा वा अरू कुनै हौँ भन्नेछन्। त्यसकारण अपभ्रंश हुने बाटो बेलैमा बन्द गर्नुपर्दछ। यसैले साँबा शब्दको सामाजिक सांस्कृतिक पृष्ठभूमि र भाषिक पुनरावलोकन गरेर अबको नयाँ पिढीँलाई सही जानकारी दिनु हामी सबैको कर्तव्य हो। एक पुस्ताले भुलवश लेखाइ वा उच्चारण बिगारे भन्दैमा त्यसैलाई ढाकछोप गरेर निरन्तरता दिनु आत्मघाती कदम हुनेछ। यसमा सम्बन्धित सबैले सोच्नुपर्दछ र पहलकदमी उठाउनु पर्दछ।

**लेखको उद्देश्यः** यस लेखमा म आज नेपाली वा देवनागरीमा साँबा शब्दको सही लेखन र उच्चारण कसरी गरिन्छ भन्ने बारेमा चर्चा गर्दैछु। यसमा नेपाली व्याकरण र साहित्यमा के कस्ता नियम र प्रचलन छन् त्यसबारे केलाउँदै छु। सोही प्रमाणका आधारमा कुन लेखाइ वा उच्चारण सही हो त्यसको निष्कर्ष पनि निकाल्दैछु। यसकारण यो थरका कुनै सदस्यले सित्तैमा जन्मजात रूपमा पाएँ भन्दैमा यसको अर्थ र गम्भीरतालाई बेवास्ता गर्नु भनेको इतिहास र पुर्खाप्रति अपमान गर्नु हो। यो लेखले साँबा, साँवा र सांबा लेखाइ र अर्थमा के फरक छ, र लिम्बू जातिको थर कुन सही हो भन्ने विषयमा चर्चा गर्नेछ।

**विवेचना**

**साँबा थर को सही उच्चारणः** म एक साँबा परिवारको एक सदस्य भएका नाताले यो शब्दको सही उच्चारणबारे जानकारी राख्दछु। यो साँबा थरबोधक शब्द अंग्रेजीको Samba ध्वनिनिकट बोलिन्छ वा सुनिन्छ। साँबा उच्चारण अनुनासिकता युक्त अर्थात् नाकेश्वरयुक्त (Nasalization) शब्द हो। यसको उच्चारण गर्दा श्वसन

(Breathing) को पनि प्रयोग हुन्छ। श्वसन भनेको अतिरिक्त श्वासको प्रयोग गर्नु हो।

अर्थात् यसको सही उच्चारण गर्दा स्वास लिएर लामोगरी फेरिन्छ। यसमा सा बोल्दा मुखबाट पूरा हावा निस्कन्छ र ओँठ खुला रहन्छन् साँ...अलि लामो समय श्वसन गरिन्छ।( सात, साप्रा बोल्दा स्वास छोटकरीमा सा उच्चारण गरे जस्तो होइन) साँ पछि आउने म् उच्चारण गर्दा ओम् को म् ध्वनि निकाले जस्तै लामो श्वसन गरिन्छ। र अन्तमा आउने बा ध्वनि तुलनात्मक रूपमा छोटो बोलिन्छ। (च्याङ्बा शब्दमा आउने बा ध्वनि जस्तै छोटो उच्चारण हुन्छ) यसरी साँबा उच्चारण गर्दा बा को अन्तसम्म नै ओँठ खुला र श्वसन बा मा पुगेर प्रतिध्वनित हुने गरी उच्चारण गरिन्छ।

यी सबै क्रिया शिरविन्दुले गर्दैन। चन्द्रविन्दुले मात्र माथिको उच्चारण प्रकृया प्रतिविम्वित गर्दछ। किनभने साँबा शब्दोच्चारण गर्दा नासिक्य ध्वनिको प्रवलता हुन्छ, म् ध्वनिमा ठहराव र बा ध्वनिमा झोक्का आउँछ। यो साँबा शब्द खाँबा, राँगा, साप, आँप जस्तोगरी विना श्वसन छरितो ढंगले एकै खेपमा बोलिन्दैन। साँबा शब्दभित्र पाइने नासिक्यता भित्र पाइन गम्भीर ठहराव र ध्वनिले यसको प्राचीनता, विशेषता र संस्कृतिलाई जनाउँछ। जुन आशय अन्य वैकल्पिक शब्दमा हुदैनन्। चन्द्रविन्दुबारे विद्वान लेखकहरूले ब्याकरणको आधारमा ब्याख्या गरिदिएका छन्। यसबारे तल छलफल हुनेछ। पहिले व र ब बारे प्रष्ट पारिहालौँ

**शब्द र अर्थ अनुसार ब र व को प्रयोगः** 'ब' र 'व' को प्रयोगलाई स्पष्ट पार्न विभिन्न नेपाली व्याकरण लेखकहरूले ध्वनिको सन्दर्भमा चर्चा गरेका छन्। मणि प्रकाश जोशीको "नेपाली भाषाको ध्वनिबिज्ञान" अनुसार, 'ब' र 'व' को प्रयोग उच्चारणको स्वरूप र शब्दको उत्पत्तिमा निर्भर रहन्छ। उनले 'ब' लाई ठोस ध्वनि (plosive) र 'व' लाई आधा

स्वर (semi-vowel) को रूपमा व्याख्या गरेका छन् (जोशी, 2015)। नेपाली भाषामा थरको रूपमा प्रयोग हुने "साँबा" मा ‘ब’ लेख्ने परम्परा छ, किनकि यसले ठोस ध्वनि उत्पन्न गर्छ, जुन थरमा विशेष सान्दर्भिक हुन्छ।

यसैगरी, गोविन्दराज भट्टराईले “नेपाली भाषाको वर्णमाला र लेखाइ” पुस्तकमा ‘व’ को प्रयोगलाई धेरैजसो संस्कृतमा आधारित शब्दहरूमा र ‘ब’ लाई नेपालीजडित अर्थात आगन्तुक आदिवासी शब्दहरूमा अधिक प्रयोग गरिएको पाइएको छ। उनी भन्छन् कि विशेष जातीय र सांस्कृतिक नामहरूमा ‘ब’ को प्रयोगले नेपाली भाषाको परम्परागत लेखाइलाई सशक्त बनाउँछ (भट्टराई, 2017)। समान तरिकाले, ‘ब’ र ‘व’ को प्रयोग प्रायः शब्दको उत्पत्ति र भाषिक धारा अनुसार फरक हुन्छ। संस्कृतमा आधारित शब्दहरू जस्तै ‘विश्व’ र ‘वाणी’ मा ‘व’ को प्रयोग गरिन्छ, जबकि नेपाली भाषामा ठोस ध्वनि उत्पन्न गर्ने शब्दहरूमा ‘ब’ लेखिन्छ। संस्कृतबाट प्रभावित नेपाली व्याकरणकारहरूले ‘व’ को प्रयोगलाई अधिक प्रचलनमा ल्याउन थालेपछि परम्परागत नेपाली शब्दहरूमा समेत ‘व’ देख्न पाइन्छ। तर जातीय नामहरूको प्रयोगमा ‘ब’ नै मान्य मानिन्छ (शर्मा, 2019)।

**साँबा थरमा ब को प्रयोगः** किरात लिम्बू समुदायको ‘साँबा’ थर मा ठोस उच्चारण आवश्यक पर्ने भएकोले ‘ब’ को प्रयोग नै सही हुन्छ। हेमराज कट्टेलले “नेपाली थरहरूको व्युत्पत्ति” नामक ग्रन्थमा विभिन्न थरहरूमा ठोस ध्वनिको प्रयोग हुने भएकाले लेखाइमा पनि जातीय पहिचानलाई मजबुत बनाउन ब लेखिने बताउँछन्। उनले विभिन्न जातीय समुदायका थरमा उच्चारित ध्वनिको प्रयोगको महत्त्व र त्यसले मौलिकता बताउने भएकाले बाचाउनु पर्नेमा जोड दिएका छन् (कट्टेल, 2020)।

**ब र व सम्बन्धी निष्कर्ष**

यो साँबा थरको अर्थ र परम्परागत मान्यतामा आधारित छ। भाषागत दृष्टिले थर जस्ता विशिष्ट नामहरूमा 'ब' लेख्नुपर्दछ। किनकि यसले ध्वनि स्थायित्व र मौलिक पहिचानलाई बलियो बनाउँछ। नेपाली व्याकरणका विभिन्न लेखकहरूले नेपाली भाषामा आगन्तुक शब्दलाई महत्पव दिएका द्निछन्। मौलिकता जोगाउने उपाय पनि देखाएका छन्। त्यसकार उल्लिखित व्याख्याका आधारमा 'साँबा' थर लेखाइ वा बोलाइमा 'ब' को प्रयोग नै सांस्कृतिक र भाषिक दृष्टिकोणले उपयुक्त मानिन्छ।

**साँबा र सांबा**

साँबा र सांबा थर लेखाइको फरक मुख्यत: ध्वनि र उच्चारणमा पर्दछन्। "साँबा" (साँ+बा) शब्दमा यहाँ चन्द्रविन्दु (ँ) को प्रयोग गरिएको छ। यसले नासिक्य ध्वनि (Nasalization) प्रदान गर्छ। यो ध्वनि विशेषतः लिम्बू भाषा र संस्कृतिमा महत्त्वपूर्ण मानिन्छ। यहाँ, "साँ" ले एक प्रकारको गहिरो ध्वनि निकाल्दछ, जसले कुनै जातिको पहिचान र थर विशेषलाई दर्शाउँछ (तिम्सिना, 2014)।

त्यसैगरी, "सांबा" (सां+बा) शब्दमा यहाँ शिरविन्दु (ं) को प्रयोग गरिएको छ, जसले शब्दको ध्वनि परिवर्तन गर्दछ र यो शब्दको अर्थलाई पनि प्रभावित गरिदिन्छ। शिरविन्दु चिन्ह कुनै शब्दमा प्रयोग गर्दा सामान्य उच्चारण र अर्थ मात्र दिन्छ। त्यसैले लिम्बू भाषामा सांबा प्रयोग कम छ। किनभने साँबा शब्दले जातीय सांस्कृतिक सन्दर्भमा बौद्धिक र ऐतिहासिक महत्व राख्छ (सिग्देल, 2018)।

**नासिक्य ध्वनिको सांस्कृतिक महत्त्वः** लिम्बू भाषामा चन्द्रविन्दु जस्ता नासिक्य (Nasalization) ध्वनिहरूको प्रयोगले शब्दलाई सांस्कृतिक गरिमा, सन्दर्भ र महत्त्व बढाउँछ। चन्द्रविन्दुको प्रयोगले शब्दको ध्वनि र अर्थमा नयाँ सामान्य आयाम थप्दछ। नेपाली र लिम्बू

भाषामा यस प्रकारका नासिक्य ध्वनि हुने शब्द लेखाइ वा बोलाइ छुट्याउन सजिलो छ किनभने यो सांस्कृतिक महत्त्वसित गाँसिएको हुन्छ। चन्द्रविन्दुको प्रयोगले शब्दलाई गहिरो र मौलिक अर्थ प्रदान गर्ने गर्दछ जसले सांस्कृतिक, धार्मिक, राजनीतिक र सामाजिक सन्दर्भलाई दर्शाउँछ। (Pokharel, 2005)

**सांबा र साँबा: सांस्कृतिक सन्दर्भः** लिम्बू जातिको साँबा थरको प्रयोग धार्मिक, सांस्कृतिक र ऐतिहासिक सन्दर्भसित गाँसिएको छ। साँबा शब्दको प्रयोगले थर विशेषलाई लिम्बू संस्कृतिमा एक विशिष्ट पहिचान दिन्छ। यो संज्ञा समाजको सामाजिक, राजनीतिक संरचना र परम्परासँग भ्जोडिएको छ। यस संज्ञाले विशेष जाति, परम्परा, र सामाजिक-सांस्कृतिक संरचनामा महत्त्वपूर्ण भूमिका बताउँछ (प्रजापति, 2016)। तसर्थ, सांबा शब्दको प्रयोग खास गरेर सामान्य शब्दको रूपमा मात्र हेरिन्छ, किनभने सांवा लेखाइ वा बोलाइले कुनै विशेष सामाजिक, ऐतिहासिक, सांस्कृतिक सन्दर्भलाई जनाउँदैन। यसकारण, साँबा शब्दको लेखाइ र प्रयोगले लिम्बू जातिको विशिष्ठ सामाजिक पहिचान र ऐतिहासिक पृष्ठभूमिलाई समेट्दछ (बिष्ट, 2020)।

**इतिहास र अभिलेखः** नेपाली भाषामा लेखिएका किरात लिम्बू साहित्य तथा इतिहासमा साँबा थरबारे पनि उल्लेख पाइन्छ। इमानसिङ चेमजोङले किरात जातिको इतिहास नामक पुस्तकभित्र लिम्बूको यो थरलाई नेपालीमा साँबा र अंग्रेजीमा Samba लेखेका छन्। (Chemjong, 1966; 2003 ) यसैगरी गोविन्द तुम्बाहाङले 'लिम्बू जातिको चिनारी' पुस्तकमा यो जातिलाई साँबा नै लेखेका छन्। (Tumbahang, 2011) अर्का लेखक इङनाम लिम्बूले पनि 'याक्थुङ पान'पुस्तक लिम्बू जातिको पङ्तीमा यस जातिलाई साँबा भनेर सम्बोधन गरिएको छ। (Ingnam, 2012) साँबा जातिहरूको वंशावली लेखनसम्बन्धी छाता संगठन साँबा मिङ्स्रा सङ्चुम्भोले पनि

आफ्नो विधान र मुखपत्रहरूमा साँबा नै लेखेको पाइन्छ। (Samba Mingsra, 2018)

लिम्बू जातिको थरको सही प्रयोग साँबा हो, जसमा चन्द्रविन्दुको प्रयोग गरिएको छ। यो सही लेखाइले लिम्बू भाषाको विशेषता र सांस्कृतिक पहिचानलाई स्पष्ट पार्दछ। विशेष गरी, "साँबा" लेखाइले लिम्बू जातिको थरको गहिराइ र यसका ऐतिहासिक सन्दर्भहरूको मर्म बुझ्न मद्दत गर्दछ। साँबा लेखाइले नासिक्य ध्वनि र उच्चारणमा विविधता ल्याउने कार्य गर्छ, जसले भाषा र संस्कृतिमा यसका महत्त्वपूर्ण पाटोहरूमा गहिराई पुर्याउँछ (खड्का, 2019)। लिम्बू समुदायमा यसको प्रयोगले थरको पहिचान र सांस्कृतिक धरोहरलाई जोगाउन मद्दत गर्दछ।

**निष्कर्षः** लिम्बू जातिको थरको सही प्रयोग साँबा हो, जसमा चन्द्रविन्दुको प्रयोग गरिएको छ। यो सही लेखाइले लिम्बू भाषाको विशेषता र सांस्कृतिक पहिचानलाई स्पष्ट पार्दछ। विशेष गरी, "साँबा" लेखाइले लिम्बू जातिको थरको गहिराइ र यसका ऐतिहासिक सन्दर्भहरूको मर्म बुझ्न मद्दत गर्दछ। साँबा लेखाइले नासिक्य ध्वनि र उच्चारणमा विविधता ल्याउने कार्य गर्छ, जसले भाषा र संस्कृतिमा यसका महत्त्वपूर्ण पाटोहरूमा गहिराई पुर्याउँछ (खड्का, 2019)। लिम्बू समुदायमा यसको प्रयोगले थरको पहिचान र सांस्कृतिक धरोहरलाई जोगाउन मद्दत गर्दछ।

साँबा, साँवा र सांबा लेखाइ र बोलाइका अर्थमा भिन्नता छन्। जातीय पहिचान र मौलिकता दर्शाउन शब्द-संरचनाको पृष्ठभूमि र यसा गम्भीरतालाई याद गरिन्छ। त्यसैकारण लिम्बू जातिको थरको सही लेखाइ र उच्चारण हुनु महत्त्वपूर्ण मानिन्छ। किरात लिम्बू सभ्यतामा "साँबा" एक प्राचीन शब्द हो। साँबा शब्दा वा जातिको इतिहास र गरिमालाई साँबा लेखन वा उच्चारणले नै बढी न्याय गर्दछ। यसको सही प्रयोगले लिम्बू संस्कृति र पहिचानलाई उजागर गर्छ। यसकारण 'साँबा'

लेखन वा उच्चारणले नै उनीहरूको इतिहास, परम्परा र मौलिकता प्रतिविम्वित गर्दछ।

## ६.११ थर बोलाइ लेखाइका अभ्यास

फयङ साँबा थर उच्चारण गर्दा वा बोलाइ लेखाइमा एकरुपता छैन। बोल्दा वा लेख्दा कतै फयङ, फेयङ, फैयङ भनेको वा लेखेको पाइन्छ।

ऐतराज फयङद्वारा संकलित तथा यो लेखकले प्रकाशित गरेको 'फेयङहाङ साँबा वंशावली' २०५६ मा 'फेयङ' थर उल्लिखित थियो। हामीले त्यसबेला फेयङ नै सही होला भन्ने ठानेका थियौँ। तर विभिन्न स्रोत सामग्री, शब्दकोश अध्ययन गर्दा त्यसमा सुधार गर्नु पर्ने अवस्था आयो।

फेयङका पुर्खा फेक्वान्छाङ र भाइ फेन्छाङ्वाको नाममा फे (एकार) भएकाले फेयङ सही होला भन्ने सोचाइ थियो। यसबारे लिम्बू साहित्य र स्रोत अध्ययन गरियो। नामकरणसम्बन्धी किरात लिम्बू जनबोली विचार गरियो। किरात लिम्बू शब्दभण्डार (शब्दकोश) मा फयङ शब्द खोजियो र अध्ययन विश्लेषण गरियो। यसरी फयङ शब्द अर्थपूर्ण ठहरिन गयो।

फयङ वर्णको व्युत्पत्ति केदाउँदा यो वर्ण मानिसले लगाउने पहिरन झल्लरीझैँ झुलेको वा हल्लिएको अर्थमा यो शब्द कहिएको पाइन्छ। फयङ साँबा किंवदन्तीले फयङ उपथर उनीहरूको लगाएको पहिरनको हल्लाइका आधारमा फयङ नाम रहेको बताउँछ। त्यसैले फयङ शब्दकोशको अर्थ र थर व्युत्पत्तिका आधार केलाउँदा फयङ भन्नु नै उचित ठहर्दछ।

हाल लिम्बू शब्दकोश प्रकाशित भएका छन्। शब्दकोशमा 'फयङ' शब्दले झल्लरी अर्थात् कपडाको हावामा हल्लिने भाग भन्ने जनाउँछ। फयङ किंवदन्तीमा फयङको लुगा लगाएर हिँड्दा 'फयङ–फयङ'

हल्लिएकाले यही अनुकरणात्मक शब्दबाट उसको परिचयवोधक संज्ञा फयङ थर रहेको हो। किरात लिम्बू शब्दकोशमा 'फयङ' शब्दले लगाइएको कपडाको हल्लिने कृया जनाउने 'झल्लरी' बुझाउने हुँदा फयङ शब्दले नै किंवदन्ती अनुरुपको अर्थ दिन्छ। अतः फयङ लिम्बू भाषातत्वले 'फयङ' ध्वनि उच्चारण गर्दा व्यतिरेकी (अर्थभेदक) भाषिक ध्वनि चिन्दछ। अतः लिम्बू समुदायद्वारा प्रयुक्त वर्ण 'फयङ' लेख्नु नै तर्कसम्मत हुन्छ।

आजभन्दा दुईदशक अघि प्रस्तुत फयङ उपथरलाई अन्य जातिका लिम्बूले कसरी बोल्छन् वा लेख्छन् लिखित प्रमाण थिएनन्। अर्थात् लिम्बू साहित्य, इतिहास तथा पुस्तकमा यो उपथरबारे जानकारी उपलब्ध थिएनन्। सन् २०११ र २०१२ मा प्रकाशित दुईजना किरात लिम्बू लेखकले यो उपथरलाई आफ्नो पुस्तकमा उल्लेख गरेका छन्। रत्नकुमार ईङनाम लिम्बू र गोविन्दबहादुर तुम्बाहाङले साँबा थरमा पाइने विभिन्न उपथर उल्लेख गरेका छन् र उनीहरूले साँबाको उपथर 'फयङ' उल्लेख गरेका छन्। (Ingnam, 2012; Tumbahang, 2011) उल्लिखित प्रमाणका आधारमा फयङ भन्नु वा बोल्नु नै उचित देखिन्छ।

अब फयङ शब्दलाई अंग्रेजी भाषामा कसरी लेख्ने भन्नेतर्फ लागौँ। फयङ थरलाई अंग्रेजी हिज्जे Phayang, Phyang, Fayang, Fyang लेख्ने गरेको पाइन्छ। तर शब्दोच्चारणसम्बन्धी विज्ञानले Phyang नै मौलिक ध्वनि निकट देखिन्छ। ती शब्दहरूलाई भाषाशास्त्रीय कसीमा तुलना हेर्दा यस्तो देखिन्छ।

**Phonetics and Transcription**

Phayang (Phayang) फायाङ (अंग्रेजी उच्चारण)
Fayang (Fayang) फायाङ (अंग्रेजी उच्चारण)
Fyang (Fyang) फायाङ (अंग्रेजी उच्चारण)
Phyang (Phyang) फ्यङ/फयङ (अंग्रेजी उच्चारण)
Reference: https://tophonetics.com

माथि 'Pha' /'Fa' दुवैको उच्चारण ‘फा’ सुनिन्छ । यद्यपि देवनागरी (संस्कृत) लिपिको 'फ' लाई अंग्रेजी वर्णमालामा 'Ph'अक्षरले संकेत गर्दछन्। (Cardona, 2013) माथि देखाइएको तालिकालाई तुलनात्मक विश्लेषण गर्दा फयङ संज्ञालाई अंग्रेजीमा (Phyang) लेख्दा बढी मौलिक ध्वनि निकट सुनिन्छ। यो पनि सही उच्चारणको हिसाबले शतप्रतिशत सही भने छैन। यद्यपि Phyang लाई उच्चारणका दृष्टिले तुलनात्मक रूपमा सुदृढ देखिन्छ।

'य' व्यञ्जन अन्तस्थ व्यञ्जन हो। यसमा 'य–अ', 'य–ए', 'य–आ' ध्वनि एकार्काका नजिक रहन्छन् । मौलितकताको दृष्टिले यहाँ 'य–अ' अन्तस्थ व्यञ्जन 'फय (अ)ङ' सही मानिन्छ। अंग्रेजीको 'Ph' ले माथि 'य(–आ)' अन्तस्थ व्यञ्जनको ध्वनि संकेत गर्दछ। त्यसैले अंग्रेजी होस् चाहे नेपालीमा लिम्बू शब्द वा ध्वनिको शतप्रतिशत न्याय सम्भव छैन। यद्यपि, के गर्दा बढी न्यायसंगत हुन्छ, भाषासम्मत, तर्कसम्मत हुन्छ त्यसलाई प्राथमिकता दिइन्छ। अतः यहाँ Phyang तुलनात्मक रूपमा मान्य हिज्जे ठहरिन्छ।

यस्तै अर्को शब्द छ साँबा। यसलाई साँबा, साम्बा, साँवा, सावा आदि बोल्ने वा लेख्ने चलन छ। पहिले यसलाई भाषाशास्त्रीय दृष्टिकोणले केलाऔँ।

**Phonetics and Transcription**

Samba (Sæmbə) साँबा/साम्बा (अंग्रेजी उच्चारण)
Saba (Saba) साँबा/साबा (अंग्रेजी उच्चारण)
Sanba (Sanba) सान्बा (अंग्रेजी उच्चारण)
Sawa (Sawa) सावा (अंग्रेजी उच्चारण)
Reference: www.toPhonetics.com

माथि तालिकामा अंग्रेजी भाषाको उच्चारणसम्बन्धी विज्ञानले साँबा थरलाई अंग्रेजी जिब्रोमा परीक्षण गर्दा Samba, Saba लेख्ने संकेत दिन्छ। तर Sanba (सान्बा), Sawa (सावा/ सव/ सवा) पढ्दा नेपाली,

लिम्बू दुवै उच्चारण प्रणालीले निकाल्ने ध्वनिसित अंग्रेजी हिज्जेले धारण गर्ने ध्वनि उति मेल खाँदैन। उसोभए Samba (साँबा/ साम्बा) र Saba (साबा/ सब) मध्ये कुन उचित होला? भन्ने सवाल उठ्छ।

साम्बा (Samba) शब्दका हिज्जे उच्चारण गर्दा साँबा/ साम्बा ध्वनि उत्पन्न हुन्छन्। उता Saba साबा हिज्जेद्वारा उत्पन्न ध्वनिमा नासिक्य ध्वनिको अभाव रहन्छ। यो शब्द साबा/सब ध्वनि निकट सुनिन्छन् । अतः Samba लाई नेपालीमा उच्चारण गर्दा उत्पन्न ध्वनि साम्बा र साँबा दुवै ध्वनिसाम्य (Homonym) सुनिन्छन्। तर Saba नेपाली उच्चारण हुँदा निकाल्ने ध्वनिमा भने मूलभूत भिन्नता सुनिन्छ। यो मौलिक लिम्बू उच्चारण भन्दा दूर सुनिन्छ। फलस्वरुप Saba उच्चारणले शब्दको मौलिक स्वरुप र अर्थमा विकृती निम्त्याउँछ।

अंग्रेजीमा Samba साम्बा/ साँबा हिज्जे र उच्चारण दुवै पक्षमा बलियो देखिन्छ। यो विकृत हुने सम्भावना कम छ । अतः यो लेखक नेपाली वा लिम्बू बोलीमा साँबा अंग्रेजीमा Samba हिज्जेलाई उपयुक्त ठान्दछ।

## ६.१२ साइनो तलमाथि परेको अवस्था

अध्ययनका क्रममा कतिपय बोलिने साइनो र वंशावलीले देखाएको साइनो तलमाथि परेको पाइयो। उदाहरणको लागि पुस्ताक्रम ३० पुस्ताबीच साइनो दाजुभाइ हुनुपर्नेमा काकाभतिज बोल्ने गरिन्छ। कतिपय पुस्ताक्रम ३० र ३१ बीच काका–भतिज वा तुम्बा (बडाबा)–भतिज नाता हुनुपर्नेमा दाजु–भाइ साइनो चलेको पाइन्छ।

वंशावलीको पहिलो खाका वि.सं. २०५६ सालमा प्रकाशित भएको थियो। त्यही नमुनाको आधारमा हाल वंशावली अद्यावधिक गर्ने काम सम्पन्न भएको हो। करिब दुई दशक अवधिमा फयङ साँबा समुदायले आ–आफ्नो नाम, पुर्खाको नाम तथा नाता आदि अध्ययन र विश्लेषण

गर्न पर्याप्त समय उपलब्ध थियो। सूचना अद्यावधिक गर्ने काममा प्रायः सबैको सहभागिता पनि थियो। जब सूचना सङ्ग्रहित, अद्यावधिक गरी टेबुलमा राखेर पुस्ताक्रम गणना गर्दा हाल बोलीचालीका कतिपय साइनो तलमाथि परेका देखिन्छन्।

वंशावलीमा पुस्ताक्रम मापनलाई विभिन्न कोणबाट कसी लगाएर अद्यावधिक गरिएको छ। अतः वंशावलीले खुट्याएको साइनोमा सबैले ध्यान दिनु जरूरी छ। उदाहरणका लागि धनकर्ण (पुस्ताक्रम २५) का सन्तान धर्मध्वज मुदेन (पुस्ताक्रम २६) का सन्तान र चासमुखी (२५) कौसिङका दरसन्तानविच साइनो तलमाथि भएका छन्। यस विषयमा ऐतराज फयङ र लालबहादुर फयङलाई सम्पर्क गर्दा कौसिङ (पुस्ताक्रम २६) का नाति याखा चन्द्रवीर (पुस्ताक्रम २८) असमबाट पुनः हाङपाङ आउँदा साइनो तलमाथि पर्न गएको तथ्य थाहा भयो। (L.B. Phyang, personal communication, June 8, 2024) चुँवाखोला वारी र पारी बस्ने फयङ साँबा परिवारको समूह अलग अलग समयमा हाङपाङ र बाहिर आउजाउ हुँदा साइनो पनि फरक हुन गएको हो।

यसै गरी धनकर्णका सन्तान तिलोकसिंह र धर्मध्वजका दरसन्तानबीच साइनो हाल फरक परेको अवस्था छ। यो कसरी भयो भनी जिज्ञासा भयो। वंशावली अध्ययन क्रममा पाँचथरका फयङ साँबा परिवारका सदस्यले के तथ्य सम्झाए भने अघि तिलोकसिंह ससुरालीको नाता पछ्याउँदै हाङपाङ गएका थिए। यसबाट के थाहा हुन्छ भने तिलोकसिंह र धर्मध्वज धनकर्णका सन्तान भए तापनि उनीहरू एकैचोटी हाङपाङ गएका होइन रहेछन्। तिलोकसिंह केही कालपछि मात्र हाङपाङ पुगेका थिए, फलस्वरुप कालान्तरमा भेट्दा साइनो तलमाथि हुन गएको हो।

एकै वंश भए तापनि विभिन्न कालखण्डमा दाजुभाइ छुटेर भेट हुँदा भुलवश साइनो तलमाथि पर्नजाँदा दीर्घकालीन रुपमा साइनो गडबड

भएको तथ्य पत्ता लाग्यो। जेहोस् यस्ता मानवीय भुललाई नयाँ पुस्ताले मुल्यांकन गरी सुधार गर्दै जानुपर्दछ।

# अध्याय ७ -उपसंहार

फयङ साँबा लगायत मानव जातिका वंशावलीलाई मानवशास्त्रीय फ्रेममा राखेर हेर्दा चाखलाग्दा देखिन्छन्। आनुवंशिक, ऐतिहासिक, भाषिक एवं वैज्ञानिक तथ्यका आधारमा आधुनिक मानिसका आमा करिव दुई लाख वर्षअघि अफ्रिका (कुशदेश) मा थिइन्। वैज्ञानिक मतानुसार त्यहाँबाटै उनका सन्तान होमोसेपियन्स अर्थात् आधुनिक मानिसका पूर्वज विश्वभर क्रमिक रूपमा फैलिए। (University of Cambridge, 2007)

भाषा विज्ञानका आधारमा फयङ साँबाका पुर्खा हालको पश्चिम एशिया, मध्य एशियामा पर्ने प्राचीन सुमेर र काशी क्षेत्रका सुमेर र काशी जाति थिए। कालान्तरमा तिनै सुमेर र काशीको मिश्रित वर्णको रूपमा किरात जाति उद्भव भएको पुरातत्वविद तथा भाषाविदहरूको भनाइ छ। (Pokhrel, 1998) किरात/असुर/देव नामले चिनिने ती जाति शैव र बोन (प्रकृति र आत्मा) मा आस्था राख्दथे। किरात र तिनका भ्राता द्रविड/भिल जातिको उपस्थिति मोहन्जोदडो हरप्पा सभ्यतामा भएको उत्खननबाट सिद्ध हुन्छ। त्यसैले किरात प्राचीन भारतवर्षका आदिवासी हुन्। (Thulung, 1985)

किरातको एक अर्को शाखा युरेसिया, चीन, तिब्बत, बर्मा भएर कालान्तरमा नेपाल प्रवेश गऱ्यो। किरात इतिहासअनुसार काशी सुमेर खाम्बोडबा किरात र ताङसाङबा, मुनाफेन मंगोल नश्लको रक्तमिश्रण सप्तसिन्धु हुँदै नेपालमा पनि भयो। (ibid) यसभित्र मंगोल समुदायको संख्या बढी मात्रामा भएकाले भोटबर्मेली भाषाको प्रभाव किरात समुदायमा पर्न गयो।

शैव तथा प्राचीन बोन धर्ममा आस्था राख्ने किरातमा ताङसाङ्बा (मंगोल) र मुनाफेन (चिनियाँ, भोटेली) समुदाय मिश्रण भएपछि किरात समुदायमा बौद्ध धर्म प्रसार भयो। यसरी प्राचीन शैव प्रभावित बोन आस्था भएका किरात समुदायमा लामावाद तथा बौद्ध बोन (युमा धर्म) मिश्रण भयो। (Dibeltulo, 2015; Explore Tibet, 2017; Bickel, 2000) फलस्वरूप किरात समुदायभित्र आज कोही सनातन शैव आस्था मान्दछन् भने कोही बौद्ध प्रभावित बोन अर्थात् युमा तथा मुन्धुममा विश्वास गर्दछन्।

मुन्धुम तथा वेदमा कल्पित मानव जातिको वंशावलीले करिव ५-६ हजार वर्ष यताका वंशवृक्ष मात्र देखाउँछन्। मुन्धुम तथा किरात इतिहासमा प्रवेशमार्गका आधारमा उत्तर र दक्षिणबाट नेपालमा आउने जाति आफूलाई क्रमसः लासागोत्रे र काशीगोत्रे भन्दछन्। (Chemjong, 2003c) भाषाविज्ञान, मुन्धुमअनुसार बिगतका काशी/ सुमेर/ साबायेत्हाङ एकै सन्तान भएको र तिनीहरू हावाहुरीभैँ फनफनी घुम्दै विभिन्न दिशामा छरिएको मुन्धुमी कथन छ।

विद्वानहरूले अघि सारेका प्राचीन मानव परिवारको संस्मरणकालीन पात्र स्वयम्भुव मनुबाट फयङ साँबाको प्राचीन वंशवृक्षलाई आरम्भ विन्दु मान्न सकिन्छ। स्वयंभुव मनु (१), उत्तान (२), उत्तानपाद (३), दक्ष/दक्षपुत्री (४५), यम, बसु (पत्नी), घर, रूद्र, द्रविड/ हुन/ रमण, ह्यतल/ किरात/ दास र मोग/ मंगोल उद्‌भव भए। त्यसपछि किरात र मंगोलबाट मुनाइङबा, किराताइङबा, सेन, यात्तुम्बा विकसित भए। (Thulung, 1985)

इतिहास र वंशावलीका आधारमा किरातबाट सेन र सेनबाट साँबा र राय/ राई हुँदै एक हाँगो फयङ साँबा राई र अर्को हाँगो फयङ साँबा लिम्बू (याक्थुङ) मा विकसित भएको देखिन्छ। साँबा परिवारमा हाल डेढ दर्जन बढी सदस्य छन्। साँबाबाट फयङ उद्‌भव भएपछि खम्बुवानमा

राई र लिम्बुवानमा लिम्बू जातिका रूपमा विलय भएर रहेका छन्। (Sen Chobegu, 2007)

फयङ साँबा उत्पत्ति मुन्धुमले उनीहरूका पुर्खा कोकोहाबराह अर्थात् कोशीबराह क्षेत्रबाट तम्बर खोला समातेर बँदेल सिकार गर्दै मेवाखोला पुगेका हुन्। यस आख्यानलाई हामी सांकेतिक पथमार्गका रूपमा लिन सक्छौँ। वंशावली अनुसार अभि सेनका पाँचौ पुस्ताका चुडामणि सेनका माइला सन्तान साँबासेरेङको धनकुटा प्रस्थान वि.स. १३८८ लाई आधार मान्ने हो भने साँबा थर उद्भव भएको करिव ७०० वर्ष भयो। (Yonghang, 2011) त्यसै गरी वंशवृक्षलाई आधार मान्ने हो भने साँबा थरबाट फयङ उपथर उद्भव भएको करिव ३०० वर्ष भयो। यसरी समग्रमा हेर्दा फयङ साँबा वंशावली २०८१ ले करिव ८०० वर्षको कालखण्ड समेट्दछ।

ऐतिहासिक तथ्य विश्लेषणका आधारमा कोशीबराह क्षेत्रबाट १४ औँ शताब्दी अर्थात् १३८८ सालमा पहाड उक्लेका सेन वंश ताप्लेजुङ जिल्लाको मेवाखोलामा १५ औँ शताब्दीमा पुगेका थिए। (ibid) त्यहाँ पुगेर आजभन्दा मोटामोटी ७०० वर्षअघि सेनबाट साँबा थर र अठारौँ शताब्दीमा अर्थात् करिव ३०० वर्षअघि फयङ उपथर धारण गरेका थिए। वंशावलीका आधारमा वि.स. १८०० देखि १८०७ सालसम्ममा मेवाखोलाबाट उल्लेख्य मात्रामा फयङ साँबा अन्यत्र हाँगा छुट्टिएर गएका थिए। त्यहाँबाट पुनः हाँगाबिँगा छुट्टिएर सिक्किम, भुटान, असम, बेलायत गए। (Subba, 2021)

हाल फयङ साँबा परिवार ताप्लेजुङ जिल्लाको मेवाखोलाबाट छुट्टिएर नेपालको ताप्लेजुङ (आठराई हाङपाङ), पाँचथर, संखुवासभा, सुनसरी, मोरङ, झापा र ललिपुर जिल्लामा बसोबास गर्दछन्। यिनीहरू भारतको सिक्किम, असम, नागाल्याण्डमा छन्। भुटान र बेलायतमा यिनीहरूको बसाइ छ। यिनीहरूको कूल जनसंख्या करिव ११०० रहेको छ। (ibid)

साँबा सङ्चुम्भोको मुखपत्रानुसार १८०० सालदेखि मेवाखोलाका साँबाहरू लिम्बुवान सेनालाई सघाउन चैनपुर संखुवासभा गए। लिम्बुवान-गोरखाली युद्धमा लिम्बुवान सैनिक सरदार काङसो राय (काङसोरे) लाई सघाउँदा युद्धमा शिपा र फात्ते नामका साँबाहरू सहिद भएका थिए। (Samba Mingsra, 2018) सोही क्रममा धनकर्ण (पुस्ताक्रम २५) का जेठी श्रीमति पट्टिका सन्तान हाङपाङ र कान्छी श्रीमति पट्टिका सन्तान संशुवासभामा फैलन पुगे। त्यसैगरी जसपाल (पुस्ताक्रम २५) का जेठी श्रीमतिका सन्तान सिक्किम र कान्छी श्रीमतिका संतान पाँथचरमा छुट्टिन पुगे।

मेवाखोलाबाट आठराई हाङपाङ छुट्टिएका फयङ साँबाहरूले वि.स. २०१६ मा मेवाखोलामा गएर आफ्नो किपट अधिकार पुनः लिएको इतिहास छ। (Phyang AR, 2056) त्यसपछि नापी नभइन्जेलसम्म हाङपाङमा नै मेवाखोलाको किपट बुझ्ने काम गरे। धर्मधोज (मुदेन पुस्ताक्रम २६) ले भोटबाट नुन ब्यापार गर्दा ओलाङचुङ गोलादेखि मैवादोभानसम्म बनाएका बास बस्ने चौरी बाँध्ने पाटीपौवाहरू बनाएका थिए। श्री ५ को सरकारले ओलाङचुङ लगायतका ठाउँमा भन्सार, पुलिस पोष्ट राख्नका तिनै पाटीपौवालाई उपयोग गर्न खोज्यो। धर्मधोजका दरसन्तान ऐतराज फयङ (पुस्ताक्रम २९) ले उक्त भवन र जग्गाको स्वामित्व तत्कालीन सरकारलाई निःशुल्क हस्तान्तरण गरिदिएका हुन्। (ibid)

फयङ साँबा जातिको परम्परागत मत शैव र बोन दर्शन हो। (Bickel, 2000) शैव वा थेबा दर्शनले सत्यको खोजी एवं प्रकृति पुकाराद्वारा शक्तिको पूजा गरी आशिर्वाद प्राप्त गरिन्छ। यिनीहरूमा ब्याप्त प्रकृति पूजा र आत्मा पूजामा बोन दर्शन झल्कन्छ। रूची र परिस्थितिवश ठाउँ अनुसार आजकल कतिपय फयङ साँबा हिन्दू, बौद्ध, ईसाई, मुसलमान धर्ममा लागेका छन्।

फयङ साँबाको ऐतिहासिक वंशवृक्ष खाका सेन वंशी अभि सेनबाट प्रारम्भ गर्न सकिन्छ। उनका छैटौँ पुस्ताका चुडामणि सेनका माइला सन्तान साँबासेरेङबाट साँबा उद्विकास भए। साँबासेरेङ/ सेत्छेने सेनिहाङ रायबाट क्रमसः यबोहाङ, कम्बाहाङ, साइगोहाङ/ साराताप्पा, साग्मोहाङ, यबोहाङ उद्‌भव भए। कतिपय वंशावलीले सेन वंशका दरसन्तान साराताप्पा मेवाखोला पुगेपछि मात्र साँबा वंशावली प्रारम्भ गरेका छन्।

फयङ साँबा वंशावलीलाई सेन वंशमा जोडिदिने बलियो आधार आख्यानात्मक तुङदुङ्गे मुन्धुम हो। फयङ साँबाले तुङदुङ्गे पूजालाई कुलपूजाको रूपमा मान्दछन्। स्मरण रहोस्, सेन चबेगु वंशावली अनुसार कोकाहा बराहा क्षेत्रमा रहेका लारा सेन, फोरा सेनलाई बराहामाङ अर्थात् बरहादेव भनिन्थ्यो। (Sen Chobegu, 2007) यिनै बराहामाङका कान्छा सन्तान तुङदुङ्गे भएको मुन्धुममा जनाइएको छ।

सिमाङगढ/सिम्रौनगढ, चौदण्डी, कोशीबराह क्षेत्रका सेन वंश परिस्थितिवश नेपालको पूर्वी पहाड उक्लिए। उनीहरूले मेवाखोलामा गढ बनाएर राई र लिम्बू जातिमा बिलय हुँदै साँबा र फयङ थर धारण गरे। (ibid) प्रस्तुत वंशावलीले किरात-सेन-राई-लिम्बू-साँबा-फयङ जातिको करिव ८ शताब्दीको समयरेखा मापन गरेको छ। अघि परदेश गएर नयाँ पुस्ता फर्कदा वा नौलो ठाउँमा नयाँ पुस्ताबीच भेट हुँदा साइनो केलाउन वा पुस्ताक्रम जाँच्नलाई लिखित वंशावलीको अभाव थियो।

फयङ साँबा वंशावली सिम्रौनगढबाट अर्थात् अभि सेनबाट वंशावली आरम्भ गर्न सकिने आधार अरू पनि छन्। सेन चबेगु वंशावली, योङहाङ वंशावलीमा सिम्रौनगढका सेन वंशसित साँबा लगायतका सेनेहाङहरूको सम्बन्ध देखिन्छ। (Sen Chobegu, 2007; Yonghang, 2011) उक्त दावीलाई पुष्टि गर्ने ऐतिहासिक आधार पनि छन्। गोरखाली र लिम्बुवानबीच वि.स.१८३१ मा भएको नुनपानी सन्धिमा गोरखाली

पक्षले लिम्बुवान पक्षका साँबा लगायतका काशीगोत्रे वंशावली अध्ययन गरेको थियो। अध्ययन गर्दा साँबाका पुर्खा र गोरखाली सेनका पुर्खा अघि एकै रहेको पत्ता लागेको थियो। फलस्वरूप गोरखाली र लिम्बुवानबीच ऐतिहासिक सम्झौता भएको थियो। (Chemjong, 1974; Chemjong, 2003a) यो महत्वपूर्ण ऐतिहासिक घटनाक्रमले साँबाको सम्बन्ध सिम्रौनगढका सेन वंशसित गाँसिएको देखाउँछ। त्यसैका आधारमा फयङ साँबा वंशावलीलाई सिम्रौनगढका सेन वंश अर्थात् अभि सेनसित जोडेर आरम्भ गरिएको हो।

यसो गरेमा फयङ साँबाको इतिहास नेपालको इतिहाससित जोडिन्छ। मानवशास्त्रीय दृष्टिले पनि यो बढी स्वीकार्य लाग्दछ। किरात इतिहासले हिजो साँबालाई चिन्दथ्यो। अब फयङ जातिलाई पनि वंशावलीमार्फत् नेपालको एक जातिका रूपमा इतिहासले मूलधारमा समेट्न सक्दछ। फराकिलो कालखण्डका ऐतिहासिक घटनाक्रमसित गाँसिएका कुनै पनि वंशावली नेपालको इतिहास अध्ययन गर्दा काम लाग्न सक्छन्। अतः फयङ साँबा वंशावली भविश्यमा पाठक, विद्यार्थी तथा अनुसन्धानकर्तालाई सहयोगी सामग्री बन्न सक्दछ।

अब यस जातिभित्रको एक ब्यवहारबारे पनि कुरा गरौँ। जानकारहरू सोही पृष्ठभूमिमा केही पुस्ताअघि साइनो तलमाथि भएर चलेको तथ्य प्रस्तुत वंशावली २०८१ मा देखिएको सही बताउँछन्। सिद्धान्ततः हाल प्रचलनमा तलमाथि परेका नातालाई वंशावलीले देखाए अनुरूप साइनो खेद्नु बाहेक अन्य विकल्प छैन।

यसबीच समझदारीमा बाल्यकालदेखि हालसम्म प्रचलित साइनो गडबड भएका पुस्ताको हकमा प्रचलित साइनो यथावत राख्नु नै सहज र ब्यवहारिक होला तर गडबड भएका नातालाई पछिल्ला पुस्तामा निरन्तरता दिनु हुदैन। यो वंशावलीको मर्म विपरित हुनजान्छ। नौला अनुहार वा नयाँ पुस्ताका फयङ साँबा दाजुभाइबीच पहिलो भेटमा

परिचयका क्रममा आपसी साइनो केलाउँदा वंशावलीलाई आधार मान्नुहोस्। हाल प्रचलित साइनोलाई समेत वंशावलीले देखाएको नातासित दाँजेर साइनो एकीन गर्नुहोस्। अब फयङ साँबा समाज आफैले लेखेको  वंशावलीलाई ब्यवहारमा उतार्ने दायित्व थपिएको छ।

सहभागितामूलक ढंगले तयार पारिएको यो वंशावली परम्परागत वंशावली लेखन भन्दा पृथक ढंग र दृष्टिकोणले लेखिएको छ। यसमा मानवशास्त्रीय दृष्टिकोण रहेको छ। यसभित्र स्वजातीय नामावलीका पुलिन्दा मात्र नभएर यस जातिका अग्रजहरूले नेपाली समाज र इतिहासमा खेलेको भूमिकाबारे ब्याख्या गरिदिएको छ। अँध्यारा छायामा परेका जातीय इतिहासलाई नेपाली इतिहासको धरातलमा उतारेको छ।

अध्ययनका नतिजा वा विश्लेषणसित सबैजना सहमत नहुन पनि सकिन्छ। किनभने सत्तामीमांसा (Ontology) ले हाम्रा ज्ञानमीमांसा (Epistemology) लाई थिचिदिएका छन्। मूल्यमीमांसा (Axiology) लाई भुलेर त्यसैका पछि हो मा हो गरेर कुदेका छौँ। अध्ययनकर्ताले लेख्नपूर्व निष्कर्ष निकाल्ने क्रममा धारणागत अध्ययन ढाँचा बनाउन सहयोगी सन्दर्भ सामग्री पुस्तकमा दिइएका छन्। म पाठकहरूलाई कुनै टिप्पणी वा समीक्षा गर्नअघि सर्वप्रथम पुस्तक अद्योपान्त पढिदिनहुन आग्रह गर्दछु। किनभने यहाँ देखाइएका र केलाइएका तथ्य, प्रमाण र विचारहरू एक अर्कासित गाँसिएका छन्। प्रसंगवश ती तथ्य र प्रमाण विभिन्न शिर्षकमा समेटिएका छन्। त्यसकारण एक ठाउँमा द्विविधा भएका कुरा अर्को शिर्षक वा प्रसंगमा खुल्न सक्छन्। यसरी समग्रमा पढिसकेपछि पनि थप जानकारी चाहिएमा पुस्तकमा दिइएको सन्दर्भ सामग्री अध्ययन गरिदिनहुन समेत आग्रह गर्दछु।

अन्तमा, लेखाइमा कतै भुलचुक हुनगए भरपर्दा प्रमाणसहित लेखकलाई सुझाव दिनुहोस्।  सिर्जनात्मक तथा सकारात्मक सुझाव

सबैबाट अपेक्षित छ। आगामी दिनमा मननयोग्य सुझावलाई समेटेर जानेछु।

# सन्दर्भसूची

Bhattarai, G. (2017). *Nepali Bhasako Varnamala Lekhai*. Kathmandu, Nepal Academy.

Bickel, B. (2000). New Horizons in Bon Studies, Bon Studies-2. Space, territory, and a stupa in Eastern Nepal: Exploring Himalayan themes and traces of Bon. The University of California and the University of Zurich, Berkeley, and Zurich.

Bista, G. (2020). Language and Social Structure in Nepal. Asian Journal of Language Studies, 15(4), 67-74.Cardona, G. (2013). Devanagari Writing System. Encyclopedia Britannica. Encyclopedia Britanica Inc, https://www.britannica.com/topic/Devanagari

Chemjong, I. S. (1974). *Kirat Kalin Bijayapurko Itihas*. (1st ed.) Kathmandu Nepal: Tribhuvan Univer¬sity, Kirat Language and Literature.

Chemjong, I. S. (2003a). *Kirat Mundhum* (Kiratko Veda) (3rd ed.). Lalitpur: Kirat Yakthung Chumlung.

Chemjong, I. S. (2003b). *Summary of Kirat Philosophy* (2nd ed.). Lalitpur: Kirat Yakthung Chumlung.

Chemjong, I.S. (2003). *Kirat Jatiko Itihas*. Lalitpur, Kirat Yakthung Chumlung.

Chemjong, I. S. (2003c). *History and Culture of the Kirat people.* (K. Y. C. Lalitpur, Ed.) (4th ed.). Lalitpur: Kirat Yakthung Chumlung.

Chongbang Samba, B. P. (2009). Chongbang Samba Bangsawali (1st ed.). Taplejung: Bangsawali Sankalan Samiti, Nepal.

Datta, B. (n.d.). *Bharat Barsa ka Brihad Itihas*. Delhi, India.

Danielou, A. & Gabin, J. (2003). *Shiva and the Primordial Tradition: From the Trans to the Science of Dream*, Inner Traditions Rochester, Vermont 05767.

Dibeltulo, M. (2015). The revival of Tantrism: Tibetan Buddhism and modern China. A dissertation submitted in partial fulfilment of the requirements for a Doctor of Philosophy at The University of Michigan.

Duan, C., Guan, X., & Chien, P. (1998). Relocation of Civilization Centre in Ancient China: Environmental Factors. Ambio, 7(27), 572–575.

Gurung, H. (2005). The Dynamics of Nepali Society and Culture. Kathmandu: Himal Books.Ingnam Limbu, R. K. (2012). *Yakthung Paan* (1st ed.). Limbuwan: Prakashan Samiti.

Joshi, M.P. (2025). *Nepali Bhasako DhwaniVigyan*. Kathmandu, Sajha Prakashan.

Jurmain, L.K. (2008). Introduction to Physical Anthropology 11th Edition (Eleventh Ed.) Lynn Kilgore, Wenda Trevathan and Russell L. Ciochon 2008 Tapa blanda – 1 Enero 2008

Kafle, M.P. (1983). Vishwako Itihas. Kathmandu, Tribhuvan University, Curriculum Development Centre.

Kalyanaraman, S. (2019). Indal Puja of Bhilala in India. Indal—Indar—Indra tracing the presence of Meluhha in the ancient Near East. Retrieved March 19, 2020, https://www.academia.edu/11922238/Indal_Puja_of_Bhilala_in_India.

Kandangwa, K.M.(1988). 'Chhahara' weekly, Year 10, Volume 2-25, Kathmandu.

Kattel, H. (2020). Nepali Tharharuko Vyutpatti, Jhapa, Mofasal Prakashan.

Khatiwada, S.P. (2013). Kaushiki Sanskriti. Sunsari,Nepal, Sri Jagatguru Pith Prachin Haridwar.

Khadka, D. (2019). The Linguistic Features of Limbu Language. International Journal of Linguistics, 11(3), 11-25.

Khatri, P. (1987). *Nepali Samaj ra Sanskriti*. Lalitpur, Nepal, Sajha Prakashan.

Laoti, Y. (2005). *Adibasi Limbu Jatiko Sanchipta Parichaya*. Lalitpur: Dil Bahadur Laoti.

Li, J. (2004). Ancient Black Chinese From East Africa. Trinicentre.com Fudan University Shanghai China. Retrieved on September 2, 2020, https://www.trinicenter.com/FirstChinese.htm

Limbu People (2021, May 30). In Wikipedia. Retrieved June 1, 2021, from https://ne.wikipedia.org/wiki/लिम्बु_जाति

Limbu Translation Service (2002). Limbu Translation Services -USA, Translation  Services. Retrieved January 15, 2021, https://www.translation-services-usa.com/languages/limbu.php

Logan, J.R. (1853). General Characters of the Burma-Tibetan, Gangetic, and Dravidian Languages. The Journal of the Indian Archipelago and Eastern Asia. Volume 7, January, pp105-137.

Mabohang Limbu, P. B., & Dhungel, B. N. (1990). Sanschipta Nepal Itihas (2nd ed.). Lalitpur: Kirat Prakashan tatha Abhilekh Kendra.

Magar, D. (2021, October 3). Magar Itihas [Facebook page] Facebook Retrieved Date of retrieval, from https://www.facebook.com/devdahamagar/photos/a.1521747298143897/3009954802656465/?type=3

Manandhar, S. (2020, October 23). Things you probably didn't know about Dashain. My Republica. https://myrepublica.nagariknetwork.com/news/things-you-probably-didn-t-know-about-dashain/

Mark, J. J. (2019). Bronze Age Collapse. Ancient History. https://www.ancient.eu/Bronze_Age_Collapse/

Oli, S. (1988). *Salakhala Nepali Kala. Kirateswar Sandesh*. (ed: Swami Prapannacharya), Jhapa Lakhanpur Sitapuri, Kirateswar Prakashan.

Pandey, R. (2023, Sept 5). When and How Bharat became India? Times of India TOU Education. https://timesofindia.indiatimes.com/education/news/when-and-how-did-bharat-became-india/articleshow/103384141.cms

Pandeya, S. (2013). *BharatVarshka Brihad Itihas*. New Delhi: Lokbharti Prakashan.

Pandian, A. (2019). Ancient Indian Religion Part 4. Ancient India APN.

Phyang Samba, A. R. (2056), ed. Subba, N.R., Phyang Samba Bamsawali. Subba, N.R.

Phyang Samba, M. H. (2019, August 20). Manuscript of Phayang Samba genealogy from Sankhuwasabha, Manuscript submitted for publication

Phyang Samba, R. B. (2019, Aug 20). Manuscript from Panchthar submitted for publication.

Phyang Samba, T. B. (2019, August 15). Manuscript from Dharan, Sunsari submitted for publication.

Phyang Samba, Y.B. (2019, August 15; 2024, June 17). Manuscript and updates submitted for publication.

Pokhrel, B. K. (1998). Khas Jatiko Itihas, Biratnagar, Udatta Anusandhan.

Pokharel, M. P. (2005). *Modern Nepali Grammar*. Kathmandu: Sajha Prakashan.

Prajapati, B. (2016). The Role of Linguistics in Cultural Identity." Nepalese Linguistic Society Review, 8(3), 78-84.

Samba Mingsra (2018). Samba MingshraSangchumbhoko Bidhan 2075, (2018) Mewakhola Taplejung.

Sanijit. (2011). Religious Development in Ancient India. In Ancient History Encyclopedia.

https://www.ancient.eu/article/230/religiousdevelopments-in-ancient-india/

Shastri, R. K. (1940). *Hindu Jatiko Utthan Ra Patan*, (ed.) Bal Krishna Shrestha, Kathmandu, Bansha Ratna Memorial Trust, 2007.

Sembu, U. (2014). Kipato Apaharan ra Pahichanko Andolan, Kathmandu, Adibasi Janjati Utthan Rastriya Pratisthan.

Sen Chobegu, B. B. (2007). Kirat Senehang Limbu Bansawali. Kirat Thegim Bansawali Prakashan Samiti.

Sharma, R. (2019). *Nepali Lekhai Ra Vyakaran.* Pokhara, Sahitya Sanga.

Sigdel, R. (2018). Limbu Language and Cultural Identity. *Journal of South Asian Studies,* 12(1), 23-30.

Sheoran, S. (2017). *The Science of Time and Timeline of World History*. E-Book, TheScienceOfTime.com

Sheth, & Khushboo. (2017). A Brief History of Chinese Civilization. WorldAtlas. https://www.worldat¬las.com/articles/a-brief-history-of-chinesecivilization.html

Shrestha, S. K. (1985). Limbuwanko Aitihasik Adhyayan. Dhankutta: Ganga Devi Shrestha.

Subba, N.R. (2022). The Philosophical Analogy of the Saksak Mundhum to Greek Mythology of Genesis Man's Ages and Its Allegorical Notation, IAR Journal of Humanities and Social Science, 3(3):24-29.

Subba, N.R. (2021). Kirat Limbu Sanskriti- Manavsastriya Bivechana, Kathmandu, Ajambari Prakashan.

Subba, T. B. (1999). *Politics of Culture*: A Study of Three Kirata Communities in the Eastern Himalayas*. Oxford University Press.

Tamang, S. (2023, October 13). Adibasi Janajati ra Dashain Parva [Video]. Youtube.

https://www.youtube.com/watch?v=a_iG4Tixd7Y&list=PPSV

The New Biblical Atlas and Scripture Gazetteer. (1860). The Religious Tract Society London. London, UK.

Thulung, N. M. (1985). Kiratko Nalibeli (1st ed.). Biratnagar: Angur Kandangwa, Biratnagar.

Timsina, A. (2014). Nepali Phonetics and Phonology: A Study. *Journal of Linguistics,* 10(2), 45-56.

Tumbahang, G. B. (2011). *Limbu Jatiko Chinari.* Kathmandu: Adibasi Janajati Utthan Rastriya Pratisthan and Kirat Yakthung Chumlung.

University of Cambridge (2007). New Research Confirms 'Out Of Africa' Theory Of Human Evolution. Science Daily, https://www.sciencdaily.com/releases/2007/05/070509161829.htm

Upadhyay Regmi, C.M.(1990). Nepali Bhasako Utpatti (4th ed.). Kathmandu, Sajha Prakashan.

Wilson, E. O. (1975). Sociobiology: The new synthesis. Cambridge, MA: Belknap.

Yonghang, B. B. (2011). Yonghang Bangsawali. (B. R. Subba, Ed.) (1st ed.). Ilam.

**प्रस्तुत विषयसंग संबन्धित लेखकका प्रकाशित अनुसन्धानमूलक लेखहरू–**

1. Review of ‘Madhes’ Definition Found in the Nepal Academy Dictionary. Global Journal of Research in Humanities & Cultural Studies: 2 pp. 119-123 (4).
2. The Philosophical Analogy of the Saksak Mundhum to Greek Mythology of Genesis Man's Ages and Its Allegorical Notation. IAR Journal of Humanities and Social Sciences; 2022; 3(3): 24-29.
3. A Critical Review of the Evolution of Language Families in Nepal. Global Journal of Research in Humanities & Cultural Studies, Volume 02| Issue 02 | March-April | 2022
4. An Analysis of the Kirat Limbu Traditional Beliefs and Culture. Global Journal of Research in Humanities & Cultural Studies, Volume 02| Issue 01 | Jan - Feb | 2022
5. Tungdunge Mundhum Establishes a Link Between the Sen and the Samba Dynasties. IAR Journal of Humanities and Social Sciences; 2022; 3(1): 1-10.
6. The Subba Surname Attributes to the Kirat Legacy. IAR Journal of Humanities and Social Sciences; 2021; 2(6): 24-29.
7. Mewa Khola Toponym is a Historical Document, and Tampering With it Shows Fanaticism. IAR Journal of Humanities and Social Sciences; 2021;2(5): 1-6.
8. Tungdunge and Dhangdhange are Homonyms that Represent Limbu and Dhimal's Relationship. IAR Journal of Humanities and Social Sciences; ; 2021; 2(4): 44-51.
9. Ethnic Identity and Expansion in Kirat Samba Phyang. IAR Journal of Humanities and Social Sciences; 2021; 2(4): 1-10.

10. Kirat, Rai, and Limbu Are Somewhat Perplexed By The Vast Array Of Ethnic Identities. IAR Journal of Humanities and Social Sciences; 2021; 2(3): 31-40.
11. An Overview of the Association Between the Myths and Proof of Lepmuhang Mundhum and Matsya Purana. Journal of Global Literacies, Technologies, and Emerging PedagogiesVolume 5, Issue 2, November 2019, pp. 905-921.
12. Culture and Health: The Unifying Aspects of Cultures [SECTION] TRANS. INST-Internet-Journal for the Humanities, INST-Conférence 7.-9.11.2003
13. An Analysis of the Kirat Limbu Traditional Beliefs and Culture. Global Journal of Research in Humanities & Cultural Studies, Volume 02| Issue 01 | Jan - Feb | 2022.
14. A Critical Review of Evolution of Language Families in Nepal. Global Journal of Research in Humanities & Cultural Studies. Volume 02| Issue 02 | March-April | 2022.
15. Evolving Kirat: Negotiating Identity Across Time and Space. Journal of Emerging Technologies and Innovative Research. Volume 10, Issue 12, 2023.
16. Exploring the Kirat Language Family From AncientEchoes to Modern Voices. International Journal of Innovative Science and Research Technology. Volume 9, Issue 1, January – 2024.
17. Exploring the Kirat Language Family From Ancient Echoes to Modern Voices. International Journal of Innovative Science and Research Technology. Volume 9, Issue 1, January –2024.

ORCID: https://orcid.org/0000-0001-5700-2179
https://www.researchgate.net/profile/Nawa-Subba
https://independent.academia.edu/DrNawaRajSubba

# अनुसूची १ – तथ्यांक र पुस्ताक्रम

| Generation | ID No. | Name (Generation) | Sex | Father's Name and his | ID No. | Place |
|---|---|---|---|---|---|---|
| 1 | 1 | Abhi Sen (G1) | M | Sen | | Simraungadh |
| 2 | 2 | Padam Sen (G2) | M | Abhi Sen | 1 | Simraungadh |
| 3 | 3 | Lara Sen (G3) | M | Padam Sen | 2 | Simraungadh |
| 4 | 4 | Phora Sen (G4) | M | Lara Sen | 3 | Chaudandi |
| 5 | 5 | Chudamani Sen (G5) | M | Phora Sen | 4 | Chaudandi |
| 6 | 6 | Senehang (G6) | M | Chudamani Sen (G5) | 5 | Dhankuta |
| 6 | 7 | SambaSereng (G6) | M | Chudamani Sen (G5) | 5 | Dhankuta |
| 6 | 8 | Surad Sen (G6) | M | Chudamani Sen (G5) | 5 | Dhankuta |
| 6 | 9 | Mani Sen (G6) | M | Chudamani Sen (G5) | 5 | Dhankuta |
| 7 | 10 | Yabohang (G7) | M | SambaSereng (G6) | 7 | Panchthar |
| 8 | 11 | Kambahang (G8) | M | Yabohang (G7) | 10 | Panchthar |
| 9 | 12 | Saratappa (G9) | M | Kambahang (G8) | 11 | Mewa Khola |
| 10 | 13 | Sagmohang (G10) | M | Saratappa (G9) | 12 | Mewa Khola |
| 11 | 14 | Yabohang (G11) | M | Sagmohang (G10) | 13 | Mewa Khola |
| 12 | 15 | Kembuhang (G12) | M | Yabohang (G11) | 14 | Mewa Khola |
| 13 | 16 | Pomuhang (G13) | M | Kembuhang (G12) | 15 | Mewa Khola |
| 14 | 17 | Thapochang (G14) | M | Pomuhang (G13) | 16 | Mewa Khola |
| 15 | 18 | Haiba (G15) | M | Thapochang (G14) | 17 | Mewa Khola |
| 16 | 19 | Kembahang (G16) | M | Haiba (G15) | 18 | Mewa Khola |
| 17 | 20 | Kesangnahang (G17) | M | Kembahang (G16) | 19 | Mewa Khola |
| 18 | 21 | Phembunhang (G18) | M | Kesangnahang (G17) | 20 | Mewa Khola |
| 19 | 22 | Samsak (G19) | M | Phembunhang (G18) | 21 | Mewa Khola |
| 19 | 23 | Ladiphung (G19) | M | Phembunhang (G18) | 21 | Mewa Khola |
| 20 | 24 | Sormu (G20) | M | Samsak (G19) | 22 | Mewa Khola |
| 20 | 25 | Phekwanchang (G20) | M | Samsak (G19) | 22 | Mewa Khola |
| 20 | 26 | Senihang (G20) | M | Samsak (G19) | 22 | Mewa Khola |
| 20 | 27 | Muden (G20) | M | Ladiphung (G19) | 23 | Mewa Khola |
| 21 | 28 | Chongbang (21) | M | Sormu (20) | 24 | Mewa Khola |
| 21 | 29 | Lunghimba (21) | M | Phekwanchang (20) | 25 | Mewa Khola |
| 21 | 30 | Phenchangba (21) | M | Phekwanchang (20) | 25 | Mewa Khola |
| 21 | 31 | Phyang (21) | M | Phekwanchang (20) | 25 | Mewa Khola |
| 21 | 32 | Koidangba (21) | M | Phekwanchang (20) | 25 | Mewa Khola |
| 21 | 33 | Mikkendang (21) | M | Senihang (20) | 26 | Mewa Khola |
| 22 | 34 | Tumyahang Tya (G22) | M | Phyang (G21) | 31 | Mewa Khola |
| 22 | 35 | Tumyahang Hiri (G22) | M | Phyang (G21) | 31 | Mewa Khola |
| 23 | 36 | Chanuwa (G23) | M | Tumyahang Tya (G22) | 34 | Mewa Khola |
| 23 | 37 | Saranda (G23) | M | Tumyahang Hiri (G22) | 35 | Mewa Khola |
| 23 | 38 | Yaranda (G23) | M | Tumyahang Hiri (G22) | 35 | Mewa Khola |
| 23 | 39 | Yubanda (G23) | M | Tumyahang Hiri (G22) | 35 | Mewa Khola |
| 24 | 40 | Panchakanda (G24) | M | Chanuwa (G23) | 36 | Mewa Khola |
| 24 | 41 | Piyusing (G24) | M | Saranda (G23) | 37 | Mewa Khola |
| 24 | 42 | Sahiwal (G24) | M | Yubanda (G23) | 39 | Mewa Khola |
| 25 | 43 | Dhanakarna (G25) | M | Panchakanda (G24) | 41 | Hangpang/SSa |
| 25 | 44 | Chasmukhi (G25) | M | Panchakanda (G24) | 41 | Hangpang |
| 25 | 45 | Jaspal (G25) | M | Sahiwal (G24) | 42 | Panchthar/Sikki |
| 25 | 46 | Iruhang (G25) | M | Sahiwal (G24) | 42 | Hangpang |
| 26 | 47 | Dhanaraj (G26) | M | Dhanakarna (G25) | 43 | Hangpang |
| 26 | 48 | Tiloksing (G26) | M | Dhanakarna (G25) | 43 | Hangpang |
| 26 | 49 | Dharmadhoj (G26) | M | Dhanakarna (G25) | 43 | Hangpang |
| 26 | 50 | Dharmabir (G26) | M | Dhanakarna (G25) | 43 | Hangpang |

| Generation | ID No. | Name (Generation) | Sex | Father's Name and his | ID No. | Place |
|---|---|---|---|---|---|---|
| 26 | 51 | Kausing (G26) | M | Chasmukhi (G25) | 44 | Hangpang |
| 26 | 52 | Panchananda (G26) | M | Iruhang (G25) | 46 | Hangpang |
| 26 | 53 | Rahaman (G26) | M | Iruhang (G25) | 46 | Hangpang |
| 26 | 54 | Dhanpati (G26) | M | Jaspal (G25) | 45 | Panchthar |
| 26 | 55 | Sahananda (G26) | M | Jaspal (G25) | 45 | Panchthar |
| 26 | 56 | Damber Bdr (G26) | M | Jaspal (G25) | 45 | Panchthar |
| 26 | 57 | Nar Bir (G26) | M | Jaspal (G25) | 45 | Panchthar |
| 26 | 58 | BhuvanSing (G26) | M | Jaspal (G25) | 45 | Panchthar |
| 27 | 59 | Mani Raj (G27) | M | Dhanpati (G26) | 54 | Hangpang |
| 27 | 60 | Makarbrak (G27) | M | Panchananda (G26) | 52 | Hangpang |
| 27 | 61 | Diplal (G27) | M | Rahaman (G26) | 53 | Hangpang |
| 28 | 62 | Suhansingh (G28) | M | Mani Raj (G27) | 59 | Hangpang |
| 28 | 63 | Bijay (G28) | M | Diplal (G27) | 61 | Hangpang |
| 28 | 64 | Binod (G28) | M | Diplal (G27) | 61 | Hangpang |
| 28 | 65 | Sajan (G28) | M | Diplal (G27) | 61 | Hangpang |
| 29 | 66 | Esking (G29) | M | Binod (G28) | 64 | Hangpang |
| 25 | 67 | Dharmajaya (G25) | M | Piyusing (G24) | 40 | Mewa Khola |
| 25 | 68 | Hanskrit (G25) | M | Piyusing (G24) | 40 | Mewa Khola |
| 25 | 69 | Narebe (G25) | M | Piyusing (G24) | 40 | Mewa Khola |
| 26 | 70 | Dahangrup (G26) | M | Dharmajaya (G25) | 67 | Mewa Khola |
| 26 | 71 | Jayrup (G26) | M | Dharmajaya (G25) | 67 | Mewa Khola |
| 26 | 72 | Mukhalsing (G26) | M | Dharmajaya (G25) | 67 | Mewa Khola |
| 26 | 73 | Narebu (G26) | M | Dharmajaya (G25) | 67 | Mewa Khola |
| 27 | 74 | Ashikdhoj (G27) | M | Dahangrup (G26) | 70 | Mewa Khola |
| 27 | 75 | Pahanglung (G27) | M | Jayrup (G26) | 71 | Mewa Khola |
| 27 | 76 | Man Bahadur (G27) | M | Mukhalsing (G26) | 72 | Mewa Khola |
| 27 | 77 | ChachaBir (G27) | M | Mukhalsing (G26) | 72 | Mewa Khola |
| 28 | 78 | Missing (G28) | M | Pahanglung (G27) | 75 | Mewa Khola |
| 28 | 79 | SriNanda (G28) | M | Pahanglung (G27) | 75 | Mewa Khola |
| 28 | 80 | Died (G28) | M | Pahanglung (G27) | 75 | Mewa Khola |
| 28 | 81 | Hang Bdr. (G28) | M | Pahanglung (G27) | 75 | Mewa Khola |
| 28 | 82 | Mangal Bdr.(G28) | M | Pahanglung (G27) | 75 | Mewa Khola |
| 29 | 83 | Infertile (G29) | M | SriNanda (G28) | 79 | Mewa Khola |
| 29 | 84 | DhanHang (G29) | M | SriNanda (G28) | 79 | Mewa Khola |
| 29 | 85 | Budhlal (G29) | M | SriNanda (G28) | 79 | Mewa Khola |
| 29 | 86 | San Bahadur (G29) | M | Mangal Bdr. (G28) | 82 | Mewa Khola |
| 29 | 87 | Sher Bahadur (G29) | M | Mangal Bdr.(G28) | 82 | Mewa Khola |
| 29 | 88 | Chandra Bdr. (G29) | M | Mangal Bdr.(G28) | 82 | Mewa Khola |
| 30 | 89 | Suryaman (G30) | M | DhanHang (G29) | 84 | Mewa Khola |
| 30 | 90 | Aita Bdr. (G30) | M | DhanHang (G29) | 84 | Mewa Khola |
| 30 | 91 | MangalSing (G30) | M | DhanHang (G29) | 84 | Mewa Khola |
| 30 | 92 | Died (G30) | M | DhanHang (G29) | 84 | Mewa Khola |
| 30 | 93 | MohanChandra (G30) | M | DhanHang (G29) | 84 | Mewa Khola |
| 30 | 94 | Son-A (G30) | M | Chandra Bdr. (G29) | 88 | Mewa Khola |
| 30 | 95 | Son-B (G30) | M | Chandra Bdr. (G29) | 88 | Mewa Khola |
| 30 | 96 | Son-C (G30) | M | Chandra Bdr. (G29) | 88 | Mewa Khola |
| 30 | 97 | Sita (D) (G30) | F | Chandra Bdr. (G29) | 88 | Mewa Khola |
| 30 | 98 | Nasanhangma (D) (G30) | F | Chandra Bdr. (G29) | 88 | Mewa Khola |
| 30 | 99 | Hem Chandra (G30) | M | San Bdr. (G29) | 86 | Mewa Khola |
| 30 | 100 | Subhash Chandra (G30) | M | San Bdr. (G29) | 86 | Mewa Khola |

